# प्रेस कमिशनको रिपोर्ट २०१५

**भुमिका**

२००७ सालभन्दा पहिले समाचारपत्रको नाममा सरकारद्वारा संचालित "गोरखापत्र" बाहेक अरू केही देख्न नपाएको हाम्रो देशमा ८ वर्ष भित्र प्रेस (पत्रपत्रिकाहरू)को यति प्रगति भई प्रेस कमिशन पनि गठन हुनु सन्तोषको कुरा छ। देशमा स्वच्छ पत्रकारिताको विकास गर्ने कार्यमा सरकारमा रिपोर्ट तथा सुझाव पेश गर्न २०।१४।७।२० को सरकारको निर्णय अनुसार प्रेस समिति गठन भएकोमा त्यस समितिबाट केही काम हुन नसकेको र यस्तो कमिशनमा न्याय पालिकातर्फका न्यायाधीश अध्यक्ष रहनु राम्रो भन्ने महसूस गरी सरकारद्वारा प्रेस कमिशन पुनर्गठन गर्ने निर्णय २०१४।१०।२६ मा सूचित भई यस कमिशन गठन भएको हो। नेपाली पत्रकारिताको इतिहासमा सर्वप्रथम गठन भएको यस कमिशनले २०१४।११।१२ को दिनदेखि काम थाली लगभग साढे तीन महिनाको सानो अवधिमा रिपोर्ट पेश गर्न परेको र कमिशनलाई आफ्नो कार्य गर्न तथ्याङ्क संकलन देखि लिएर सारा आधार आफैले तयार गर्नु पर्दा यसमा कैयन् त्रुटीहरू रहन जानु पनि ज्यादैनै सम्भव छ। तैपनि स्वच्छ तथा स्वस्थ पत्रकारिताको विकास सम्बन्धी सुझाव पेश गर्ने देशका पत्र पत्रिकाको स्थिति, अवस्था, व्यवस्था अध्ययन गर्न तथा सरकारद्वारा पत्र पत्रिकाहरूलाई हुनु पर्ने सहुलियत तथा सुविधा पत्रपत्रिकाको कर्तव्य तथा उत्तरदायित्व प्रेस सल्लाहकार समिति र राष्ट्रिय संवाद समिति जस्ता संस्थाहरू खडा गर्न कुराहरूमा सुझाव दिन यथासम्भव देशका सारा पत्रहरूको रायको उचित कदरगर्नु र विचारको प्रतिनिधित्व गर्नु अत्यावश्यक भएकोले यस कमिशनले पत्रकारहरूसंग भेट छलफल, पत्र पत्रिकाका कार्यालय र छापाखानाहरूको निरीक्षण तथा देशका विभिन्न स्थानमा कमिशनका प्रतिनिधिहरू पठाई पाएका अनुभवमा नै यस कमिशनले आफ्नो रिपोर्ट आधारित गरेकोछ। पत्रकारिताको वर्तमान अवस्थामा स्वच्छ पत्रकारिताको विकासको निमित्त यो रिपोर्ट जरूर नै सहायक हुनेछ भन्ने कमिशनलाई आशा तथा भरोसा छ। फेरि पत्रकारिताको उन्नति तथा प्रगति साथै नयाँ नयाँ समस्याहरू पनि आई पर्दछ, केही वर्षपछि पत्रकारिताको अरू विकास हुन थालेपछि अर्को प्रेस कमिशन गठन गर्नु पर्ने अवस्था आउँदा भविष्यका प्रेस कमिशनहरूलाई यस कमिशनलाई जस्तो समस्या पर्ने छैन। भविष्यका कमिशनहरूलाई तथ्याङ्क तथा आधारको निमित्त यस कमिशनको रिपोर्ट निकैनै उपयोगी निक्लने छ भन्ने पनि हामीलाई विश्वास छ।



प्रस (पत्र पत्रिकाहरू) लाई सरकारले सहुलियत सुविधाहरू दिनु कुनै असाधारण कुरा होइन, किनभने सबै जसो मुलुकमा सरकारद्वारा पत्रपत्रिकालाई सहुलियत सुविधा दिएकै हुन्छ। पत्र पत्रिकाले पाउने सुविधा सहुलियत मध्ये अहिले आवश्यक र सम्भव सबै सहुलियत सम्बन्धी सुझाव देशका पत्रकारहरूकै सुझावको आधारमा पेश गरेका छौं। तर देशमा सच्चा अर्थमा स्वच्छ तथा स्वस्थ पत्रकारिताको विकास पत्रकार वर्गकै प्रयासले मात्र सम्भव छ, साथै सरकारी सहुलियतमा मात्रै निर्भर गरेर केही हुन सक्दैन; यसको मुख्य उत्तरदायित्व पनि पत्रकार वर्गमा नै छ। स्वच्छ पत्रकारिता सम्बन्धी यस कमिशनका सुझावहरू आचरण सम्बन्धी नियमहरू देशको पत्रकारहरूको निमित्त उपयोग सिद्ध हुनेछ भन्ने पनि हामिलाई आशा छ।

अन्तमा यस कमिशनको कार्यमा प्रश्नावलीको उत्तर लिखित सुझाव, भेट छलफल र कमिशनले निरीक्षण गर्दा परामर्श तथा अरू प्रकारका सहयोग दिनु भएर कमिशनको काममा बहुमूल्य सहयोग प्रदान गर्नु भएकोमा पत्रकार, लेखक, बुद्धिजीवी तथा सरकारी अधिकारीहरू सबैलाई यस प्रेस कमिशन हार्दिक धन्यबाद अर्पण गर्दछ।

# सरकारको प्रेस कमिशन गठन सम्बन्धी आदेश

नेपाल सरकार गृह सचिवालय

संख्याः–

मितिः– २६।१०।०१४

विषयः– प्रेस समिति गठन बारे ।

श्री . . . . . . . . . . . . . . . . . . . . . . लाई

देशमा स्वच्छ पत्र पत्रकारिताको विकास गर्ने कार्यमा सरकारमा रिपोर्ट तथा सुझाव पेश गर्न २०१४।७।२०।३ को सरकारको निर्णयअनुसार प्रेस समितिको गठन भएकोमा यस प्रकारको काममा अरू कुराको अतिरिक्त निष्पक्ष तथा विभिन्न दृष्टिकोणको अरू राम्रो प्रतिनिधित्व गराउन न्यायपालीका तर्फका न्यायाधीश जस्ता उच्चस्तरीय व्यक्ति अध्यक्ष रहनु राम्रो र वान्छनीय देखिएकोले सो प्रेस कमिशनका अध्यक्ष तथा सदस्यहरूमा केही हेरफेर गर्नु आवश्यक भएको व्यहोरा समेत सरकारमा जाहेर हुँदा प्रधान न्यायाधिश अथवा वहाँले खटाएको अरू कुनै न्यायाधिशको अध्यक्षतामा निम्न लिखित सरकारी तथा गैर सरकारी व्यक्तिहरू सदस्य रहने गरी सरकारबाट निर्णय भएकोले सूचना गरिएको छ ।

(क) सरकारी सदस्यः–

१. प्रेस एट-याचे श्री रेगुलाल सिंह
२. गृह सचिवालयका डे. से. श्री जीवनाथ लोहनी
३. प्रधान संपादक श्री प्रकाशमान सिंह
४. अ. डा. रामराज पौडयाल (सदस्य तथा सेक्रेटरी)

(ख) गैर सरकारी सदस्यः–

१. दुबै प्रेस एशोसियशनबाट एक एकजना प्रतिनिधि
२. समितिले मुख्यतः देहायका विषयहरूमा आवश्यक अध्ययन तथा विचार गरी सरकारमा सुझाव पेश गर्ने ।



(क) नेपालमा पत्रकारिताको विकास र खास गरेर २००७ साल पछिको पत्रकारिताको इतिहासको अध्ययन गरी देशमा स्वच्छ तथा स्वस्थ पत्रकारिताको विकासका सम्बन्धमा सुझाव पेश गर्ने ।

(ख) देशका मौजुदा प्रेस (पत्रकारिताहरू) को स्थिति, संचालन, आर्थिक अवस्था तथा अरू व्यवस्थाहरूको अध्ययन गरी त्यसको सुप्रवन्धका सम्बन्धमा सुझाव पेश गर्ने ।

(ग) सरकारद्वारा प्रेस पत्रकारिताहरूलाई प्राप्त हुनु पर्ने सहुलियत तथा सुविधाहरू र प्रेस (पत्र पत्रिकाहरू) को सरकार प्रतिको उत्तरदायित्व र कर्तव्यका सम्बन्धमा सुझाव पेश गर्ने ।

(घ) सरकार र प्रेस (पत्र पत्रिकाहरू) को सम्बन्ध अझ निकट र घनिष्ठ पार्नको निमित्त हुनु पर्ने व्यवस्थाका साथै स्थायी प्रेस सल्लाहकार समितिको गठनको सामयिकता र संभावना बारे सुझाव पेश गर्ने ।

(ङ) राष्ट्रिय सम्वाद समिति खडा गर्न सकिने संभावनाहरूको विवेचना गरी यसका लागि आवश्यक व्यवस्था र प्रवन्धका बारे सुझाव पेश गर्ने ।

२. समितिका अध्यक्षलाई समितिको कारवाई संचालन गर्न आवश्यक सबै अधिकारहरू प्राप्त हुनेछ र समितिको रिपोर्ट प्रस्तुत गर्ने काममा आवश्यक सबै खर्चको लागि समितिको निर्णय बमोजिम खर्च मिल्हा गर्ने गरी मोरू २०००।– दुई हजार रूपैयाँसम्म दिने ।

३. गैर सरकारीसदस्यहरूलाई समिति बसेको दिन १ के मोरू १०।–दशका दरले भत्ता दिने ।

४. समितिको बहुमतको निर्णयलाई नै समितिको निर्णय मानिनेछ तापनि सुझावको सम्बन्धमा कसैको मत विभिन्नता हुन गएमा सो कुरा पनि रिपोर्टमा समावेश गरी समितिले पेश गर्ने ।

५. समितिले आफ्नो रिपोर्ट ०१४ साल चैत्र मसान्तसम्ममा गृह सचिवालय मार्फत सरकारमा पेश गर्ने ।

समितिले फाल्गुन १ गतेदेखि काम शुरू गर्ने निर्णय अनुसार दिन तथा समय निर्धारित गरी सदस्यहरूलाई समेत सूचना गर्नु हुन अध्यक्षज्यूमा अनुरोध गरिएको छ ।

उल्लिखित प्रेस एशोसियशनबाट एक एक जना प्रतिनिधिहरूलाई निर्धारित समयमा यस समितिमा उपस्थित गराउने प्रवन्ध गर्ने प्रचार विभागलाई सूचना गरिएको छ ।

## कमिशनको गठन

सरकारको उपर्युक्त आदेश अनुसार श्री माननीय प्रधान न्यायाधीशज्यूबाट माननीय विशेष न्यायधीश श्री कृष्णप्रसाद चापागाईंज्यूलाई कमिशनको अध्यक्ष पदमा मनोनीत गर्नु भएको र दुई प्रेस एशोसियशनहरूमध्ये नेपाल जर्नालिष्टस एशोसिएशनतर्फबाट त्यस एशोसिएशनका अध्यक्ष श्री गोपालदास श्रेष्ठ र नेपाल यूनियन अफ जर्नालिष्ट्स तर्फबाट त्यस यूनियनका जनरल

सेक्रेटरी प्रो. माणिकलाल श्रेष्ठ एम. ए. बी. एस्सी, एल. एल. बी. प्रतिनिधि भै आउनु भएको र सरकारबाट नियुक्त कमिशनका सदस्य सेक्रेटरी श्री अ. डा. रामराज पौड्याल सरकारी कामजमा कलकत्ता गै राख्नु भएको हुनाले कमिशनको कार्य चलाउन अर्को सरकारी सदस्य श्री प्र. सं. प्रकाश मान सिंहलाई सरकारको स्वीकृति अनुसार कमिशनको सदस्य सेक्रेटरी नियुक्त गरिएबाट निम्नलिखित बमोजिम कमिशनको गठनभयो-

| | |
|---|---|
| १. माननीय विशेष न्यायाधीश श्री कृष्णप्रसाद चापागाईञ्यू | अध्यक्ष |
| २. शाही प्रेस सेक्रेटरी श्री रेणुलाल सिंह | सदस्य |
| ३. गृहमन्त्रालयका का. मु. सचिव श्री जीवनाथ लोहनी | सदस्य |
| ४. श्री गोपाल दास श्रेष्ठ | सदस्य |
| ५. श्री माणिकलाल श्रेष्ठ | सदस्य |
| ६. श्री अ. डा. रामराज पौड्याल | सदस्य |
| ७. श्री प्र. सं. प्रकाशमान सिंह | सेक्रेटरी तथा सदस्य |



परिच्छेद-१

## कमिशनको गतिविधि र कार्य-विवरण

समस्त देशको मौजुदा प्रेस (पत्र पत्रिका) हरूको वास्तविक स्थिति र तथ्याङ्कको विवरण प्राप्त नभै कमिशनले तिनीहरूको सुधार र विकासको लागि सरकारमा आफ्नो रिपोर्ट प्रस्तुत गर्न मुश्किल पर्ने हुनाले कमिशनको पहिलो बैठक (२०१४ फाल्गुन १२) मा नै प्रेस (पत्र पत्रिका) हरू को तथ्याङ्क विवरण प्राप्तिको लागि पत्रकारिताको व्यवसायमा लागेका महानुभावहरूमा वितरण गर्न दुई किसिमका फारामहरू, (१) पत्र पत्रिका सम्बन्धी प्रश्नावली र (२) छापाखाना सम्बन्धी प्रश्नावली सरकारी छापाखाना गोरखापत्र छापाखानाबाट छपाउने निर्णय भएको थियो। यी दुई किसिमका प्रश्नावलीहरूको अतिरिक्त देशका बुद्धिजीवी, लेखक कवि, साहित्यकार, माष्टर, प्रोफेसर, समाजसेवी, सांस्कृतिक क्षेत्रका कार्यकर्ता, राजनैतिक नेताहरू, सरकारी अधिकारीहरू, साहु महाजन, सिनेमा मालिकहरू, विदेशमा रहेका नेपालीहरू र नेपालका कूटनैतिक मिशनका अधिकारीहरू, जिल्ला, गढी, गौडा गोश्वाराका बडाहाकिमहरू मार्फत स्थानीय बुद्धिजीवीहरू र पत्रकारितामा दिलचस्पी राख्ने अर्थात् पत्र पत्रिकाका नियमित पाठकहरू सम्झिइएका बढी से बढी महानुभावहरूको पत्रकारिताको विकास सम्बन्धी राय सल्लाह सुझाव थाहा पाउन एक अर्कै किसिमको २१ प्रश्नहरूको प्रश्नावली पनि छापि चलान् गरिएको थियो। ती प्रश्नावलीहरूका साथै एक चलानी पत्र पनि पठाउनु पर्ने आवश्यक देखिएकोले एक अपील सहितको पत्र पनि छापेरै तयार पारिएको थियो। सो पत्रमा महानुभावहरू सित प्रश्नावलीहरू पाउनु भएको एक हप्ताभित्रै आफ्नो आफ्नो राय सल्लाह सुझाव र प्रेस (पत्र पत्रिका) सम्बन्धी तथ्याङ्क भरेर पठाउन अनुरोध गरिएको थियो। ती प्रश्नावलीहरू प्रेसबाट फाल्गुण २१ गते २०१४ मा छापिएर आउनासाथ सोही दिन कमिशनका समक्ष प्रस्तुत भै श्री अध्यक्ष र सदस्यहरू सबैले थाहा पाए सम्मका र सम्झन सकेसम्मका प्रेस (पत्र पत्रिकाहरू) का महानुभावहरू र बुद्धिजीवीहरूलाई प्रश्नावलीहरू चलान गर्नकोलागि नाम र ठेगाना लेख्ने काम भयो र नजीकका पत्रकार महानुभावहरूलाई वितरण गर्न सदस्यहरू आफैले पनि लैजानु भयो र अरूलाई मोलिपल्टै पियनहरूले तथा डांकद्वारा चलान भयो। त्यसपछि प्रत्येक दिन एक हप्तासम्म अर्थात् फाल्गुन महिनाको अन्तसम्म विभिन्न महानुभावहरूलाई जिल्ला जिल्लामा

प्रश्नावलीहरू पठाउने काम जोड तोडसंग चालु रह्यो । जिल्लाहरूमा प्रश्नावलीहरू पठाउँदा गृह सचिवालय मार्फत बडा हाकिमहरूलाई आफ्ना-आफ्ना जिल्लाका बुद्धिजीवीहरूमा प्रश्नावली वितरण गरी उहाँहरूले दिनुभएको राय, सल्लाह, सुझाव र तथ्याङ्क संकलन समेत गरी कमिशनमा फिर्ता पठाउन अनुरोध गरिएको पत्र समेत पठाएको थियो । यसमा गृहसचिवालयबाट बडो तत्परताकासाथ हुनेसम्म हवाई मार्गद्वारा पठाइदिने प्रवन्धमिलाई दिएको थियो र साथै अत्यधिक संख्यामा बडाहाकिमहरूले पनि पहुँच, कारवाई र सूचना प्रदानकार्य पूरा गर्नु भयो, जसको प्रमाण रिपोर्टको अन्ततिर प्रस्तुत परिशिष्टबाट बोध हुनेछ । बडाहाकिमहरूको तत्परतापूर्ण सहयोगको लागि पनि कमिशन धन्यवाद अर्पण गर्दछ ।

यहाँ एउटा यो कुरा पनि उल्लेख गर्न असंगत होओइन कि हामीले प्रश्नावली वितरण गर्ने कार्य फाल्गुनको मसान्तसम्ममा पूरा गर्ने निधो गरेका थियौं तापनि शिक्षा सचिवालयबाट माष्टर प्रोफेसरहरूको लिष्टमागिएकोमा समयभित्र प्राप्त नभएको हुनाले माष्टर प्रोफेसरहरूलाई पठाउन, अरू क्षेत्रमा महानुभावहरू जसलाई पहिलो हप्तामा पठाउन छुट भएको थियो र फेरि, पठाएर पनि पाइन भन्ने महानुभावहरूलाई प्रश्नावलीहरू पठाउन परेको हुनाले प्रश्नावली चलान गर्ने काम चैत्रको मध्यसम्म जारी नै रह्यो ।

साधारण प्रश्नावलिहरू २००० प्रति, कभरिङ लेटर २०००, पत्रपत्रिका सम्बन्धी प्रश्नावलि २०० प्रति र छापाखाना सम्बन्धी प्रश्नावलि २०० प्रति छापिएकोमा साधारण प्रश्नावलिहरू १३०० प्रति वितरण भयो । पत्रपत्रिका सम्बन्धी प्रश्नावलि प्रति १०० र छापाखाना सम्बन्धी प्रश्नावलि प्रति १०० चलान भयो, त्यसमा साधारण प्रश्नावलिको उत्तर हामीले ११९ महानुभावहरूबाट पायौं । पत्रपत्रिका सम्बन्धी र छापाखाना सम्बन्धी प्रश्नावलिहरू सब नै जसो जिल्लाहरूबाट फिर्ता आयो । केही जिल्ला तथा स्थानीय समेत गरी पत्रपत्रिका सम्बन्धी १६ र छापाखानासम्बन्धी १३वटा उत्तरप्राप्तभयो । प्रश्नावलिहरूका बारेमा विभिन्न टीकाटिप्पणी सुनियो, कसैल साह्रै लामो उत्तर लेख्न पर्ने किसिमको प्रश्नावलि भयो भने, कसैले बहुत लायक प्रश्नहरू सोधिएका छन् भने । प्रेस पत्रपत्रिकाहरूका महानुभावहरूले चाहिं अरू त त्यस्तै हो ग्राहक संख्या, मुद्रण संख्या, आमदानी खर्चको हिसावका प्रश्नहरूमाथि निक्कै शंका उपशंकाहरू झिकेर उत्तर पठाउन हिचकिचाए कमिशनले यी शंकाउपशंकाहरूको समाधानको लागि स्पष्टीकरण प्रकाशित गर्‍यो, भेट छलफल र अरूसमयको कुराकानीमा उहाँहरूलाई यथोचित आश्वासन र स्पष्टिकरण गरियो, तैपनि उहाँहरूमध्ये धेरजसोले समयमा आफ्नो आफ्नो उत्तर पठाउनु भएन । रिपोर्टको लागि प्रेस (पत्रपत्रिकाहरू) को तथ्याङ्कको बहुतै आवश्यकता भएको हुनाले कुनै हालतमा पनि प्राप्त गर्नुपर्ने देखिएकोले कमिशनमा गैर सरकारी सदस्यहरूलाई व्यक्तिगत रूपले आफ्ना आफ्ना प्रेस एशोसिएशनका सदस्यहरूसितभेटी स्पष्टिकरण दिई तथ्याङ्क विवरण पठाउन अनुरोध गराउने निधो पनि भयो, साथै कमिशनले प्रेस (पत्रपत्रिकाहरू) को कार्यालय कारखानाहरूको निरीक्षण गरी सम्पादक, प्रकाशक, मुद्रक र प्रेस धनीहरूसित भेट्दा पनि सविनय अनुरोध गर्‍यो । फलस्वरुप चैत्र आखिरसम्ममा धेरै जसो जवाफ आए । दैनिक



पत्रहरूको उत्तर साह्रै ढिलो आयो । सरकारबाट कमिशनको रिपोर्ट पेश गर्ने म्याद दुई महीना ०१५ जेष्ठ मसान्तसम्म बढाउने स्वीकृति प्राप्त भै आए पनि प्रश्नावलिहरू पाउनु भएको महानुभावहरूले वैशाख मसान्त सम्म आफ्नो आफ्नो उत्तर तथ्याङ्क विवरण पठाउन सक्नुहुन्छ भनी आखिरी अपील प्रकाशित पनि गराइएको थियो ।

प्राप्त तथ्याङ्क विवरण र राय सल्लाहको विश्लेषण प्रस्तुत गर्नुभन्दा पहिले उपयुक्त कुराहरूको प्राप्तिको लागि कमिशनले गरेको उपाय र कार्यक्रमको एक झलक यहाँ दर्शाउनु पनि अनुचित नहोला । कमिशनले तथ्याङ्क र राय सल्लाह सुझाव प्राप्तिको लागि तीन किसिमको कार्यक्रम पहिलो बैठकमा तय गरेको थियो– (१) प्रश्नावलिहरू छपाएर वितरण गर्ने (२) प्रेस (पत्रपत्रिका) का व्यावसायीहरू, पत्रकारहरू, केही पत्रपत्रिका पाठक र सम्बन्धित लेखक कविहरू सित कमिशनमा निमन्त्रणा गरेर भेट छलफल गर्ने, र (३) कमिशनका अध्यक्ष र सदस्य हरू आफै सकेसम्म बढी प्रेस (पत्रपत्रिका) हरूको कार्यालय कारखानामा गै निरीक्षण गर्ने र सम्पादक, प्रकाशक, मुद्रक, प्रेस धनीहरूसित भेटी विचार विमर्श गर्ने । तेस्रो कार्यक्रम अन्तर्गत कमिशनका सदस्यहरूलाई वीरगञ्ज, विराटनगर पठाई त्यहाँका प्रेस पत्रपत्रिकाहरूको स्थिति अध्ययन गर्न पठाउने पनि व्यवस्था भएको थियो । यसमा वीरगञ्जमा डेपुटीसेक्रेटरी श्री जीवनाथ लोहनी र विराटनगरमा श्री गोपालदास श्रेष्ठलाई पठाइएको थियो, उहाँहरूबाट प्राप्त रिपोर्ट अर्कै परिच्छेदमा प्रस्तुत छन् । पश्चिमतिर पाल्पा, तानसेन, बुटौल, नेपालगञ्ज, भैरहवा, पोखरातर्फ पनि एकजना सदस्य पठाउनु पर्ने थियो तापनि धेरै जसो जिल्लाहरूबाट प्रेस पत्रपत्रिकाहरूको अस्तित्व सम्बन्धी नकारात्मक जवाफ आएको र कमिशनको अगाडि समयको पनि ज्यादै अभाव भएको हुनाले उपर्युक्त जिल्लाका बारेमा बडाहाकिमहरूसित आकाशबाणीमा कुरा गरेर तथ्याङ्क र स्थिति बारे जानकारी प्राप्त गर्ने निधो भएको र उहाँहरूसितको कुराबाट राम्रै तथ्याङ्क र स्थितिको बोध हुन आएकोले कुनै सदस्यलाई त्यस तर्फ पठाइरहन आवश्यक सम्झिइएन ।

## नेपालमा विदेशी प्रकाशन र प्रचार

नेपालमा विदेशी दूतावास तथा सूचना सर्भिसहरूका नियमित र अनियमित प्रकाशनहरूको वितरण के कस्तो भैराखेको छ, सो कुराको पनि रिपोर्टमा विवरण प्रस्तुत गर्नु राम्रो होला भन्ने कमिशनले ठानेको हुनाले तिनीहरूको लगत प्राप्त गर्न हाम्रो परराष्ट्र सचिवालय मार्फत विदेशी दूतावास तथा सूचना सर्भिसहरूलाई अनुरोध गरी पठाउने ठहरमुताविक लेखी गएको थियो । सो अनुरोध अनुसार प्राप्त लगत रिपोर्टको अन्तमा परिशिष्टको रूपमा प्रस्तुत गरिएको छ । साथै नेपालमा नियमित रूपले काम गरिरहेका विदेशी संवाद समितिहरूको फिहरिस्त पनि समावेश गरिएको छ । संवाद समितिको गतिविधिलाई सर्वेक्षण गर्दा हामिले यो महशूस गर्‍यौं कि हाम्रो राष्ट्रिय संवाद समितिको अभावमा विदेशी संवाद समितिहरू मध्ये खास गरेर हिन्दुस्थान समाचार ले नेपालका विभिन्न जिल्लाहरूमा आफ्ना संवाददाताहरू राखी यो ३।४ वर्षभित्रमा निक्कै गतिविधि बढाएको बुझियो ।

## तथ्याङ्क संकलनमा सहयोग

कमिशनको तथ्याङ्क संकलन गर्ने र वस्तुस्थिति बुझ्ने कार्यमा सहयोग गर्न विभिन्न अखबारहरूले आपनो आपनो योगदान राम्ररी दिए। सबै नै अखबारहरूले प्रेस कमिशनको सफलता माथि विश्वास प्रकट गरी यसलाई पूर्ण सहयोग गर्ने इच्छा व्यक्त गर्दै प्रशंसात्मक सम्पादकीयहरू लेखे। कमिशन गठन हुनुभन्दा पहिले नै हल्लाको भरमा नानाथरीका कुराहरूको शंका उपशंका झिकी यसको आलोचना गर्ने अखबारले पनि पछि गएर यसको कार्यमा सन्तोष प्रकट गरेर सफलता माथि पूर्ण विश्वास प्रकट गरे। केही अखबारहरू; जसमा सबभन्दा पहिलो नाम "कल्पना" कोआउँदछ ले प्रेस कमिशनको प्रश्नावलि पाउने विभिन्न वर्गको महानुभावहरूसित आपनो आपनो उत्तर पठाई कमिशनको महान कार्यमा हार्दिक सहयोग गर्न आह्वान गर्दै नि.शुल्क विज्ञापन छापेर पनि सहयोगात्मक भावना दर्शाए। यसरी स्वेच्छापूर्वक विज्ञापन छापेर सहयोग गर्ने अखबारहरूको नाम यस प्रकार छः– कल्पना, कमनर, जनता, गोरखापत्र, नेपालभाषा पत्रिका। अखबारहरूको यो सक्रिय सहयोग र अरू सहयोगात्मक भावनाको लागि कमिशन हार्दिक कृतज्ञता ज्ञापन गर्दछ। उनीहरूको त्यस प्रकारको शुभेच्छा र सहयोगात्मक भावना कमिशनले प्राप्त गर्न सकेर आपनो कार्य अघि बढाउनमा धेरै सफल र सुगम भयो। के पत्रकार, के सर्वसाधारण,के बुद्धिजीवी, लेखक, कवि, सबैको सहानुभति र प्रेरणाको वातावरणमा कमिशनलाई आपनो कार्य पूरा गर्न बहुतै सजिलो भयो।

## प्रशासनतर्फ

कमिशन गठन हुँदा सरकारबाट अ. डा. श्री रामराज पौड्याललाई सदस्य सेक्रेटरी नियुक्त गरेकोमा उहाँ सरकारी काजमा कलकत्ता गइराख्नु भएको हुनाले सेक्रेटरीको काम चलाउन अर्को सरकारी सदस्य प्र. सं. श्री प्रकाश मान सिंहलाई सेक्रेटरीको काम दिने भनी निर्णय गरी सरकारको समर्थनको लागि पेश भै गएकोमा स्वीकृत भै आयो। पछि श्री अ.डा. रामराज धेरै दिनसम्म पनि काजबाट फर्की आउनु नभएको र तत्काल फर्कने पनि कुनै सूचना नभएको, म्यादको आखिरीतिर फर्कनु भएमा सेक्रेटरीको काम र हिसावको बुझ बुझारथ गरी रहँदा कार्यमा धक्का पर्न जाने हुनाले श्री प्रकाश मान सिंहलाई नै श्री रामराजको सट्टा कमिशनको काम नसकिएसम्मको लागि सेक्रेटरी गराउने भनी निर्णय गरी सरकारको स्वीकृतिको लागि पेश भै जाँदा श्री ५ को सरकारबाट स्वीकृत भै आयो। कमिशनको प्रशासकीय कार्यमा दुइजना क्लर्क एक पीउन राष्ट्रसेवक (अ. नि.) विशेष अदालतको र एकजना पिउन गृह सचिवालयकोबाट काम चल्यो। एकजना टाइपिष्ट र टाइपराइटरको लागि गृह र गृहमार्फत प्रमुख सचिवालयसित लेखापढी भयो। तर आखिरमा आएर सचिवालय तथा सरकारी जगेडाबाट प्राप्त हुनै नसकिने सूचना प्राप्त भएपछि कमिशनकै कोषबाट खर्च गर्ने गरी बाहिरबाट एकजना टाइपिष्ट र रेडियोबाट टाइपराइटर ल्याई काम चलाइयो। अन्ततिर गृह मन्त्रालयबाट पनि टाइपिष्ट र टाइपराइटरको विशेष मद्दत प्राप्त भयो। श्री अध्यक्षज्यू र सेक्रेटरीले अक्सर हप्तामा ३।४ दिन बैठक भएको दिन बाहेक



पनि कमिशनको अफिसमा बसी परेका कामहरू गर्ने गरी दक्षतापूर्ण कर्मचारीहरूको अभावमा पनि सबैकाम कुरो सुचारू रूपले चलाई कमिशनको कार्यमा कुनै त्रुटि हुन नपाएको मात्र होइन, बिलकुल सन्तोषजनक ढङ्गले कार्य पूरा भयो।

कमिशनको सरकारी काम काजमा विभिन्न सचिवालय विभागहरूबाट राम्रो सहयोग प्राप्त भयो। खास गरेर गृह सचिवालयको सहयोग विशेष उल्लेखनीय छ। कमिशनले सरकारी सचिवालय, विभागहरूबाट विज्ञापनको लागि के कत्ति खर्च भै राखेको छ भन्ने निर्णय गरे मुताबिक सबै विभाग सचिवालयहरूमा सो सम्बन्धी परिपत्र पठाएकोमा सबैजसो विभाग सचिवालयहरूबाट राम्रो उत्तर प्राप्त भयो। एक दुई बाहेक सबै ने जवाफमा विज्ञापनको लागि कुनै किसिमको खर्च भएको छैन भन्ने कुराको उल्लेख थियो। प्रचार विभागबाट पनि कमिशनबाट पठाइएका खबर, अपिलहरू तत्परताका साथ पत्रपत्रिकाहरूमा वितरण भै कमिशनको प्रचार कार्यमा सहयोग प्राप्त भयो। उता पत्रपत्रिकाहरूले पनि त्यसरी प्राप्त खबर अपिलहरूलाई राम्रो ध्यान दिई प्रकाशित गरिदिए। त्यस्तै रेडियो नेपाल र गोरखापत्रले पनि प्रचार कार्यमा राम्रो मद्दत गरे।

## बैठक र अरू गतिविधि

कमिशनको स्थापना भएदेखि आखिरीसम्म जम्मा ३१ बैठक भयो र ३ पटक निरीक्षण कार्य। यसमा कमिशनको पहिलो कार्य अवधि अर्थात् चैत्र मसान्तसम्ममा १५ पटक बैठक, ६ पटक भेट छलफल र दुई पटक निरीक्षण कार्य भयो। दोस्रो अवधिमा १६ बैठक, १ पटक भेट छलफल र एक पटक निरीक्षण भयो। पहिलो बैठक सरकारबाट तोकिएको मिति २०१४ सालफाल्गुन १ गते हुनुपर्ने थियो, तापनि माघ २९ गतेगठन भै फाल्गुन १ गतेकै दिन प्रचार भएको र कमिशनको अध्यक्ष पदमा माननीय प्रधान न्यायाधीशज्यूद्वारा माननीय विशेष न्यायाधीश श्री कृष्णप्रसाद चापागाईज्यूलाई अध्यक्ष मनोनीत गरी पठाउनु भएको फाल्गुन ३ गते र प्रेस एशोसिएशन मध्ये नेपाल युनियन अफ जर्नलिष्टसबाट प्रतिनिधिको नाम फाल्गुन १० गते मात्र प्राप्त भएको र त्यसका अतिरिक्त फाल्गुन १ गतेदेखि ११ गतेसम्म केही दिन सार्वजनिक बिदा पनि परेको हुनाले फाल्गुन १२ गते मात्र बस्न सकेको थियो। पहिलो बैठकमा नै कमिशनको प्रतिनिधि विषय कतिपय विषय कतिपय निर्णयहरू गरिनुको साथै हप्तामा कमसेकम ३ पटक बैठक गर्ने पनि निर्णय भएको थियो। प्रत्येक बैठक ३ बजे शुरू हुने गर्दथ्यो र लगभग ३।४ घण्टासम्म जारी रहन्थ्यो। भेट छलफल भएको बेलामा त कुनै कुनै पटक छ घण्टासम्म पनि चालू रहेको थियो।

कमिशनका अध्यक्ष र सदस्यहरूको जसरी हुन्छ, प्रेस पत्रपत्रिकाहरूको विकासको लागि सुझाव पेश गर्ने, अभिरूचि तथा काम राम्ररी पूरा गर्ने उत्साह र सद्भावनाले गर्दा कुनै पनि बैठकमा कहिल्यै पनि कुनै किसिमको गतिरोध आएन।

बैठक, भेट, छलफल र प्रेस (पत्रपत्रिका) हरूको कार्यालय कारखाना निरीक्षणको चार्ट–

| बैठक | मिति | ववरण तथा कफियत |
|---|---|---|
| १. पहिलो बैठक | फाल्गुण १२, ०१४ | प्रारम्भिक छलफल कार्यक्रमको रुपरेखा तयार पारेको, प्रश्नावली तैयार पार्ने निर्णय श्री प्रकाशमान सिंह का. मु. सेक्रेटरी नियुक्त |
| २. दोस्रो बैठक | फाल्गुण १४, ०१४ | प्रश्नावलीहरूको मसौवा माथि विचारविमर्श। |
| ३. तेस्रो बैठक | फाल्गुण १६, ०१४ | प्रश्नावली माथि पुनः विचार र अन्तिम रूप दिएको गोरखापत्रमा छाप्ने निर्णय। |
| ४. चौथो बैठक | फागुन २१, ०१४ | प्रश्नावली पठाउनेहरूको नाम नमेसी तयार पारेको । |
| ५. पाँचौं बैठक | फाल्गुण २३, ०१४ | सरकारी अड्डाहरूबाट र जिल्लाहरूबाट खबर र विज्ञापनसम्बन्धी खर्चको फांटवारीमाग्ने, प्रेस पत्रपत्रिकाको लगत माग्ने निर्णय र अरू विभिन्न निर्णय । |
| ६. छैटौं बैठक | फाल्गुण २६, ०१४ | अर्को बैठकदेखि भेट छलफल शुरू गर्ने र डे. से.जीवनाथजीलाई वीरगंज जान अनुरोध गर्ने निर्णय । |
| ७. सातौं बैठक | फाल्गुण २८, ०१४ | भेट छलफल र त्यसपछि विविध निर्णय |
| ८. आठौं बैठक | फाल्गुण ३०, ०१६ | भेट छलफल । |
| ९. नवौं बैठक र भेट छलफल | चैत्र ३, ०१४ | भेट छलफल पछि श्री प्रकाशमान सिंहलाई सेक्रेटरी नै कायमै गर्ने बारेको प्रस्ताव पेश, एकजना सदस्यबाट विराटनगर पठाउने निर्णय । |
| १०. दशौं बैठक र भेट छलफल | चैत्र ५, ०१४ | श्री प्रकाशमान हिंस सेक्रेटरी गराउने प्रस्ताव पास, श्री जीवनाथ लोहनीजीको रिपोर्ट प्रस्तूत । |
| ११. एघारौं बैठक र भेट छलफल | चैत्र ८, ०१४ | भेट छलफल |
| १२. बाह्रौं बैठक र भेट छलफल | चैत्र १२, ०१४ | भेट छलफल र विविध निर्णय, श्री गोपाल बासलाई बिराटनगर पठाउने । |
| १३. तेह्रौं बैठक | १४ चैत्र, ०१४ | भेट छलफल र श्री गोपाजवासलाई बिराटनगर पठाउने प्रवन्ध गर्ने । |
| १४. चौधौं बैठक र भेट छलफल | चैत्र १६, ०१४ | भेट छलफल पछि कमिशनको म्याद जेष्ठ मसान्तसम्म बढाउन सरकारमा अनुरोध गर्ने निर्णय । |
| १५. पन्ध्रौं बैठक र भेट छलफल | चैत्र २१, ०१४ | भेट छलफल पछि निरीक्षण गर्ने कार्यक्रम प्रारंभ गर्ने निर्णय । |
| १६. प्रथम निरीक्षण | चैत्र २५, ०१४ | निरीक्षण, आठवटा प्रेस र ६ वटा दैनिक पत्र। |
| १७. दोस्रो निरीक्षण | चैत्र २८, ०१४ | निरीक्षण, आठवटा प्रेस र ३ वटा दैनिक पत्र। |
| १८. सोह्रौं बैठक | बैशाख १२, ०१५ | रिपोर्ट मसौदा गर्न कामको बांडफांड र विभिन्न कुराहरूको निर्णय अ. डा. श्री रामराज पहिलो पटक उपस्थित हुनु भएको । |
| १९. तेश्रो निरीक्षण | बैशाख १२, ०१५ | निरीक्षण, ३ वटा दैनिक पत्र र एउटा प्रेस । |
| २०. सत्रौं बैठक र भेट छलफल | | संचार डाइरेक्टर र पोष्ट मास्टरसित भेट छलफल, काठमाडौं मेजिष्ट्रेट उपस्थित हुनु भएन । |
| २१. अठारौं बैठक | बैशाख २३, ०१५ | सदस्यहरूद्वारा प्रस्तुत मसौदाहरू माथि छलफल प्रारम्भ । |
| २२. उन्नाइसौं बैठक | बैशाख २७, ०१५ | " " " |
| २३. बिसौं बैठक | बैशाख ३०, ०१५ | " " " |
| २४. एक्काइसौं बैठक | बैशाख ३१, ०१५ | " " " |
| २५. बाईसौं बैठक | जेष्ठ ३, ०१५ | मसौदा माथि छलफल तथा हिन्दुस्तान समाचारका संस्थापक श्री एस. एस. आप्टे सित भेट गरेको । |
| २६. तेइसौं बैठक | जेष्ठ ७, ०१५ | मसौदा माथि छलफल तथा उप-समिति गठन। |
| २७. चौबिसौं बैठक, | जेष्ठ, १०, ०१५ | मसौदा माथि छलफल तथा उप-समिति गठन। |
| २८. पच्चीसौं बैठक | जेष्ठ १२, ०१५ | " " " |
| २९. छब्बीसौं बैठक | जेष्ठ १४, ०१५ | " " " |
| ३०. सत्ताइसौं बैठक | जेष्ठ १६, ०१५ | " " " |
| ३१. अठ्ठाइसौं बैठक | जेष्ठ १७, ०१५ | " " " |

| | | | |
|---|---|---|---|
| ३२. | उन्तीसौं बैठक | जेष्ठ २२, ०१५ | मसौदा माथि अंतिम छलफल । |
| ३३. | तीसौं बैठक | जेष्ठ २४, ०१५ | मसौदा माथि अन्तिम छलफल । |
| ३४. | एकतिसौं बैठक | जेष्ठ ३१, ०१५ | रिपोर्ट माथि हस्ताक्षर र विसर्जन । |

परिच्छेद २

## भेट छलफल (अन्तर्वार्ता) र प्राप्त सुझावका बुंदाहरू

कमिशनले देशमा पत्रकारिताको विकासको लागि सरकारका समक्ष रिपोर्ट पेशगर्नं पत्रकार तथा पत्रकारितामा दिलचस्पी राख्ने र त्यससित कुनै न कुनै प्रकारले सम्बन्धित व्यक्तिहरू सित भेटेर प्रत्यक्ष छलफल गरी उनीहरूको राय सल्लाह प्राप्त गर्न र मन्तव्य बुझ्न पनि आवश्यक सम्झेकोले पटक पटक गरी केही महानुभावहरूलाई कमिशनको कार्यालयमा आमन्त्रण गरी भेट छलफल गऱ्यो ।

सो भेट छलफलको लागि आमन्त्रण गर्दा उपस्थित हुनु भएको महानुभावहरूको नामनमेसी निम्न प्रकार थियोः—

| संख्या नाम | परिचय |
|---|---|
| १. श्री पशुपतिदेव पाण्डे | सम्पादक-नयाँ समाज |
| २. श्री शंकरनाथ शर्मा | सम्पादक-नेपाल समाचार |
| ३. श्री तारिणी प्रसाद कोइराला | सम्पादक-कल्पना |
| ४. श्री मदन शर्मा | सम्पादक-स्वतन्त्र समाचार |
| ५. श्री गणेशलाल | सम्पादअ-जनता |
| ६. श्री मंगलमान | सम्पादक-भूगोलपार्क (हाल अप्रकाशित) |
| ७. श्री उदयराज शास्त्री | प्रतिनिधि- नेपाल समाचार |
| ८. श्री दाताराम | सम्पादक- हाल खबर |
| ९. श्री फत्यबहादुर सिंह | सम्पादक-नेपाल भाषा पत्रिका |
| १०. श्री धनुषचन्द्र गौतम | सम्पादक-वाछिटा (हाल अप्रकाशित) |
| ११. श्री कृष्णप्रसाद उपाध्याय | प्रतिनिधि-नेपाल पुकार |
| १२. श्री विजय बहादुर मल्ल | लेखक |
| १३. श्री नारायणप्रसाद बास्कोटा | सम्पादक-प्रगति |
| १४. श्री डि.पी. अधिकारी | सम्पादक-नवयुग |
| १५. श्री शारदा रेग्मी | सम्पादक-राष्ट्रवाणी |
| १६. श्री मणिन्द्रराज | सम्पादक-मदरल्याण्ड |
| १७. श्री ईश्वरानन्द श्रेष्ठाचार्य | सम्पादक- रांको (हाल अप्रकाशित) |
| १८. श्री मणीराज शर्मा | सम्पादक-समाज |



| | |
|---|---|
| १९. श्री होराप्रसाद जोशी | लेखक तथा पत्रकार |
| २०. श्री माणिकलाल श्रेष्ठ | सम्पादक-समय (हाल अप्रकाशित) |
| २१. श्री विष्णु बहादुर श्रेष्ठ | सम्पादक-सहीसन्देश (हाल बन्द) |
| २२. श्री पुष्परत्न सागर | उप-सम्पादक-थौंकह्ने |
| २३. श्री नारायणप्रसाद उपाध्या | सम्पादक-दिपक |
| २४. श्री राजाराम जंगबहादुर सिंह | सम्पादक-कर्मवीर |
| २५. श्री यस. डे. राय | प्रतिनिधि-प्रेस ट्रष्ट अफ ईन्डीया |
| २६. श्री माधव राव | प्रतिनिधि-हिन्दूस्थान समाचार |
| २७. श्री गोपालराज जोशी | प्रतिनिधि-नयाँ समाज |
| २८. श्री अरबिन्दनाथ रिमाल | पत्रकार |
| २९. श्री सुरेन्द्रराज शर्मा | डाईरेक्टर-प्रचार विभाग |
| ३०. श्री देवेन्द्रराज | डाईरेक्टर-रेडियो नेपाल |
| ३१. श्री भवानी भिक्षु | एडिशनल डाईरेक्टर-प्रचार विभाग |
| ३२. श्री प्रेमराज शर्मा | मेनेजर-गोरखापत्र छापाखाना |
| ३३. श्री टेकबहादुर खत्री | का.मु. प्रधान सम्पादक-गोरखापत्र |
| ३४. श्री कपिल प्रसाद | एसिष्टेण्ट-शाही प्रेस सेक्रेटरी राजदरवार |
| ३५. श्री मुरारी कृष्ण शर्मा | सम्पादक-रेडियो नेपाल समाचार विभाग |
| ३६. श्री तीर्थराज तुलाधर | सम्पादक-रेडियो नेपाल समाचार विभाग |
| ३७. श्री बालकृष्ण सम | साहित्यकार |
| ३८. श्री ऋद्धिबहादुर मल्ल | सम्पादक-शारदा |
| ३९. श्री आशाराम शाक्य | भू. पू. सम्पादक-पाशा (हाल बन्द) |
| ४०. श्री भेषराज | लेखक |
| ४१. श्री केदारमान व्यथित | लेखक |
| ४२. श्री गोविन्द प्रसाद लोहनी | लेखक |
| ४३. श्री राममानसिंह प्रधान | सम्पादक-जनचेतना |
| ४४. श्री कमलमणी आ.दि. | लेखक |
| ४५. श्री कृष्णचन्द्रसिंह प्रधान | लेखक तथा पत्रकार |
| ४६. श्री गोविन्बबहादुर मल्ल | भू. पू. प्रधान सम्पादक-आवाज (हाल बन्द) |
| ४७. श्री सागरकुमार | सम्पादक-प्रवक्ता (हाल बन्द) |
| ४८. श्री जीवनलाल सत्याल | एसिष्टेण्ट डाईरेक्टर-संचार विभाग |
| ४९. श्री सु. लोक विलास | पोष्टल ईन्चार्ज-पोष्ट अफिस |

भेट छलफलका लागि आमन्त्रण गरिएका तर कुनै कारणबस उपस्थित हुन नसक्नु भएका महानुभावहरूः—

| संख्या | नाम | पेशा |
|---|---|---|
| १ | श्री उमाकान्त दास | सह-सम्पादक– नेपाल टाइम्स |
| २ | श्री अनङ्ग केशरी | सम्पादक– देश सेवा |
| ३ | श्री नरेन्द्र रेग्मी | प्रोप्राइटर– नरेन्द्र यन्त्रालय |
| ४ | श्री एम्. एम्. गुप्ता | प्रतिनिधि– युनाइटेड प्रेस |
| ५ | श्री बटुकचन्द्र गौतम | पत्रकार |
| ६ | श्री ईन्द्रप्रसाद उपाध्याय | सम्पादक– पञ्चायत |
| ७ | श्री ईश्वर बराल | लेखक समालोचक |
| ८ | श्री चित्तधर हृदय | सम्पादक– नेपाल |
| ९ | श्री प्रमोद शम्शेर | सम्पादक– झ्याली |
| १० | श्री शिवहर सिंह प्रधान | सम्पादक– संयुक्त प्रयास |
| ११ | श्री पुष्पलाल | सम्पादक– मसाल |
| १२ | श्री हरिचरण श्रेष्ठ | सम्पादक– डेली मिरर (हाल बन्द) |
| १३ | श्री विश्वबन्धु थापा | लेखक पत्रकार |
| १४ | श्री सत्यनारायण बहादुर | प्रोप्राइटर– नेपाल टुडे प्रेस |
| १५ | श्री खड्गबहादुर | सम्पादक– प्रकाश |
| १६ | श्री सम्पादक– | राष्ट्रिय प्रजा सन्देश |
| १७ | श्री शारदा प्रसाद | शाही प्रेस सेक्रेटरी अफिस |
| १८ | श्री दुर्गादत्त | काठमाडौं मजिष्ट्रेट |

सबैसित बेग्ला बेग्लै भेटेर व्यक्तिगत सल्लाह गोप्य रूपले बुझ्नु राम्रो हुने थियो तापनि कमिशनको अगाडि समयको अभाव भएको हुनाले त्यसो गर्न भ्याउन र एक पटकमा घटीमा ३ र बढीमा १२ जना महानुभावसम्मलाई निम्त्याइएको थियो, तैपनि सबैले आफ्नो राय व्यक्त गर्न कुनै अपठेरो र समयाभाव महसूस गर्नुभएको थाहा भएन । सबैनै भेट छलफल बडो हार्दिक वातावरणमा सम्पन्न भएको थियो । यो भेट छलफलको कार्यक्रमबाट कमिशनलाई प्रेस (पत्र-पत्रिकाहरू)को समस्या र त्यसलाई हटाई विकशित तुल्याउने उपायका साथै प्रेस (पत्र-पत्रिकाहरू) र सरकारको सम्बन्ध अझ निकट र घनिष्ट पार्नको लागि कतिपय सुझावहरू सम्बन्धी राय बुझ्नमा धेरै मद्दत मिल्यो र त्यस अर्थमा यो भेट छलफल कमिशनलाई बडो लाभदायक सिद्ध भयो । यसबाट लिखित रूपमा प्राप्त हुन आशा गर्न नसकिने कुराहरूको जानकारी हासिल भएको मात्र होइन, पत्रकारहरू र वुद्धिजीवी लेखक कविहरूको क्षेत्रमा कमिशनको गतिविधि र यसको लक्ष्य प्राप्तीको लागि हार्दिक र सहयोगात्मक वातावरणको सृजना गर्नमा पनि निक्कै सहायक सिद्ध भयो । भेट छलफलमा यसरी देशमा पत्र-पत्रिकाको उत्थानमा विशेष दिलचस्पी देखाउनु नै कमिशन को आमन्त्रण स्वीकार गरी कमिशनलाई आफ्नो बहुमूल्य सहयोग प्रदान गर्नु भएकोमा कमिशन उक्त महानुभावहरू सबैलाई धन्यवाद अर्पण गर्दछ ।



## भेट छलफलबाट प्राप्त सुझावहरूका केही बुँदाहरू

देशको मौजूदा प्रेस (पत्र-पत्रिकाहरू)को आर्थिक स्थिति बहुतै नाजुक छ । यातायातको असुबिधाले अखवारहरूको सरकुलेशन र बिक्री सान्है सीमित, छाप्ने कागजको महङ्गी, बिज्ञापनको कमी तसर्थ आम्दानीको श्रोत कम, खर्चको बाटो धेरै; यी नै कारणहरूले गर्दा अखवारहरूको आर्थिक स्तर ज्यादै तल छ, जसबाट पत्रकारहरूको चाहनाको विरुद्ध पनि अखवारहरूको आकार सानो छ, स्तर निचा छ ।

१. अखवारहरूको आर्थिक स्तर उकास्नको लागि धेरैजसो महानुभावहरूले दिनु भएको राय निम्नप्रकार छ, जसको प्रबन्ध भएमा देशको पत्रकारिताको विकास गर्न सजिलो पर्नेछ भन्ने उहाँहरूको विचार छ ।

(क) न्यूजप्रिण्ट र प्रेस इन्क (मसी) सरकारले झिकाएर परल मोलमा अथवा अझ कम्ती मोलमा घाटा सहेरै भए पनि केही वर्ष को लागि अखवारहरूलाई बिक्री वितरण गर्ने, अथवा कुनै अखवारले आफै झिकाउन चाहन्छ भने उसलाई तत्परताका साथ कोटा र विदेशी मुद्राको सहुलियत दिलाइ दिने, हाल बजारमा एकरीमको ३६।३७ रुपियाँ तिर्न पर्छ, जब कि कोटाबाट न्यूजप्रिण्ट झिकाइएमा त्यही कागज २०।२१ रुपियाँमा पाइने भै प्रचलित मूल्य ५ अथवा १० पैसा प्रति अङ्कमा नै अखवारको आकार प्रकारको बृद्धि गर्नमा ठूलो सुविधा मिल्न जानेछ ।

(ख) अखवारहरूमा सरकारी सचिवालय विभाग र अड्डाखानाहरूको विज्ञापन दिई अखवारहरूलाई सरकारी प्रोत्साहन प्रदान हुन अत्यावश्यक छ, गोरखापत्रमा मात्र सरकारी विज्ञापनहरू प्रकाशित भएर उतिको प्रचार नभई विज्ञापन गरिएका सरकारी काम काजमा प्रचूर मात्रामा फायदा पनि नहुने, सरकारी प्रचार साधन गोरखापत्रमा मात्र छापिएर अरू अखवारहरूले पाउने विज्ञापनको हक पनि खोसिएको हुनाले अखवारहरूलाई सरकारी बिज्ञापन बढीसे बढी मात्रामा तुरुन्तै प्राप्त हुन थाल्नु पर्छ भनी एकै किसिमको स्वरले सबै महानुभावहरूले विचार व्यक्त गरे । तर यसमा केही सज्जनहरूको मत छ कि विज्ञापन अखवारको सरकुलेशन हेरेर मात्र दिइनु पर्दछ ।

(ग) सरकारले अखवारका प्रतिहरू कसैको भनाई अनुसार खास गरी राष्ट्रियतामा बढी जोड दिने खालका अखवारहरू, किनी प्रवासी नेपालीहरू भएको स्थानमा वितरण गर्न पठाइ दिनु पर्दछ । यसबाट अखवारलाई पनि आर्थिक मद्दत हुने, नेपालको प्रचार पनि विदेश स्थित प्रवासीहरूमा हुने हुन्छ ।

(घ) अखवारलाई दिनुपर्ने सरकारी हिसाव अड्डाखानाहरूबाट तुरुन्तै चुक्ति गर्ने व्यवस्था हुनु पनि आवश्यक छ, झुलाई राख्दा अखवारलाई धेरै मुशिकलको सामना गर्नु पर्दछ ।

(ङ) सरकारी सञ्चार र यातायातका साधनहरूमा प्रेस (पत्र-पत्रिकाहरू)ले अन्तर राष्ट्रिय प्रचलन मुताविक सुविधा सहुलियत (Concession) पाउनु पर्दछ भन्ने कसैको राय छ, र कसैको चाहिं टेलिफोन, आकाशवाणीमा अखवारको लागि खबर आदान प्रदान गर्दा अरू सर्वसाधारणको लागि निर्धारित शुल्क भन्दा १।४ अथवा १।५ सम्म घटीको दर निर्धारित हुनुपर्दछ भन्ने राय छ। साथै प्रेस खबर-हरूले सञ्चारको साधनहरूमा प्राधान्यतामा पाउनु पर्दछ भन्ने पनि छ। फेरि कसै कसैको यो पनि सुझाव पाइयो कि रेल, हवाईजहाज र सरकारी बस सर्भिस-हरूमा, अरू मुलुकमा नभए तापनि हाम्रो यहाँ पूर्ण प्रमाणित प्रेस प्रतिनिधिहरूलाई सहुलियत दरमा आवत जावत गर्न पाइयोस्। अखवारहरूका लागि मौजूदा डाँकको टिकट दरको सहुलियतमा सबैले सन्तोष प्रकट गरे। त्यसमा अरू कुनै विशेष सहुलियतको माग गरेनन्, अरू यसमा पोष्टल सर्भिसको तत्परता र सुधारको लागि धेरै जोड दिए, साथै आन्तरिक डाँक सर्भिसमा पनि अडर र भी.पी. को व्यवस्था हुनै पर्छ भनी सुझाव गरे।

२. उपर्युक्त २ दफामा उल्लेखित पाँच उप-दफाका सहुलियतका अतिरिक्त प्रेस (पत्र-पत्रिका-हरू)का कार्यालय, कारखानाहरूमा टेलिफोनको लाइन लगाउने र सो लाइन लगाउन अरू सर्व साधारणले झैं डिपोजिट राख्न नपर्ने र साथै ट्रङ्क लाइनमा कुरा गर्दा पनि विशेष सहुलियत र प्राथमिकता प्राप्त गराउनु पर्दछ भन्ने सबै महानुभावहरूको राय बुझियो।

३. पत्र-पत्रिकाका प्रतिनिधि सम्बाददाताहरूलाई प्रमाण पत्र दिने व्यवस्था हुनु का साथै उनी हरूले सरकारी अड्डाखाना तथा सरकारी कर्मचारीहरूसित सम्पर्क राख्दा विश्वासका साथ सरकारी काम कारवाई सम्बन्धी खबरहरू दिने, स्पष्टीकरण मागिएमा प्रदान गर्ने र सद्भावनापूर्वक व्यवहार प्रदान गर्ने हुनु पर्दछ भन्ने कुरा पनि प्रकट गरे।

४. उपर्युक्त सरकारी सहुलियत, सुविधा कुन स्तरको अखवारहरूलाई प्रदान गर्ने आज निस्क्यो आजैदेखि प्रदान गर्ने कि, कुनै निर्धारित अवधी नाघिसकेको लब्धप्रतिष्ट अखवारहरूलाई प्रदान गर्ने भन्ने कुरामा एक दुईले नेपालमा पत्रकारिताको भरखर श्री गणेश भएकोले अखवार निस्कनासाथ सरकारी सहुलियत प्राप्त हुन आवश्यक छ भनेर अधिकांश महा-नुभावहरूले चाहिं सरकारी सहुलियत, सुविधा प्रदान गर्नको लागि अखवारहरूलाई श्रेणीबद्ध गरेरमात्र प्रदान गर्नु पर्दछ यो श्रेणीबद्ध गर्ने कार्य प्रस्तावित प्रेस सल्लाह समितिको सिफारिश मुताबिक गर्ने यसमा खास गरेर अखवारको अस्तित्वको अवधि (कमसे कम २ वर्ष) जनप्रियता, सरकुलेशन र स्टान्डर्डलाई आधार मानेर निर्णय गर्नु पर्दछ भन्ने राय व्यक्त गरे।

५. प्रेस (पत्र-पत्रिका) हरूले हाल सामना गर्नु परिरहेका मुस्किल र असुविधाहरू माथि विभिन्न प्रकारले छलफल हुँदा धेरै जसो महानुभावहरूले निम्न प्रकारका कुराहरू प्रकट गर्नु भयो।



(क) सबभन्दा पहिले सबैले एकै मुखले जस्तै हाल लागू भै राखको प्रस कानूनको संशोधनको आवश्यकता माथि जोड दिए, खास गरेर ३६ दफा झिक्ने अथवा त्यसको राम्रो व्याख्या हुनुपर्ने कुराको माग गरे। अधिकांशले भरखर भरखर पत्रकारिताको प्रारम्भ हुन लागेको हुनाले यो नराम्रो बाटो तर्फ अग्रसर हुन नदिन उदार प्रेस कानूनको आवश्यकता छ भन्ने कुरालाई स्विकार गरे तापनि कानूनको प्रयोग गर्न अधिकारीहरूको विवेकले राम्रो काम गर्नु पर्दछ र पत्र-पत्रिकाको विकासलाई अवरुद्ध पार्नको लागि हैन कि उसको उन्नतिको बाटोमा आई पर्ने बाधाहरू हटाउनको लागि कानूनको सदुपयोग हुनुपर्दछ र त्यस्तै परम्परा कायम राख्नुपर्दछ। अहिले सम्मको परम्परा प्रचलन यही छ कि नचाहिंदो कुरामा अखवारवालाहरूलाई मेजिष्ट्रेट अफिसले दुःख दिने गरिकोछ।

(ख) अखवारको प्रकाशन प्रारम्भ गर्नको लागि नै मेजिष्ट्रेट अफिसमा हजार रूपैयाँ-सम्म धरौटी (Deposit) राख्नु पर्ने नियमले अखवार निकाल्न चाहनेहरूलाई मर्का पर्दछ। साथै यति पेजको अखवार निकाल्छु भनी कबुलियत गराइनु पनि आर्थिक मजबूरीमा परेका पत्रकारहरूको लागि मर्काको विषय भएको छ।

(ग) पन्ध्र दिन अखवारको प्रकाशन कुनै कारणवश बन्द भयो कि मेजिष्ट्रेट अफिसबाट सधैंको निमित्त बन्द गरिदिन्छ। यो १५ दिनको अवधि एक महिना अथवा ३५ दिनसम्म बढाउनु आवश्यक छ।

(घ) छापाखानाबाट छापिएका कुराहरू पर्चा अथवा किताबको दुई प्रति गृह सचिव-वालयमा बुझाउन जांदा तुरुन्त बुझी नलिने यो दुइ प्रति गृहमा बुझाउने प्रथा हटाइयोस्। राष्ट्रिय स्वार्थका मौलिक कुराहरूमा आपत्तिजनक कुरा छापिएको भएपछि जफत गर्ने र प्रकाशन अवैधानिक घोषित गर्ने र त्यसमा बढी लेखक न जिम्मेदारी गराउने व्यवस्था भएमा प्रेस धनीहरूको हर बखतको त्रास हट्ने थियो। छापाखाना र पत्र-पत्रिकाहरूको लागि छुट्टै कानूनको प्रबन्ध हुनुपर्दछ। प्रेस जफत गर्ने कानूनको धाराको सट्टा कसूर अनुसारको जरिवानासम्म गर्ने कानूनी व्यवस्था हुनु आवश्यक छ। प्रेस जफत हुने त्रासले गर्दा छापाखानाको व्यवसायमा धेरै किसिमले हानि भैरहेको छ।

(ङ) वाहिरबाट छापिएर आएको पुस्तकको १ पैसा भन्सार महसूल लाग्छ, तर छाप्ने कागजको चाहिं एक रूपैयाँ एक रीममा भन्सार महशूल तिर्नु पर्दा कोरामाल माथि यसरी बढी महशूल तिर्नुको मतलव यो छपाईको व्यवसायलाई दुरुत्साह गर्नु जस्तो भइरहेको छ। छपाईको सबै कुरा स्वदेशमा भन्दा विदेशमा बढ्ता पठाउने प्रोत्साहन भैरहेकोबाट देशको प्रेस व्यवसायलाइ ठूलो धक्का पुगेको छ।

(च) नयाँ प्रेस स्थापना गर्न चाहने प्रेसधनि आफै कवुलियत गर्न मेजिष्ट्रेट अफिसमा हाजिर हुन जानु पर्ने उसको कुनै प्रतिनिधि पठाएर न हुने नियममा पनि संशोधन भै अनुकुल कुराहरूको थप हुनु आवश्यक छ।

(छ) नेपालबाट बाहिर पढाउने अथवा पोष्ट अफिसबाट देश भित्रै पनि चलान हुने धेरै अखवारहरू अक्सर हराउने गर्दछ, चाहिए जति चाहिएको दरको टिकट किन्न जाँदा पोस्ट अफिसमा पाईदैन, फेरी टाँसीएको टिकट पनि उप्काइन्छ; यस्तो अनियमितता र वेकाइदा हुनु नपावस।

(ज) टेलिफोन, आकाशवाणीमा अखवारहरूको खबर आदान प्रदान गर्न बडो मुश्किल परिरहेको छ। सरकार विरोधी खबरहरू स्वीकार नै गरिदैन,फेरि खबरको तत्कालीन उपयोगितालाई ध्यानमा राखेर तुरुन्तै अथवा सकेसम्म चाँडो चलान गरिन्न, कयन् दिनसम्म थुप्राई राखिन्छ। यसबाट अखवारको सरकुलेशनमा समेत धक्का पर्न गइरहेको छ। जिल्लाका खबरहरूलाई ताजा रुपमा प्रशस्त स्थान दिन पाइए जिल्लाहरूमा पनि ती अखवारहरूको माग बढ्न सक्तछ।

६. राष्ट्रिय सम्बाद समितिः– नेपालले आफ्नो स्वतन्त्र अस्तित्वको परिचयको लागि पनि एक राष्ट्रिय सम्बाद समिति चलाउनु ज्यादै जरूरी छ, सबैले एकै मुखले यो सम्बाद समितिको गठन र देशव्यापी गतिविधि तुरुन्तै चालु गर्नु पर्ने कुरामाथि जोड दिए। यसको गठन र गतिविधि केही सीमित अवधि ५ वर्ष अथवा त्यो भन्दा बढी आवश्यक समयसम्मको लागि अर्ध-सरकारी रूपमा गर्ने र यसको आर्थिक आवश्यकताको पूर्ति केही सीमित अवधिसम्म सरकारले नै बेहोरिदिनु पर्ने सुझाव पनि प्रकट गरे।

यसमा अर्ध सरकारीरूपले गठन गर्नु पर्ने कुरामा सबैले यही तर्क पेश गरे कि पूर्ण रुपले सरकारी भएमा त्यसमाथि स्वदेशी तथा विदेशी पत्रकार जगतको भावना अकैं पर्न जाने अर्थात् सरकारको निर्देशनमा चल्ने एक सरकारी प्रोपगण्डाको साधन जस्तो मात्र भान पर्न जाने र पूर्ण रूपले गैर सरकारी हुंदा देशको वर्तमान परिस्थितिमा सफलतापूर्वक चल्न मुस्किल पर्ने हुनाले यसको गठन र गतिविधि मध्यम मार्ग अर्ध-सरकारी रूपमा हुनु आवश्यक छ। आर्थिक मद्दतको लागि पेश गरिएको तर्कमा हाल सम्बाद समिति चलाउन आवश्यक रकम आर्थिक कमजोरीले सताइएका अखवारहरूले मात्र बेहोर्न नसक्ने र अरू पूंजीपतिहरूको पूंजी लगाउने व्यवसाय बनाउदा यसको पवित्रतामा आँच आउने हुनाले सरकारले आवश्यक सबै खर्च बेहोरिदिनु पर्ने भएको हो। पछि यसलाई आत्म-निर्भर बनाउँदै लगेर सरकारी अनुदान कम गर्दै लगेमा यसको सञ्चालन दिगो र शुद्ध रहन सक्नेछ।



७. प्रेस सल्लाहकार बोर्डः– एक दुइ जनाले यसको आवश्यकता छैन भने तापनि अत्यधिक महानुभावहरूले यसको आवश्यकता माथि जोड दिए। यसको अस्तित्व सल्लाहकार कै रूपमा मात्र हुने हो तापनि यसबाट सरकार र पत्र-पत्रिकाको सम्बन्ध हरबखत घनिष्ट र निकट पारी राख्नमा ठुलो नैतिक बल प्राप्त हुनेछ। यी दुवैको बीचमा आउने कटूतालाई यसले नैतिक प्रभावबाट हटाउन निकै मद्दत गर्न सक्नेछ। यसमा गैर सरकारी सदस्यहरूको बहुसंख्या र पत्रकारहरूका अतिरिक्त बुद्धिजीवी लेखक कवि साहित्यकारहरूको समेत प्रतिनिधि भएमा झन् राम्रो हुनेछ।

कसैको विचारमा यसलाई कानूनी शक्तिहरू पनि प्रदान गर्ने र कसैको चाहिं यसबाट प्रेससम्बन्धी गोलमाल उठ्दा उजुरीको प्रबन्ध गर्ने विचार पनि बुझियो। यस सम्बन्धी छलफलबाट हामीले यही बुझ्यो कि यसको आवश्यकता, उपयोगिताको सवालभन्दा पनि यसलाई राम्ररी काम गर्न दिनु बहुतै सामयिक र जरूरी छ भन्ने उहाँहरूको विचार रहेछ। यसको गठन र गतिविधि तुरून्तै शुरू गरिहाल्नु पर्ने आवश्यकता देखियो, किन भने यसैले अखवारहरूलाई सरकारी सहुलियत प्रदान गर्नु भन्दा पहिले तिनीहरूको श्रेणीबद्ध गर्ने, अखवारवालाहरूको योग्यताको वर्गीकरण गर्ने, सरकार र पत्र-पत्रिकाहरूको सम्बन्धलाई निकट र घनिष्ट तुल्याउने, सरकार र पत्रकारहरू दुवैलाई बराबर आवश्यक सल्लाह परामर्श दिने काम शुरू गरिहाल्नु परेको छ।

८. प्रेस धनीहरूको एउटा यो पनि शिकायत सुनियो कि बिजुलीको सप्लाई आवश्यक समयमा नहुँदा प्रेस व्यवसायमा ठूलो धक्का पुगेको छ। ठुला ठुला प्रेस मेशीनहरूमा धेरै भन्सार महशूललिने गरेबाट क्यापीटलगुड्स पैठारीगर्नमा निरूत्साह गरीएको जस्तो भइरहेको छ।

९. भेट छलफलमा प्राप्त अरू विविध सुझाव सल्लाहहरू मोटामोटी तवरले यसप्रकार छन्ः–

(क) जर्नालिज्मको एक स्कूल अथवा कलेजको स्थापना गरियोस् अथवा तत्काललाई त्रि-चन्द्र कलेजमा जर्नालिज्मको कोर्स राखियोस्।

(ख) जर्नालिज्मको हर वर्ष १।२ जना पत्रकारहरूलाई तालिम दिन कोलम्बो प्लानको छात्रवृत्तीमा विदेशमा तालिम लिन पठाइयोस्।

(ग) प्रेस छापाखानाको उन्नतिको लागि नेपाल ब्याङ्क अथवा राष्ट्र बैंकले छापाखाना धितोमा लिएर भए पनि आर्थिक मद्दत गरोस्।

(घ) सरकारका छापिने वस्तुहरू बाहिर पठाउने नगरी स्वदेशकै प्रेसहरूलाई दिनु गर्नु पर्दछ।

(ङ) गोरखापत्रलाई बन्द गरेर त्यसमा लागि रहेको सरकारी खर्चलाई सम्बाद समितिमा लगाए जाति हुनेछ।

(च) सरकारले साहित्यिक र सांस्कृति पत्रिकाहरूको प्रकाशन गर्ने गरेमा स्थायी हुनुका साथै प्रचार कार्य पनि हुनेछ।

(छ) सरकारी छापाखानाहरूले सस्तो मूल्यमा गैर सरकारी अखबारहरू छापिदिने पनि गर्नु पर्दछ ।

(ज) बाहिर प्रवासी नेपालीहरूले निकाली राखेका राष्ट्रिय भावनाले प्रेरित नेपाली अखबारहरूलाई पनि सरकारले प्रोत्साहनको रुपमा विज्ञापन दिने र उनीहरूको प्रतिहरू किनी दिने गर्नु पर्दछ ।

(झ) पत्रकारिता भन्नासाथ भाषाको पनि प्रश्न उठ्ने हुनाले भाषा परिमार्जनको लागि एउटा राम्रो व्याकरणको पनि प्रबन्ध हुनु आवश्यक छ समाचारको आदान प्रदान नेपाली भाषामा हुनुपर्दछ ।

(यं) अखबारहरू निकाल्नु भन्दा पहिले न्यूनतम शर्तहरूको पालना गर्ने कबुलियत हुनु पर्दछ । दृष्टान्तको लागि कमसे कम चार पेजको अखबार कुनै निश्चित साइजको निकाल्छु भन्ने शर्त । यसबाट अखबारको स्तर कायम रहनेछ र साथै गैर जिम्मेदारी तवरले अखबार निकाल्ने झुकाव बन्द हुनेछ ।

(ट) प्रेस कानूनमा राष्ट्रियताको बचावटका लागि कुनै दफा छैन, त्यसको राम्रो व्यवस्था हुनु आवश्यक छ ।

(ठ) स्वदेशमा छापिएका पुस्तकहरू गृह मन्त्रालयम बुझाउनु पर्दछ, तर बाहिर छापिएर आएका चाहिं बुझाउनु पर्दैन, यो अनियमिततालाई तुरुन्त हटाउनु आवश्यक छ ।

परिच्छेद–३

## प्रेस (पत्रपत्रिका)हरूको कार्यालय कारखाना निरीक्षण

देशको मौजूदा प्रेस (पत्र-पत्रिका) हरूको वास्तविक स्थितिको अध्ययन र तथ्याङ्क सङ्कलन कार्यको अन्तिम कार्यक्रम अन्तरगत कमिशनका अध्यक्ष र सदस्यहरूद्वारा स्थानीय प्रेस (पत्र-पत्रिका)हरूको कार्यालय कारखानाहरूमा गई निरीक्षण गरियो । वीरगञ्जमा कमिशनका सदस्य डेपुटी सेक्रेटरी श्री जीवनाथ लोहनी र विराटनगरमा गैर सरकारी सदस्य श्री गोपालदास श्रेष्ठलाई उक्त कार्यको लागि पठाइएको कुरा माथि नै उल्लेख भैसकेको छ । स्थानीय निरीक्षण कार्य ३ पटक गरी पूरा गरिएको थियो, जसमा विभिन्न महत्वका बढीसे बढी कार्यालय कारखानाहरू हेर्ने काम भयो ।

काठमाडौं मैजिष्ट्रेट अफिसबाट प्राप्त प्रेसहरूको लगत यस प्रकारको छः–

| क्र. सं. | प्रेसको नाम | प्रेस धनीको नाम | इजाजत पाएको मिति |
|---|---|---|---|
| १. | लोक प्रेस | श्री धर्मरत्न शाक्य, लगन | २०१०।११।१३ |
| २. | वागीश्वरी प्रेस | श्री ज्ञानरत्न बज्राचार्य, लायकुसाल | ०९।४।१०।६ |
| ३. | जोरगणेश प्रेस | श्रीऋद्धिबहादुर मल्ल, पाको | ०९।४।१२ |
| . | नेपाल प्रेस | श्रीपुष्परत्न सागर, त्यौड | ०९।४।१०।६ |
| ५. | अन्नपूर्ण प्रेस | श्रीधर्महर्ष बज्राचार्य, असन | ०९।४।१२।१ |
| ६. | पशुपति प्रेस | श्रीपशुपतिदेव पाण्डे, फसिकेव | ०९।४।१२।१ |
| ७. | नेपाल टुडे प्रेस | श्रीसत्यनारायणबाहादुर, पाको | |
| ८. | हिमहारती प्रेस | श्रीगणेशमान श्रेष्ठ, हुछेदलाछी | ०९।७।६।४ |
| ९. | भगवती प्रेस | श्रीसूर्यभक्त जोशी, ठहिटी | ०९।७।१।६ |
| १०. | हिमालय प्रेस | श्रीसकलानन्द वज्राचार्य, ओमबहाल | ०११।८।१८।६ |
| ११. | आनन्द प्रेस | श्रीआनन्दप्रसाद ढुङ्गाना, प्याफल | ०११।८।२७ |
| १२. | काठमाडौं प्रेस | श्री पुण्यहर्ष बज्राचार्य | ०११।९।५ |
| १३. | जगतउद्धार छापाखाना | श्रीजगतमुनी बज्राचार्य, ओमबहाल | |
| १४. | विजय प्रेस | श्रीलीलामानसिंह बस्नेत, डिल्लीबजार | ०१२।६।२८ |
| १५. | नेशनल प्रिन्टिङ्ग प्रेस | श्रीमणिराज उपाध्याय, जुद्धसडक | ०१२।८।६ |
| १६. | सरस्वति प्रेस | श्रीच्वसापासा (प्रेमबहादुर कसाकार), कोहिटी– जैशीदेवल | ०१२।१२।११ |
| १७. | नरेन्द्रयन्त्रालय | श्रीनरेन्द्रप्रसाद रेग्मी बागबजार | ०१३।१०।१८ |
| १८. | कमनर्स एलाइड प्रेस | श्रीजयेन्द्रबहादुर थपलिया, पाको | ०१३।११ |
| १९. | कल्पना प्रेस | श्रीतारणीप्रसाद कोइराला | ०१३।११।११ |
| २०. | सहयोगी प्रेस | श्रीरमेशकुमार शर्मा, भोटाहिटी | ०१३।१२।१६ |
| २१. | गोपाल प्रेस | श्रीगोपालतामाङ, डिल्लीबजार | ०१४।२।२३।४ |
| २२. | प्रकास प्रेस | श्रीजानकीलाल प्रधान, न्ह्योखा | ०१४।४।१८।६ |
| २३. | पञ्चकुमारी स्टेशनरी एण्ड प्रिन्टिङ्ग वर्क्स | श्रीपूर्णलाल बज्राचार्य, फसिकेव | ०१४।६।६।१ |
| २४. | महालक्ष्मी प्रेस | श्रीरंगनाथ शर्मा, कमलपोखरी | ०१४।६।११।६ |
| २५. | मणिका प्रेस | श्रीमणिन्द्रराज श्रेष्ठ, प्यूखा | ०१४।८।२।१ |
| २६. | पी. आर. सापकोटा एण्ड सन्स लिमिटेड ब्लक, | श्रीगोपीराज सापकोटा मेकर प्रिन्टर पब्लिसर्स एण्ड बुक डिल्लीबजार, सेलर्स । | स.पु.गो.बाट ईजाजत दिइएको तर त्यस अफिसमा अहिलेसम्म कुनै काम नभएको । |

उपर्युक्त २६ वटा प्रेसहरू मध्ये जम्मा सरकारी प्रेस समेत गरी १७ वटा प्रेसका कार्यालयहरूको कमिशनले निरीक्षण गऱ्यो । तिनीहरूको नाम यस प्रकार छः–

| | | |
|---|---|---|
| १. बागेश्वरी प्रेस | २. जोरगणेश प्रेस | ३. नेपाल प्रेस |
| ४. अन्नपूर्ण प्रेस | ५. पशुपति प्रेस | ६. नेपाल टुडे प्रेस |
| ७. भगवती प्रेस | ८. हिमालय प्रेस | ९. नेशनल प्रिन्टिङ्ग प्रेस |
| १०. नरेन्द्र यन्त्रालय | १. कमनर्स एलाईड प्रेस | १२. कल्पना प्रेस |
| १३. पञ्चकुमारी प्रेस | १४. महालक्ष्मी प्रेस | १५. मणिका प्रेस |
| १६. विजय प्रेस | १८. गोरखापत्र छापाखाना । | |

अरू स्थानका प्रेसहरूको (थाहा भएसम्मको) नाम

ललितपुरमा (१) विश्व बन्धु प्रेस– यो प्रेस निरीक्षण कमिशनले गरेको थियो।

विराटनगरमा:– १, चन्द्र प्रिन्टिङ्ग प्रेस, २, लक्ष्मी प्रिन्टिङ्ग प्रेस– कमिशनका सदस्य खटिई गई निरीक्षण भयो।

बुटौल बजारमा:– १, निर्मल प्रिन्टिङ्ग प्रेस
पाल्पामा:– २. लाकौल प्रेस
आकाशबाणीद्वारा वार्तालाप गरी परिस्थिति अवगत भएको।

विरगञ्जमा:– १. दुर्गा प्रेस – कमिशनका सदस्य खटिई गई निरीक्षण भयो।

कमिशनका अध्यक्ष र सदस्यहरू निरीक्षण गर्न जानु हुँदा प्रेस धनी र कामदारहरूले बडो हार्दिक स्वागत गरी आफ्नो भए भरको सबै मेशिन,औजार, सरसामान राखिएको स्थानहरू, गतिविधि राम्ररी देखाए; साथै सोधिएका प्रश्नहरूको राम्रो उत्तर दिई सबै कुराको स्पष्ट रूपले वर्णन गरे।

छापाखानाहरूको निरीक्षणबाट हामीहरूले देखेको, थाहा पाएको र अनुभव गरेको कुरा हरूलाई मोटामोटी हिसावले तीनवटा शीर्षक अन्तर्गत वर्णन गर्न सकिन्छ।

(१) स्थिति
(२) कामको परिणाम
(३) व्यवस्था

(१) स्थिति (Condition):– जति पनि हामीहरूले निरीक्षण गर्‍यौं, दुई चार वटा छोडेर, अरू प्रेस (छापाखाना) हरूको स्थिति सन्तोष जनक पाउन सकेनौं। अधिकाँश प्रेसहरू प्रेस धनीका घरको छिडीमा राखिएको, कम्पोजिङ्गका केशहरू त घरका कोठा कोठामा अव्यवस्थित रूपले राखिएका रहेछन्।घरका जहानहरू समेत राम्ररी हिडडुल गर्न मुस्किल पर्ने गरी राखिएका ती कम्पोजिङ्ग केशहरू र बाहिरबाट जाने ग्राहकहरूको बराबर जमघट लागि रहेबाट घरका परिवारहरूको स्वास्थमा समेत नराम्रो असर पर्न जाने सम्भावना देख्यौं। प्रेसको काम अथवा व्यवसाय नै अलि फोहर मैला हुन्छ, झन् त्यसमाथि त्यसरी आफू बस्ने घरभित्रै काला मैला सरसामानहरू कोचेर राख्दा त्यसबाट जनस्वास्थ्यमा कति हानि पुर्‍याउँछ, त्यो स्पष्ट छ। अधिकाँश प्रेसहरू जुन भित्र गल्ली र चिसो छिडीमा जडान गरिएका छन्, त्यसमा काम गर्ने कामदारहरूको स्वास्थ र अवस्था दयनीय हुनु स्वाभाविकै छ। त्यसमाथि सुघर सफाईको विशेष ख्याल नरहनु त झन् नराम्रो भन्न सकिन्छ।

यसरी घरका छिडीहरूमा प्रेस राखिनुमा पनि कारणहरू अवश्य छन्। शुरूमा प्रेस धनीले आफ्नो अरू व्यवसायमा थप एक दुईवटा ट्रेडल अथवा हायन्ड प्रेस राख्ने सौखमै सेकेन्ड हायन्ड अथवा थर्ड हायन्ड प्रेसहरू किनेर ल्याई आफ्नो सानो खेर गैराखेको छिडीमा जडान गरे, अनिपछि मेशिनहरू बढ्दै गयो, त्यही भएसम्मको ठाउँमा कोचेर राख्दै लगे, त्यसको परिणाम स्वरुप ८।१० वर्ष पछि आजको हालतमा हामी देख्छौं, प्रेस व्यवसाय विलकुलै व्यक्तिगत रूपमा चलिरहनु, को अपरेटिङ्ग ढङ्गले विस्तृत रूपमा नचलाउनु र आफ्नो घरबाट टाढा खुला ठाउँमा



प्रेस राखेर चलाउने साधन र व्यवस्था जुटाउन नसक्नुबाटै यसरी झन् यो व्यवसाय संकुचित र आफ्नै घरको छिडीमा सीमित र एकलित हुँदै गइरहेको छ।

प्राप्त तथ्याँकबाट यो स्पष्ट देखिएको छकि २००७ सालको परिवर्तन पछि देशमा प्रेस र छपाईका कामहरू अपनो अत्यधिक बढेको छ। यो बढ्दो व्यवस्थाको शुद्ध आधारमा बसाल्नु बहुतै जरूरी छ। यसमा सबै प्रेस धनीहरूले आपनो व्यवसायको उन्नति र अभिवृद्धिको लागि सामूहिक दृष्टिकोण अपनाउन जरूरी छ।

(२)कामको परिमाण (Volume of Works)प्रेसलाई जेनतेन चालू राख्नको लागि छपाईका कामहरू सबै ले जेनतेन पाइनै राखेको छन् तापनि आपनो प्रेसबाट जति फाइदा हुनुपर्ने हो त्यति कामको अभावले गर्दा सबै प्रेस धनीहरूले फाइदा उठाउन सकिरहेका छैनन्। यसमा एक दुई ठूला ठूला प्रेसहरू अपवाद हुन सक्लान् तर अधिकाँशको यही हालत छ। अनेकौं नाम धारण गरी छरिएका साना साना प्रेसहरूले उत्तिकै अनुपातमा काम नपाउनु पनि कुनै आश्चर्यको कुरा होइन, जति जति यसरी छरिंदै गए, उति उति भए जति काम पनि बाँडिदै जाँदा पुग्ने जति काम कसैले पनि नपाउने हुँदै जानु कुनै अस्वाभाविक होइन। त्यसमा पनि विजुलीले चल्ने छापाखाना-हरूलाई चाहिने बेलामा चाहिंदो विद्युत शक्ति प्रदान नहुनु, दक्षतापूर्ण कम्पोजिटर र प्रेस मेनहरूको अभाव र कहिले काहीं चाहिंदो र परल मोलमा छाप्ने कागजको अभावले गर्दा प्रेस धनीहरूले पाएको काम पनि कति गुमाउनु पर्ने हुन आउँछ। दृष्टान्तमा १।२ प्रेस धनीहरूको यही भनाई थियो कि पहिलो अर्थात् २००७ सालभन्दा अघि उहाँहरूको प्रेसलाई मनग्ने काम आउदथ्यो, तर अब धेरै प्रेस भैसकेकोले पुग्ने गरी काम पाइँदैन। छपाईको कामभन्दा छाप्ने कल बढ्दै जानु अथवा छरिएर रहन जानुबाट झन् यो व्यवसायले घाटा सहन पर्दै जानु कुनै अस्वाभाविक हैन। यस्तै रफ्तार बढ्दै जाने हो भने एक दिन त्यस्तो पनि पर्न आउन असम्भव छैन, जुन दिन प्रेस धनीहरू आफ्नो खिया परेको प्रेस मेशिनमा दल्ने तेलको मोल समेत उठाउन असमर्थ हुनेछन्।

(३) व्यवस्था (Management) बारे:– नेपालमा जति प्रेस छापाखानाहरू छन् सबै नै व्यक्तिगत सम्पत्तिको रूपमा चलिराखेका छन्। तसर्थ यसको व्यवस्था पनि विलकुलै व्यक्तिगत र आफ्नो आफ्नो ढङ्गमा छ। कमिशनले छापाखानाहरूको निरीक्षण गर्दा यस्तो सम्म पनि देख्यो कि कुनै छापाखानामा प्रेस धनी आफै र आफ्ना परिवारका सदस्यहरू ४ जनाले नै कम्पोजिङ्ग देखिन डेलीभरीसम्म पनि आफ्नै हातले गर्ने गरेको र बाहिरिया एकजनासम्म पनि काममा नलगाइएको रहेछ। धेरैजसो छापाखानामा तल्लो श्रेणीका कामदारहरू जसमा कम्पोजिटर, पेज बाँध्ने, ढाल्ने, प्रेस चलाउने र पिउनहरूलाई तलबमा ज्याला ठेक्कामा काम लगाइए बाहेक कामको खटनपटन रेखदेख गर्ने, व्यवस्था मिलाउने यावत काम प्रेस धनी आपनै वा आपना परिवारका सदस्यहरूले नै गर्ने गरेका छन्। यसकारण मौजूदा प्रेस छापाखानाको व्यवस्था विलकुलै व्यक्तिगत सञ्चालन भैरहेको हुनाले यो मुद्रण व्यवसायको व्यवस्थाले सुव्यवस्थित सार्वजनिक व्यवसायको रूप विलकुलै लिन सकेको छैन।

प्रेस मेशिनको विवरण:– अधिकाँश छापाखानाहरूमा ट्रेडल मेशिनहरू नयाँ पुरान विभिन्न प्रकारका छन् तापनि कतिपय छापाखानाहरूमा विजुलीकै चल्ने फ्लायट प्रेस मेशिनहरू

पनि छन् । फ्लायट मेशिनहरूमा अधिकाँश जापानी मेशिनहरू रहेछन्  जोरगणेश प्रेसले विजुलीले चल्ने आफ्ना फ्लायट प्रेसहरूमा थप हालै रंगीन छपाईका प्रेस मेशिनहरूको पनि स्थापना गरेको रहेछ, जुन नेपालमा हाल सर्वप्रथम भएको हुनाले विशेष उल्लेखनीय छ । फ्लायट प्रस भएका केही छापाखानाहरू विजुली सप्लाईको कमीको सामना गर्न आफ्नो प्रेस चालू राख्नको लागि जेनरेटर पनि राखेका रहेछन् । कुनैले त फ्लायट प्रेसलाई बीच बीचमा हातेशक्ति (Man Power)ले पनि चलाई काम लिएको देखियो । ट्रेडल प्रेस एक दुईवटा राखेर पनि कुनै कुनै छापाखानाहरूले बडो दक्षतापूर्वक आफ्नो व्यवसाय चलाइराखेको पनि कमिशनले देख्यो । कुनै कुनै छापाखानाहरूमा छपाईको अतिरिक्त साधारण ब्लक बनाउने, रबर स्टाम्प बनाउने, टाइप काष्टिग गर्ने आदि कार्य पनि हुनेगरेको रहेछ ।

पत्रपत्रिकाहरूको कार्यालय निरीक्षण

प्रेस (पत्र पत्रिका)हरूको कार्यालय कारखानाको वस्तुस्थितिको अध्ययनका लागि गरिएको निरीक्षणको सिलसिलामा कमिशनका अध्यक्ष तथा सदस्यहरूद्वारा स्थानीय पत्रपत्रिकाहरूको अफिस कार्यालयहरूको पनि निरीक्षण गरियो र सम्पादक, प्रकाशकहरू सित कुराकानी भयो । पत्रपत्रिकाका संपादक, प्रकाशकहरूले कमिशनलाई आफ्नो कार्यालयमा हार्दिक स्वागत गरी आफ्नो कार्यालयको अवस्था र गतिविधि सबै राम्ररी देखाउनु भयो र साथै आफ्ना कठिनाईहरू पनि बताउनु भयो ।

कमिशनले निरीक्षण गरेका पत्रपत्रिकाहरूको नाम यस प्रकार छ

| | | |
|---|---|---|
| १. नेपाल समाचार | नेपाली दैनिक | पाको |
| २. कमनर | अंग्रेजी दैनिक | पाको |
| ३. जनता | नेपाली दैनिक | पाको |
| ४. नयाँ समाज | नेपाली दैनिक | फसिकेव |
| ५. समाज | नेपाली दैनिक | फसिकेव |
| ६. मदरल्याण्ड | अंग्रेजी दैनिक | प्यूखा |
| ७. गोरखापत्र | हप्तामा तीन पटक प्रकाशित हुने | जुद्ध सडक |
| ३. कल्पना | नेपाली दैनिक | नागपोखरी नक्साल |
| ९. हालखवर | नेपाली दैनिक | कमल पोखरी |
| १०. नेपाल टाईम्स | हिन्दी दैनिक | जुद्ध सडक |
| ११. नेपाल भाषा पत्रिका | नेवारी दैनिक | खिंल |
| १२. स्वतन्त्र समाचार | नेपाली दैनिक | बाग बजार |

साप्ताहिक, मासिक र त्रैमासिक पत्रिकाको कार्यालयहरूको निरीक्षण गर्ने अवसर समयाभावले गर्दा प्राप्त गर्न असमर्थ भएकोमा कमिशनलाई अवश्य खटकेको छ । तर ती



पत्रिकाहरूको प्रतिनिधिहरू सितको भेट, छलफल र दैनिक पत्रहरूको कार्यालय निरीक्षणबाट कमिशनले उनीहरूको स्थितिको राम्ररी अनुभव गर्न सकेको छ ।

अफिस कार्यालयहरूको स्थिति

एक दुई दैनिक पत्रिकाहरूका सम्पादकहरूले कार्यालयहरूको काम आफ्नो घरकै कोठाहरूबाट चलाई राखेका छन् तापनि अधिकांश दैनिक पत्रपत्रिकाहरूको कार्यालय बहालमा कोठा लिई चलाईएको छ । सबै जसो अखबारका अफिसहरू आर्थिक कठिनाईको बाबजुद पनि राम्रैसित राखिएका छन् भन्नु पर्दछ । २–३ वटा एडिटर्स डेक्स र टेवलहरू, ८।१० वटा मेच, २।४ वटा दराज, रेफ्रेन्स किताबहरू, भित्तामा नक्सा, क्यालेण्डरहरू र विभिन्न अखवारका फाईलहरू र अरू दैनिक कार्यको लागि आवश्यक स्टेशनरी सामानहरू सबैजसो कार्यालयमा राखिएका छन् । अखवारहरूको आकार प्रकारलाई हेरेर प्रत्येक अखवारको कार्यालय यत्तिको हुनु सन्तोषजनक नै भन्नु पर्दछ ।

परिच्छेद ४

## प्रेस (पत्र पत्रिका तथा छापाखाना) सम्बन्धी तथ्याङ्क विवरण

प्रेस कमिशनद्वारा देशको पत्रकारिताको विकासका सम्बन्धमा सुझाव रिपोर्ट तैयार पार्न मौजुदा प्रेस पत्रपत्रिकाहरूको जुन तथ्याङ्क विवरणको सँकलन गरिएको थियो, त्यसको मजबून पनि यस रिपोर्टमा समावेश गरिएमा वस्तुस्थितिको बोध हुन गई पत्रकारिताको विवरण प्रस्तुत विकासको लागि उठाइने कदमहरूमा एक पथप्रदर्शक सावित हुन जाने भएको हुनाले यो तथ्याङ्क गरिएको छ ।

यो तथ्याङ्क पूर्ण रूपले लिखित उत्तरमा मात्र आधारित नभै मौलिक परामर्शको अनुमानको आधारमा पनि आधारित छ । त्यसो गर्नु परेको कारण सबै पत्रपत्रिकाहरू र छापाखानाहरूबाट प्रश्नावलीको लिखित उत्तर प्राप्त हुन नसकेको हुनाले हो ।

प्रेस कमिशनको प्रेस (पत्रपत्रिका) सम्बन्धी प्रश्नावलीको उत्तर भरेर पठाएको पत्रपत्रिकाहरूको नाम यस प्रकार छः

| संख्या नाम | संख्या | नाम |
|---|---|---|
| १. भूगोल पार्क | ९ | नवीन शिक्षा |
| २. जन चेतना | १० | गोरखापत्र |
| ३. इयाली | ११ | बसुधा |
| ४. राष्ट्रवाणी | १२ | शारदा |
| ५. पञ्चायत | १३ | नयाँ समाज |

६. एजुकेशन १४ नेपाल भाषा पत्रिका
७. कर्मवीर १५ संयुक्त प्रयास
८. लेवर बुलेटिन १६ नेपाल टाईम्स

लिखित तथ्याङ्क पठाएका पत्रहरूमा समाचार पत्रहरूमध्य ग्राहक संख्या २००० माथिको एक, ५०० देखि १५०० सम्म दुई र बाँकी ५०० भन्दा कम र फुटकर बिक्री समेत गर्दा पत्रिकाको सर्कुलेशन ३००० माथिको एक र बाँकी सब ५०० भित्र पर्न आउँछ। यस बाहेक तथ्याङ्क कमिशनलाई नपठाएका समाचार पत्रहरूको पनि ग्राहक र फुटकर बिक्री गरी सालाखाला सर्कुलेशन कमिशनले थाहा पाए अनुसार ५०० भित्र नै पर्न आउँछ।

साहित्यिक पत्रिकाहरूको ग्राहक संख्या चाहि धेरै जसोको ५०० भन्दा कम नै देखिन्छ। आर्थिक स्थितिमा एक दुई पत्र बाहेक सबैको आमदानीभन्दा खर्च ज्यादा नै भैरहेको छ। पत्र संचालकका स्टाफमा संपादक प्रकाशक सञ्चालकतर्फ सबैजसो पत्रहरूको ४ देखि ८।१० जनामै सिमित देखिएको छ।

हाल चालु पत्रपत्रिकाको विवरण

| पत्र पत्रिका | संख्या | साधारण सर्कुलेशन ग्राहक तथा फुटकर बिक्री | | | |
|---|---|---|---|---|---|
| | | ३०००भन्दा बढी | १५ सयदेखि ३००० सम्म | ५ सय देखि १५ सयसम्म | ५ सयभन्दा कम |
| दैनिक | ११ | – | – | ८ | ३ |
| अर्ध साप्ताहिक तथा हप्तामा ३ पटक | २ | १ | – | १ | – |
| साप्ताहिक | ९ | – | ३ | ४ | २ |
| पाक्षिक | १ | – | – | – | १ |
| मासिक | ६ | – | – | – | ६ |
| अरू | २ | – | – | – | २ |

छापाखाना

देशमा पत्रकारिताको विकासको छापाखानाको स्थितिसंग निकट सम्बन्ध भएकोले छापाखानाको स्थिति संचालन विषय पनि जानकारी प्राप्त गर्न छापाखाना उद्योगमा लागेका व्यक्तिहरू संग भेट छलफल, छापाखानाहरूको निरीक्षण, प्रश्नावलीहरू पठाएर जानकारी प्राप्त गर्न तथा देशका विभिन्न स्थानमा कमिशनका प्रतिनिधिहरू पठाएर पनि कमिशनले छापाखाना विषय केही अध्ययन गरेको कुरा कमिशनको गतिविधिमा उल्लेख गरेका छौं। देशका छापाखानाहरूमा प्रेसको कामदारहरूले ८ देखि १५ घण्टासम्म काम गर्दा रहेछन्। विशेष गरेर काठमाडौंमा छापखानाका कामदारहरूको एक वर्ग नै खडा भई सकेको छ।



प्रेस कमिशनको प्रेस (छापाखाना) सम्बन्धी प्रश्नावलीको उत्तर भरेर पठाएका छापाखानाहरूको नाम यस प्रकार छः–

| संख्या नाम | संख्या नाम |
|---|---|
| १. गोरखापत्र छापाखाना | २. पंचकुमारी प्रेस |
| ३. नरेन्द्र यन्त्रालय | ४. नेपाल प्रेस |
| ५. अन्नपूर्ण प्रेस | ६. लक्ष्मी प्रींटिंग प्रेस (विराटनगर) |
| ७. काठमाडौं प्रेस | ८. पशुपति प्रेस |
| ९. बागीश्वरी छापाखाना | १०. निर्मल प्रिंटिंग प्रेस (बुटवल) |
| ११. जोर गणेश प्रेस | १२. लाकौल प्रेस (तानसेन पाल्पा) |
| १३. सहयोगी प्रेस | |

नेपालका छापाखाना उद्योगको एक झलक

| | काठमाडौं | ललितपुर | विराटनगर | बुटौल | पाल्पा | वीरगञ्ज |
|---|---|---|---|---|---|---|
| संख्या | २७ | १ | २ | १ | १ | १ |
| पावरले | १२ | – | २ | – | – | – |
| दैनिक पत्र छाप्ने प्रेस | ९ | – | – | – | – | – |
| प्रेस कामदारहरू | ४३४ | १० | २२ | ८ | ६ | – |

परिच्छेद ५

## प्रश्नावलीको उत्तरका बूँदाहरू

प्रेस (पत्रपत्रिका) को विकास तथा सरकारसंग अझै घनिष्ट पार्ने राय सल्लाह प्राप्त गर्न प्रेस कमिशनद्वारा वितरण गरिएका प्रश्नावलीको प्राप्त राय सल्लाहको जगमा नै रिपोर्ट को सृजना हुन गएकोले ती प्राप्त रायसल्लाहको विषयमा फेरि उद्धृत गरिरहनु पर्ने जरूरतता देखिदैन। तथापि धेरै जनाको राय प्राय एकै राय सल्लाह मिलेको सामन्जस्य विचारको सूक्ष्मरूप दिनु पनि बेसै हो भनी कमिशनले महसूस गरेकोले प्रेस कमिशनको २१ प्रश्नको प्राप्त बहुमतको राय सल्लाहको केही बूंदाहरूको तल लेखिए बमोजिम मजबुन उतारिएको हो, आफ्नो बहुमूल्य समय खर्च गरी कमिशनलाई राय सल्लाह पठाउने देहायका महानुभावहरूलाई यो कमिशनले धन्यबाद नदिई रहन सक्तैन।

(१) राष्ट्रियताको जगबाट हुर्किदै गएको अन्तर्राष्ट्रियताको तथ्य संझाएर प्रत्येक नेपालीलाई विश्वशान्ति र जनहितको रक्षकत्वको गौरवानुभव गर्न सक्ने विवेकशील तथा बुद्धिमान

नागरिक बनाउन र प्रजातन्त्रको सर्वांगीण विकासको निमित्त पत्रकारिताको सहयोग अत्यावश्यक मात्र होइन कि अहिले यसको अवस्था विकसित नभए पनि प्रजातन्त्रको प्रमुख स्तम्भ विचार स्वतन्त्रता तर्फ जनतालाई निर्देशित गर्न वर्तमान नेपालमा पत्रकारिताको स्थान अत्यन्त महत्वपूर्ण छ ।

(२) दलगत स्वार्थ वा संकुचित विचारधारा रहित व्यापक, राष्ट्रिय हितको दृष्टिकोणको आधारमा निष्पक्ष प्रगतिशील एवं उदारनीति अनुशरण गर्दै दिइने चोखो खबर, कुशल साहित्य, एवं दुरदर्शितापूर्ण ऐतिहासिक वा सामयिक लेख, विवेचना तथा प्रत्यालोचनालाई स्वच्छ पत्रकारिता भन्न सकिन्छ ।

(३) विदेशमा मोतीराम भट्टले संवत् १९४५ मा गोरखा-भारत जीवन र स्वदेशमा १९५८ बैशाख २४ गते गोरखापत्र (साप्ताहिक) देखि पत्रकारिता शुरूभई विभिन्न दृष्टि र क्षेत्रमा पत्रपत्रिका उन्नी आजको नेपालमा पत्रकारी जगत निकै बाक्लो भईसकेको छ।

(४) देशव्यापक अझै हुन नसकेको र पत्रपत्रिका पूर्णमय अंग परिपूर्ण भई नसकेकोले जनताको अभिरूचिलाई परिमार्जित पार्न सकेको छैन तापनि तिर्खाएको प्यास केही मात्रामा बुझाई दिएकोछ ।

(५) गहकिलो गहुँ र गहिरोमा हुने हुदा त्यसपट्टि बुझ्न र बोक्नको दुखले हलौं सनसनीदारको नै प्राय पत्रपत्रिकामा प्रकाशन हुन्छ ।

(६) प्रकाशित पत्रपत्रिकाहरूको स्तर सन्तुलित छैन। त्यसो हुन नदिन निम्न लेखिएबमोजिम हुनु पर्दछ ।
   (१) योग्य सम्पादकको वृद्धि,
   (२) पत्रकारितामा व्यावसायिकताको समायोजन,
   (३) पत्रको नीति र रीतीको निर्माणमा सैद्धान्तिक र व्यावहारिकताको समन्वय,
   (४) समाजको शैक्षिक विकास ।

(७) निम्न लेखिएका कुराको अभाव स्वच्छ पत्रकारितामा ठूलो घातक हुन गएको छ।
   (१) संतुलित प्रेस कानूनको अभाव,
   (२) पत्रपत्रिकाको आर्थिक संकट,
   (३) शैक्षिक तथा अनुभवी पत्रकारको कमी ।

(८) अविकसित पत्रकारिताको अनुपातमा "गेटअप तथा लेआउट" ठिकै भने पनि हुन्छ या त्यो कलाको प्रारम्भ अझ हुन बाँकी छ भने पनि दोष ठहरिने छैन ।

(९) आजतक निस्केका प्राय: ९० प्रतिशत पत्रपत्रिका १ वर्ष सम्मको हुन नपाई जन्मको साथसाथै वा केही दिन अथवा मैह्ना वा वर्षभित्रै अकाल मृत्यु भई तोते बोलीसम्म फुट्न नसकेको र केही समयसम्म बांचेका भए पनि त्यस्ताशैशव अवस्था या अविकसित पत्रपत्रिकाले जनमत बढाउन र जनजागृति, चेतना, सांस्कृतिक र सामाजिक रुचि



परिमार्जनपूर्ण रूपमा गर्नु ता किन सक्थे ? तर नहुने मामा भन्दा कानो मामा भएपनि निको भएझैं केही अशमा त्यस तर्फ संकेत गरी आएको छ ।

(१०) राष्ट्रको नव-निर्माण,नेपालको कल्याण, जनताको आर्थिक विकास, बौद्धिक स्तर उठाउने, मानिसको आचरण शुद्ध पार्ने, सत्यको साथ लिनु र असत्य बेइमानीको मूल नष्ट पार्न सिद्धान्तलाई बहन गर्न सक्नु पत्रकारको जिम्मेवारी हुनुपर्दछ ।

(११) जसले जे काम गर्दा पनि मानिस मात्रको प्रवृतिमा स्वार्थ प्रति बढी तौल हुन्छ । सर्वप्रथम ऊ आफ्नै स्वार्थ हेर्दछ भने, पत्रकारितामा कुनै आफ्नु व्यावसायिक स्वार्थ हुनु कुनै अनौठा कुरा हैन । तथापि त्यस्तो स्वार्थ र सार्वजनिक स्वार्थमा सामन्जस्य ल्याउन आफ्नु निजी स्वार्थ भन्दा अगाडि सार्वजनिक स्वार्थ राख्नु पर्दछ ।

(१२) निम्न लेखिएका प्रबन्धमा पत्रपत्रिकाहरूको अवस्था सुध्रिनामा केही मद्दत पुग्न आउँदछः—
   (१) सरकारले आफ्नो विज्ञापन पत्रपत्रिकामा प्रकाशन गरेर,
   (२) सरकारले पत्रपत्रिकाको प्रकाशन किनिदिएर,
   (३) हुलाक आकाशवाणी तथा टेलिफोन जस्ता संचार साधनहरूमा महसूल कम गरिदिएर,
   (४) न्यूज प्रिन्टको प्रबन्ध गरिदिएर
   (५) पत्रपत्रिका सम्बन्धी झिकाई ल्याएको मालमा कम महशुल लिएर ।

(१३) उक्त १२ मा लेखिएबमोजिम सहुलियत दिएर ।

(१४) पत्रकारहरूमा इमान्दारी हुन आवश्यक छ । आलोचना मात्र गरी सरकारी काममा बाधा पुऱ्याउने प्रयास पत्रपत्रिकाले गर्न हुन्न । सरकारले पनि उचित आलोचनाको स्वागत गरी कुशल कदम अगाडि बढाउनु पर्दछ । सरकार र प्रेस प्रतिनिधिको बीचमा बराबर सम्मेलन हुनु पर्दछ । किनकि पत्रकारहरू हजारौं जनासित सम्पर्कमा रहन्छन् । उनीहरूको भावना, मार्ग विचारधाराहरू सित पत्रकार परिचित रहन्छन् । तसर्थ भेला भएर विचारको आदान प्रदान गर्दा दुबै पक्षलाई लाभ छ। संकुचित विचार स्वतः दबी दुबै पक्षमा आपसी प्रेम गढ्दछ। तर त्यो पद्धति सरकारी प्रचार विभागबाट आजतक प्राय अपनाईएको छैन ।

(१५) मध्यस्थ भएर ।

(१६) सरकारतर्फबाट कानूनका बलमा र पत्रपत्रिकातर्फबाट प्रजातन्त्रको नाममा गरिनेकार्य कारवाईको एउटा शुद्ध परंपरा बसिनसकेको यो उर्लदो समयको धमिलो परिस्थितिमा एक पथदर्शन गराउन र शुद्ध परंपरा बसाल्न प्रेस सल्लाहकार समितिको गठन बिलकुल सामयिक नै हुनेछ ।

(१७) बहुसंख्या गैर सरकारी र लघुसंख्या, सरकारीया सदस्य, भएको न्यायपालिकाका कर्मचारीको अध्यक्षतामा गठन हुनु पर्दछ ।

(१८) नेपाल प्राय पहाडी देश र समस्थल स्थानमा पनि संचारको साधन बिलकुल मन्द हुँदा एकै ठाममा प्रकाशन केन्द्र हुनुभन्दा देशका विभिन्न स्थानमा प्रेस रहनु अति आवश्यक मात्र हैन कि अनिवार्य नै छ ।

(१९) सम्भावना छ ।

(२०) राष्ट्र हितलाई दृष्टिमा राखी केही सरकारी र अरू गैर सरकारी नेपाली नागरिक गरी बनेको संचालक समितिद्वारा संचालन गर्न व्यवस्था हुनु अहिलेको निमित्त समयानुकुल हुनेछ ।

(२१) नेपालको विभिन्न क्षेत्रको स्पष्ट रूपमा दिग्दर्शन गराउने गाइडको प्रवन्ध पनि हुनु बेस छ । यो प्रेस कमिशनको अन्तरिम रिपोर्ट जन समक्ष प्रकाशित गरी प्राप्त सुझावको आधारमा आवश्यक हेरफेर गरी मात्र अन्तिम रिपोर्ट सरकारमा प्रस्तुत भए बेस । हेलिकोप्टरद्वारा पत्रपत्रिकाको वितरण भए पहाडका कुना काप्चाका बासिन्दाहरूले पनि प्रकाशन भएकै दिनको ताजा खबर पढ्न पाउने थिए । स्कूल कलेजमा पढाइको क्रम अनुसार पत्रकारितामा अभिरूची राख्ने छात्र छात्रालाई इच्छाधीन विषय गराई पत्रकारितामा शिक्षा हासिल गराउँदा पत्रकारितामा पुष्टयाई हुदै जानेछ . . . इत्यादि

प्रश्नावलीको उत्तर पठाउनु भएका महानुभावहरूको नाम प्राप्त क्रमानुसार यस प्रकार छः–

| संख्या | नाम |
|---|---|
| १. | श्री बालकृष्ण सम |
| २. | श्री भवानीराज मास्के |
| ३. | श्री कविराज चन्द्रानन्द वैद्य |
| ४. | श्री तारामानसिंह स्वार |
| ५. | श्री जनकलाल शर्मा |
| ६. | श्री सेक्रेटरी केशरबहादुर (शिक्षा सचिवालय) |
| ७. | श्री मेनेजर प्रेमराज (गो. प.) |
| ८. | श्री वि. के. श्रेष्ठ |
| ९. | श्री नानिबाबू आचार्य |
| १०. | श्री धर्मराज थापा |
| ११. | श्री माष्टर हेमलाल जोशी (पाटन हाई स्कूल) |
| १२. | श्री पूर्ण बहादुर एम. ए. |
| १३. | श्री लबहादुर प्रधान |
| १४. | श्री नरेन्द्र प्रसाद रेग्मी |
| १५. | श्री गंगाधर शास्त्री पराजुली |
| १६. | श्री विश्वमणि आ. दी. |
| १७. | श्री भेषराज शर्मा |
| १८. | श्री मुकुन्दनाथ रिमाल |
| १९. | श्री आई. जी. पी. डि. राज शर्मा (नेपाल पुलिस) |
| २०. | श्री कृष्णबम मल्ल भरतपुर (चितौन) |
| २१. | श्री गोविन्द प्रसाद लोहनी |
| २२. | श्री पं. हरिहर शास्त्री |
| २३. | श्री चूडानाथ भट्टराई (प्रोफेसर संस्कृत महाविद्यालय) |
| २४. | श्री वेदानन्द झा, वीरगंज |
| २५. | श्री ऋषभदेव शर्मा |
| २६. | श्री कमलमणि आचार्य दीक्षित |
| २७. | श्री बासु पासा |
| २८. | श्री चन्द्रकान्ता देवी |
| २९. | श्री शशिकला शर्मा, श्याम प्रसाद |
| ३०. | श्री बैकुण्ठ प्रसाद लाकौल |
| ३१. | श्री विष्णु सुन्दर |
| ३२. | श्री प्रधान अध्यापक रामजीप्रसाद शर्मा (जे. पी. हाई स्कूल) |
| ३३. | श्री बेद प्रसाद धिताल (सहायक सचिव कानून मन्त्रालय) |
| ३४. | श्री कुल प्रसाद (सहायक सचिव गृह तथा न्याय मन्त्रालय) |
| ३५. | श्री चन्द्रमान प्रधान |
| ३६. | श्री जगतबहादुर त्रिचन्द्र कलेज |
| ३७. | श्री देवेन्द्रराज (डाइरेक्टर नेपाल रेडियो) |
| ३८. | श्री नारायण प्रसाद भट्टराई |
| ३९. | श्री शारदा शर्मा (प्रोफेसर) |
| ४०. | श्री निरन्जन शर्मा (प्रोफेसर) |
| ४१. | श्री लिलाप्रसाद लोहनी |
| ४२. | श्री डि. से. शेषराज दली (अर्थ मालपोत सचिवालय) |
| ४३. | श्री कृष्णराज अर्याल (डाईरेक्टर कलेज अफ एजुकेशन) |
| ४४. | श्री टेकबहादुर खत्री (का. मु. प्रधान संपादक गोरखापत्र) |
| ४५. | श्रीमती पुण्यप्रभा देवी |
| ४६. | श्री सहायक सचिव विश्वशंकर शुक्ल (अर्थ सचिवालय) |
| ४७. | श्री अर्णबहादुर सिंह |
| ४८. | श्री टुकराज पद्मराज मिश्र |

४९. श्री नरबहादुर गुरुङ (सदस्य कार्य शीघ्रकारक समिति)
५०. श्री उदय मान सिंह श्रेष्ठ (अध्यापक)
५१. श्री पं. इन्दुनाथ शर्मा प्याकुर्‍याल
५२. श्री चटके मगर माझगाउँ
५३. श्री बुद्धिप्रसाद गौतम (त्रिचन्द्र कलेज)
५४. श्री विजयनन्दन जोशी (प्रधान अध्यापक)
५५. श्री विचारी बसुदेव (काठमाडौं मेजिष्ट्रेट अफिस)
५६. श्री डाक्टर जगतचन्द्रमोहन
५७. श्री कृष्णचन्द्रसिंह प्रधान
५८. श्री केदारनाथ न्यौपाने (मजफरपुर)
५९. श्री हेडमाष्टर तुलसीप्रसाद (दरवार हाई स्कूल)
६०. श्री राधाकृष्ण बाबु भीमफेदी बारीबजार
६१. श्री रामवरन शर्मा, बहादुरगंज
६२. श्री भा. प्रि. पदमप्रसाद भट्टराई
६३. श्री पं. केदारनाथ शर्मा
६४. श्री लोकनाथ ढकाल
६५. श्री श्रीधर खनाल
६६. श्री पि. आर. थपलिया विराटनगर
६७. श्री रामचन्द्र शर्मा 'संस्कृत महाविद्यालय
६८. श्री आनन्दलाल श्रेष्ठ भीमफेदी बारीबजार
६९. श्री नेपाल लेवर पार्टी
७०. श्री पं. नित्यानन्द शर्मा
७१. श्री ना. सु. सीतारामभक्त
७२. श्री अ. डा. केशरीराज पाण्डे (शिक्षा विभाग)
७३. श्री साहेवज्यू चन्द्रविक्रम शाह
७४. श्री रश्मिराज्यलक्ष्मी शाह
७५. श्री चूडामणि रार्जसिंह मल्ल, बीरगंज
७६. श्री रमेशकुमार
७७. श्री ले. ज. मेघराज शमशेर
७८. श्री हेडमाष्टर डम्वरध्वज राना भी. आ. हाई स्कूल भीमफेदी
७९. श्री दिलबहादुर थापामगर भैंसे बजार
८०. श्री पूर्णलाल बज्राचार्य
८१. श्री शेख अब्दुल हादी भगवानपुर



८२. श्री प्रधानाध्यापक छविलाल पोखरेल, धरान
८३. श्री जगन्नाथ शर्मा शास्त्री
८४. श्री उदयराज शास्त्री
८५. श्री पशुपतिदेव पाण्डे (संपादक नयाँ समाज)
८६. श्री विष्णुलाल सक्सेना
८७. श्री रघुनाथ ठाकुर संपादक स्वतन्त्र हिन्दी साप्ताहिक (राजहंस)
८८. श्री मुकुन्दनाथ शर्मा भट्टराई डोटी
८९. श्री प्रकटमान सिंह चिफ अफ प्रटोकल (परराष्ट्र सचिवालय)
९०. श्री स्त्रोहतलाल शर्मा, भद्रपुर
९१. श्री शिवकुमार प्रधान, बागलुङ
९२. श्री कुलप्रसाद श्रेष्ठ, बागलुङ बजार
९३. श्री भू. पू. प्रधानमन्त्री मातृका प्रसाद कोइराला, विराटनगर
९४. श्री नारायण बाहादूर गुरुङ ने. क. पार्टी, ओखलढुङ्गा
९५. श्री पेशल कुमार पोखरेल, ओखलढुङ्गा
९६. श्री चीन बहादुर बहामी,पोखरा बजार
९७. श्री मीन बहादुर गुरुङ, पोखरा बजार
९८. श्री ईन्सपेक्टर पुलिस नरेन्द्रकेशरी उपाध्याय, पोखरा
९९. श्री सहायक माष्टर मुक्तिलाल श्रेष्ठ, पोखरा
१००. श्री हेड पण्डित भोलानाथ पराजुली, पोखरा
१०१. श्री सुरेन्द्रराज शर्मा (डाईरेक्टर प्रचार विभाग)
१०२. श्री ऋषिराम नेपाली, उप-सम्पादक, समाज
१०३. श्री पण्डित बाबुराम शर्मा शास्त्री, गुल्मी धुर्कोट
१०४. श्री हे. मा. रघुनाथ शर्म तथा मा. ईन्द्रप्रसाद शर्मा पू. २ नं विपरा आधार मिडिल स्कूल
१०५. श्री सानुकाजी किरान, ल. पु. न. पा.
१०६. श्री नरेन्द्रप्रसाद लाकौल, तानसेन पाल्पा
१०७. श्री देवराज कोलाक्षेपति, पाल्पा तानसेन
१०८. श्री पण्डीत प्रह्लाद शर्मा, गुल्मी मिडिल स्कूल
१०९. श्री पण्डीत खुविराम शर्मा, अर्घा अर्घेरो
११०. श्री नि. अ. हरिनाथ शर्मा गौतम
१११. श्री पं. ब्रह्मशंकर शुक्ल, (काशी)
११२. श्री डा. भवानीभक्त सिंह
११३. श्री माधव प्रसाद खनाल,विराटनगर
११४. श्री श्याम झा, विराटनगर

११५. श्री शैलेन्द्र कुमार उपाध्याय, विराटनगर
११६. श्री पुष्पलतिका, आदर्श बालिका विद्यालय, विराटनगर
११७. श्री राजकुमार पोखरेल, विराटनगर
११८. श्री खड्ग बहादुर श्रेष्ठ पूर्व २ नम्बर
११९. श्री होराप्रसाद जोशी, (सदस्य तथा सेक्रेटरी विधान मस्यौदा समिति)

परिच्छेद–६

## देशको मौजूदा प्रेस पत्र पत्रिकाको स्थिति

जुन प्रकारको स्थितिबाट नेपालको पत्रकारितालाई गुज्रन पर्‍यो, जुन प्रकारका कठिनाईहरू सामना यस क्षेत्रमा लागिरहेका मानिसहरूलाई गर्नु परिरहेछ, त्यसलाई हेर्दा त नेपालमा पत्रकारिताको अस्तित्व हुनु नै एक आश्चर्यको कुरा हो। तथापि नेपालमा पत्रकारिता छ, पत्रमा काम गर्ने पत्रकारहरू पनि छन् र एक पत्रकार जगत पनि । अर्को खुशीको कुरा यो छ कि असंख्य विघ्न र बाधाहरूको बावजूद, एक आवश्यक र सुहाउँदो वातावरण तथा क्षेत्रको कमीको वावजूद नेपालको पत्रकारिता विकास एवं प्रगति तिर बढ्दैछ । कानूनी बाधाहरू, आर्थिक कठिनाई, एक प्रकारले वैरयुक्त वातावरण माथि सारा कुराहरू छँदा छँदै पनि, यो निर्विवाद छ कि नेपालको पत्रकारिता एक ठोस रुप लिने दिशातिर कदम चाल्दै छ। श्री ५ को सरकारद्वारा वर्तमान प्रेस कमिशनको गठन हुनुबाट नै यो स्पष्ट हुन्छ कि कसरी यो बढ्दो र विकासशील पत्रकारिता आफ्नो अस्तित्व कायम गर्दैछ ।

जुन अवस्था नेपालको पत्रकारितालाई पार गर्न पर्‍यो र जुन दुःख र कष्ट अहिले पनि यस क्षेत्रमा छन्, ती सबैका वावजूद पत्रकारिताले यो स्थिति प्राप्त गर्नुको श्रेय सिर्फ सम्बन्धित पत्रकारहरू, तिनीहरूको उत्साह, उमङ्ग, सहिष्णुता, धैर्य र लगनलाई मात्र छ। किसिम किसिमको दुःख खपी, कष्ट सही अटूट रुपले प्रगति पथमा लम्की रहेका यी कर्मठ पत्रकारहरूलाई जति धन्यवाद दिए पनि थोरै हो । कुनै पनि प्रजातान्त्रिक व्यवस्थालाई चल्नको निम्ति मात्र पनि पत्रकारिताको कत्रो आवश्यकता छ, त्यो भन्नु पर्ने होइन। प्रजातन्त्रले पत्रकारितालाई जुन महत्व प्रदान गरिराखेको छ, त्यो निरर्थक एवं बृथा होइन । यस प्रकारको महत्वपूर्ण अङ्ग प्रति सरकार तथा अरू सबै सम्बन्धित तत्वहरूबाट अहिलेसम्म जुन उदासिनता देखाएको हो, त्यसको विपरित कतिपय कठिनाईहरूले घेरिए तापनि पत्रकारिताको अस्तित्व बचाई नेपालको हुर्कदो प्रजातन्त्रमा सहायता प्रदान गरिराखेकोमा पत्रकारहरू प्रति कोही पनि सचेत व्यक्ति हृदयदेखि नै आभारी नबनी रहन सक्तैन ।

नेपालमा पत्रकारिताको अस्तित्व केही हदसम्म कायम भई सकेको भएतापनि त्यो



कुन स्थितिमा छ, कसैबाट छिपेको कुरा होइन । हाम्रा साना दैनिक हरूको आकार प्रकार, स्तर आदिले नै बताउँदछ कि कुन परिस्थितिमा यी पत्रपत्रिकाहरू बाँच्दैछन् ? अर्थको कठिनाई, पाठकहरूको कमी, आवश्यक सुविधाहरूको अभाव, यी सबैले गर्दा हाम्रा पत्र-पत्रिकाहरूको स्तर ज्यादै नै तल छ । यस प्रकारको स्थितिमा स्वस्थ पत्रकारिता हुर्कन अत्यन्त कठिन छ र हामी यसो पनि केही हदसम्म भन्न सक्छौं कि, एक स्वस्थ पत्रकारिताको हामीमा केही हद सम्म अभाव छ। स्वस्थता, स्तर आदि कुराहरू प्राप्त गर्न आवश्यक भौतिक वातावरणको धेरै नै जरूरत हुन्छ ।

जुन स्थितिमा पत्रकारिता छ, त्यसले गर्दा कुनै पनि व्यक्तिलाई यस विशिष्ट व्यवसायप्रति आकर्षित हुने कुनै कारण र तर्क छैन। अतःसमाजका धेरै जसो योग्य व्यक्तिहरू आफ्नो अभिरूचिको बाबुजुद, यस क्षेत्रमा आउनै पाउँदैनन जसले गर्दा केही हदसम्म पत्रकारिताको पत्रमा अवाँछनीय तत्वहरूको प्रवेश एवं प्रश्रयको पनि गुन्जायस भएको छ । यही त्यो कारण पनि हो, जसले गर्दा पत्रकारजगतमा नयाँ एवं योग्य व्यक्तिहरूको प्रवेश पनि कमै हुन पाउछ । यो भन्नु अत्युक्ति हुनेछैन कि, यी विभिन्न कारणहरूले गर्दा पत्रकारिताको जगतमा केही मात्रामा जडता पनि देखिन आएको छ । जुन गतिशिलता, नवीनताको खोज र हलचल जुन मात्रामा यस क्षेत्रमा मौजुद रहनुपर्ने हो, त्यसको धेरै मात्रामा अभाव छ। यस प्रकारको परिस्थितिमा यदि हामिले कुनै पत्रकारलाई सम्पादकिय लेख्नु देखिन लिएर कम्पोजिङ्ग सम्म गर्नु परिरहेको देख्छौं भने कुनै आश्चर्यको कुरा होइन। बरू लेखन कार्य देखिन प्रकाशन तथा वितरण कार्य सम्पन्न गर्न जुन थरी थरीका क्रियाकलापहरू छन्, त्यसलाई एउटै व्यक्तिले पूरागरि रहेको देख्दा जिब्रो टोक्ने भन्दा अरू कुनै चारा रहँदैन । वास्तवमा, यस प्रकारका सारा क्रियाहरू एउटै मानिसबाट गरिनु एक यस्तो असम्भव कल्पना हो कि यसलाई एक मानिसको शक्तिभन्दा, बाहिरको कुरा भन्न सकिन्छ । तथापि नेपालमा आवश्यकतावस यस प्रकारको जिन्दगी गुजारी रहेका कैयौं पत्रकार छन्। विहान उठेर वा अघिल्लो दिन रातीनै त्यसको सम्पादकीय लेखिसकेको हुन्छ, विहान उठेर खबरहरू उसले पढ्दछ, विज्ञापनको रूपरेखा बसाल्दछ, प्रूफ पढ्दछ, बिल काट्दछ, स्याहा स्रेस्ताको नाममा जे जति पनि छ, त्यो गर्दछ, ठाउँ ठाउँ मा गएर पैसा उठाउन जान्छ, अनि फेरि अर्को ठाउँमा समाचार सङ्कलन गर्न दौडन्छ। केही १।२ वर्ष मात्र भएको छ कि नेपालले पत्रहरूको कार्यालय देख्न थालेको। त्यसभन्दा अघि त उसको सुत्ने कोठानै उसको कार्यालय हुन्थ्यो। तथापि यी कार्यालयहरू विस्तारै विस्तारै उद्भूत हुन थाले पनि धेरैजसो काम स्वयम पत्रकारलाई नै गर्नुपर्दछ। स्टाफ राख्नलाई उ संग पैसा नै होस् कसरी त, यो हालत छ वर्तमान पत्रकारहरूको जहाँसम्म सञ्चालन, सम्पादन एवं प्रकाशन क्रिया सम्बन्धित छ। अवश्य, यो भन्न सकिन्न कि सबै अहिले भएका पत्र-पत्रिकाहरूको यस्तै तरिकाले सञ्चालन हुन्छ । वर्तमान पत्रकार जगतमा यता केही दिन देखि यस्ता पत्रपत्रिकाहरू पनि देखिएका छन् , जसको सन्चालन आधुनिक तरिकाले गर्ने कोशिस र व्यवस्था केही हदसम्म छ।

कुनै एक दुई पत्रिकाहरूको सम्पादन समेत पनि तलबमा काम गर्ने सम्पादकहरूबाट हुन्छ। यसको साथै प्रूफ पढनलाई प्रूफरिडर, आवश्यक व्यवस्था गर्न व्यवस्थापक, हिसाब किताब राख्नलाई एकाउण्टेण्ट आदिको व्यवस्था पनि कहीं कहीं भएको देखिएको छ। तर यी उदाहरणहरू अपवाद स्वरूप छन् किन भने धेरै जसो पत्रिकाहरूको अवस्था यो होइन। सबै जसो पत्रिका को आर्थिक हालत यति नाजुक छ कि तिनीहरूले यस प्रकारको व्यवस्थित ढङ्गले अखबार चलाउनु कल्पनातीत झैं छ। अवश्य केही वर्षदेखि विभिन्न कारणवश विज्ञापन एवं बिक्रीबाट पत्रिकाहरूलाई केही आम्दानी हुन थालेको छ। तथापी यी श्रोतहरूबाट प्राप्त हुने अर्थ यति कम छ कि पत्रकारहरूलाई पत्रिका चलाईराख्न पेट नकाटी सुख छैन। आफूले उक्तकार्य सचालन गर्नमा लगाएको श्रम यो भुँमरीमा डुब्छ डुब्छ कि भनेझै भरदिन काम गरेर भोकै पनि रहनुपर्ने अवस्था उसको छ। यस प्रकारको अवस्थामा स्वस्थ पत्रकारिताको एक एक राम्रो स्तरको कल्पना नै असम्भव छ। अतः स्वस्थता एवं स्तर उकाल्न गरिने प्रयासमा प्रथम चरण पत्र-पत्रिकाहरूको आर्थिक अवस्था सुधार हुनु पर्दछ। जब सम्म यो व्यवस्था हुँदैन तबसम्म पत्रकारिताको क्षेत्रमा मात्र होइन, कुनै पनि क्षेत्रमा स्वस्थताको आशा दुराशा मात्र हुनेछ। हो, अपवाद स्वरूप कुनै राम्रो उदाहरण बन्न सक्ला, तर अपवाद नियम होइनन् र हामी अपवादलाई आफ्नो तर्क एवं निष्कर्षको आधार बनाउन सक्दैनौं।

हुनत, पत्रकारिता पनि एक सामाजिक पहलु भएको हुनाले, समाजको विकासको स्तरसंगै पत्रकारिताको स्तर सम्बन्धित छ। उद्योग वाणिज्य व्यापारको बृद्धि, पढ्न लेख्न सक्ने मानिसहरूको संख्यामा बृद्धि, यातायात एवं सञ्चारको राम्रो व्यवस्था आदिले अवश्य आफू संग संगै आफ्नो विकासोन्मुखी प्रभाव नपारी रहन सक्दैन, समाजमा भएका प्रगतिले कुनै सामाजिक महत्वमाथि आफ्नो छाया नपारी रहन सक्दैन। र, पत्रकारिता कुनै पनि प्रजातान्त्रिक समाजको र कुनै पनि समाजको प्रति महत्वपूर्ण अङ्ग हो कि समाजमा हुने घटनाहरूको प्रतिबिम्ब यस क्षेत्रमा अवश्यम्भावी रुपले पर्दछ। अतः समयसंगै पत्रकारितामा आवश्यक विकास हुने नै छ। यसको प्रमाण यो कुरा भन्दा बढ्ता अरू केही हुन सक्दैन कि स्वच्छन्दताको अलि मात्र वातावरण पाउनासाथ साना साना नै भए पनि केहि पत्रिकाहरू, दुःख सुख जे होस्, गरेर अटूट रुपले चलि रहेकाछन्। तथापि यो भन्न सकिन्छ कि वर्तमान सामाजिक विकाशको स्तरमा पनि जे जति सुविधाहरू पत्रपत्रिकाहरूलाई प्राप्त हुनु पर्ने हो, ती पनि यी पत्रिकाहरूलाई अलब्ध छन्। उदाहरण-डाँक, टेलिफोन, आकाशवाणी सम्बन्धी सुविधाहरू पत्रिकाहरूले प्राप्त गर्न तिनीहरूले विकाशको सिद्धान्तको प्रतिक्षा गरिरहनु नपर्ने हो र यी साना साना कुनै बेला पनि दिन सकिने सुविधाहरू मात्र पनि यी पत्रिकाहरूले प्राप्त गरेको भए यिनीहरूलाई जति दुःख झेल्नु परिरहेछ, त्यसमा केहि कमि हुने थियो। सोही अनुसार पत्रपत्रिकाहरूको स्तर उकाल्नमा पनि केहि मद्दत हुन जाने थियो होला। निश्चय नै, पत्रकारिताको स्तर एवं स्वस्थता आफू बाहेक समाजकै स्तर एवं कुनै विशिष्ट बेलाको विशिष्ट



वातावरण, सामाजिक विकास एवं अवस्थामा पनि निहित रहन्छ। अतः सारा राष्ट्रिय जीवनको उत्थान गर्ने क्रिया कलाप भन्दा यसलाई छुट्याई यसको विकास सोच्न सकिन्न। सामाजिक विभिन्न पहलुहरूको यो अन्तरनिहित अवस्थालाई बिर्सनु सरासर गलत हुनेछ। तथापी, असन्तोषको कुरा त्यस बेला हुन्छ, जबकि हामिले माथि उल्लेख गरिसके झै कुनै अप्राकृतिक कारणले गर्दा समाजका विभिन्न पहलुहरूको स्तरमा सामन्जस्य हुँदैन। यस प्रकारको स्थितिले विकृतिहरूलाई स्वभावतः प्रोत्साहन दिन्छ। नेपालको पत्रकारिता को पनि यस्तै उजूरीछ। स्पष्ट छ कि, जुन सुविधाहरू प्रेस पत्र-पत्रिकाहरूले अहिलेको अवस्थामा प्राप्त गर्नु पर्ने हो, त्यो पनि तिनीहरूले पाउन सकेका छैनन् र, त्यस माथि प्रेस कानूनका केही दफाहरू, रजिष्ट्रेशन सम्बन्धी कानूनका केही दफाहरू यति बाधक सिद्ध भएका छन् कि तिनीहरूको उपस्थितिमा एक स्वस्थ एवं भयले नसताईएको पत्रकारिताको अस्तित्व नै असम्भव प्राय छ। यस सम्बन्धमा २००९ सालको प्रेस कानूनको दफा ३६, रजिष्ट्रेशन गर्दा पर्ने कठिनाईहरू विशेष उल्लेखनीय छन्। यस अवस्थामा त्रुटिहरू, अभावहरू तथा अस्वस्थताले पत्रकार जगतमा कति स्थान पाउन सक्छ, त्यो सहजै अनुमान लगाउन सकिन्छ। तथापि, अरू केहि देशका यस्तै अवस्थामा बाँची रहेको पत्रकारिताको तुलनामा नेपालको पत्रकारितामा खराबीहरूले कम प्रश्रय पाएको छ भन्न सकिन्छ। उदाहणार्थ अझ पनि निहित स्वार्थहरू ले नेपालको पत्रकारितामा कमै स्थान गर्न सकेकोछ, यद्यपि यस तत्वको सर्वथा अभाव छ भन्न सकिन्न अनि यसको अलावा अरू धेरै कुराहरू पनि छन्, जसलाई हामी उदाहरणार्थ पेश गर्न सक्दछौं। तर, खुशी मनाउनुको साथै हामीले यस सिलसिलामा यो बिर्सन हुन्न कि यही अवस्था रही रहेमा यी अवाञ्छित तत्वहरूको पत्रकारितामा प्रश्रय एवं प्रवेशको अधिक गुन्जायस हुन जानेछ, जसबाट राष्ट्रकै हितमा पछि गएर धक्का पुग्न सक्दछ। साथै अहिलेनै हामीले यस दिशातिर ध्यान दिएनौ भने रोग बढी सकेपछि औषधि एवं उपचार दुवै गाऱ्हो हुनेछ। अहिले हामीले स्वेच्छाले यस महत्वपूर्ण कुरा प्रति ध्यान दिएनौ भने पछि अनिच्छाले भएपनि उद्भूत हुन आएका खराबीहरूले गर्दा हामीलाई ध्यान दिनु पर्नेछ र जस्तो कि हामीले माथि भनिसक्यौं, त्यस बेला रोग पनि बढी सक्नेछ। अतः सर्वहितको कुरा यही हुनेछ कि हामी अहिले नै यस दिशातिर सचेष्ट बनौं।

पत्रकारितासंग पत्रकारहरू मात्र सम्बन्धित छैनन्, यद्यपी तिनीहरूबाट नै यो चल्दछ। यसको सामाजिक क्रिया, यसद्वारा समाजमा पर्ने प्रभाव आदिले गर्दा यो क्षेत्र व्यक्तिगत भन्दा बढ्ता सार्वजनिक रुपको छ। अतः यस महत्वपूर्ण क्षेत्र प्रति उदासिन रहनाले पछि यसको नतिजा सिर्फ पत्रकारहरूकै लागि नराम्रो हुनु होइन, किन्तु सारा राष्ट्रकै लागि नै अहितकर हुन जानेछ। अतः हामी सबैले यो स्पष्ट बुझ्नु छ कि पत्रकारितासंग सिर्फ पत्रकारहरू सम्बन्धित छैनन् बरन सारा राष्ट्र नै। तसर्थ पत्रकारिताको समस्या पनि कुनै एक व्यक्ति वा तत्वको होइन, किन्तु सबैको हो। सरकारको, जनताको, पत्रकारहरूको यस समस्यालाई हल गर्नमा सबैलाई आफू आफले गर्नु पर्ने कर्तव्य पुरा गर्नु पर्छ। अहिलेको अवस्थालाई ध्यानमा राखी भन्न सकिन्छ कि

सरकारले पुरा गर्नै पर्ने कामहरू अपेक्षा कृत बढ्ता छन्। माथि हामीले प्रेस पत्र पत्रिकाहरूद्वारा सामना गरिएका आर्थिक दुरवस्था र अरू समस्याहरू प्रति ध्यान आकर्षित खोजका छौं। विशेष गरेर धेरै जसो समस्याहरू माथि छोटकरीमा उल्लेख गरिएको अवस्थाजनित छन् । यसको अलावा, समाचार सङ्कलन गर्ने वारेको कठिनाईले पनि पत्र पत्रिकाहरूको स्तर उकास्नमा बाधा दिई रहेको स्पष्ट छ । अर्थाभाव र अरू कैयौं कठिनाईहरूले गर्दा यस विषयमा पनि पत्रपत्रिकाहरूलाई एक ठूलो समस्याको सामना गर्न परिरहेछ, जसरी कि समुचित यातायात एवं सञ्चारको व्यवस्था तथा सुविधा नभएकोले पत्रिकाहरूलाई राष्ट्रिय पैमानामा बिस्तृत हुन गान्हो परिरहेछ । नेपालका पत्रपत्रिकाहरू माथि एक दृष्टिपात गर्दा समेत पनि राष्ट्रिय समाचारको कमी स्पष्ट देखिन्छ । अन्तरराष्ट्रिय समाचार आदि कुनै न कुनै प्रकारले केही हदसम्म कोशिस गरेमा प्राप्त गर्न सकिन्छ, पत्र-पत्रिकाहरूले पाउँदै छन् पनि। तर आफ्नो राष्ट्रको समाचार यद्यपी हाम्रो नजीक घटी रहे तापनि प्राय छैन ।

एक हाम्रो राष्ट्रिय सम्बाद समिति नहुनाको साथै पत्रपत्रिकाहरूद्वारा अर्थाभाव आदि कारणले गर्दा यस विषयमा समुचित प्रबन्ध व्यवस्था नहुन सकेकोले नै यस प्रकारको स्थिति पैदा भई रहेको छ। र, जुन मुख्य तगारो छ यातायात एवं सञ्चार सम्बन्धी दुर्व्यवस्थाको-त्यो त छँदैछ। कतै कुनै कुना काप्चामा पत्रपत्रिकाका सम्बाददाताहरू छन् भने पनि, उनले पठाएका समाचारहरू यति ढिला गरी आई पुग्छन् कि त्यस बेलासम्म सम्बन्धित समाचार नै महत्वहीन भईसकेको हुन्छ । यसो भए तापनि ढिलै प्राप्त हुने भए पनि यही समाचार प्राप्त भई दिए पत्रहरूको स्तर यस विषयमा अहिले भन्दा धेरै राम्रो हुने थियो। अहिले त राष्ट्रिय समाचारहरूको पत्रपत्रिकाहरूमा भई रहेको कमीले त लाग्छ कि नेपालमा घटना न घट्दैनन्। यो कति असम्भव कुरा हो, भनी रहनु पर्ने होइन ।

राष्ट्रिय समाचारहरूको यस कमिले गर्दा पत्रपत्रिकाहरूले राष्ट्रलाई प्रतिबिम्बित गर्न सकेका छैनन् । यस कमीले गर्दा फेरि पत्रहरूले पूरा गर्नु पर्ने अर्को जिम्मेवारी जनजीवनलाई एक स्वस्थ समाजको रूपमा चलाउने काममा सहायता गर्न सकेको छैन । समाचारपत्रहरूमा समाचारहरूको प्रकाशन सिर्फ खबर जनतासम्म पुर्‍याउनलाई होइनन्, बरन देशका कुना कुना को समाचारहरू छापेर जनजीवनमा हाम्रा नशा धमनीहरूबाट रक्तसचार भए झैं जीवनको गति सञ्चारित गरी राख्नु पनि हो। यस दृष्टिबाट भन्न सकिन्छ कि राष्ट्रिय जीवन लिलाको नै एक ठोस रूप दिने अभिभारा पनि पत्र पत्रिकाहरू माथि छ। पत्र पत्रिकाहरू ती माध्यम हुन जसबाट देशका कुना कुनाका मानिसहरूले आपसमा चिनापर्ची, बिचार विनिमय गर्न पाउँछन् र यस प्रकारको आदान प्रदानले एक ठोस परम्परा, सस्कृति एवं राष्ट्रियता पैदा गर्नमा कति मद्दत दिन्छ । यस प्रकारका माध्यमले एक व्यक्तिको जीवन तथा दृष्टिकोणलाई सिर्फ आफ्नै कुटुम्बको परिधिभित्र नराखी राष्ट्रिय पैमानामा विकास गर्न काफी सहायता प्रदान गर्दछ। प्रजातन्त्र अपनाएर एक नयाँ परम्परा परिपाटी, संस्कृति र एक नयाँ जीवन बसाल्ने अभिभारा



लिएको नेपाललाई यस प्रकारका माध्यमहरूको र चेष्टाहरूको कत्तो आवश्यकता छ, त्यो कसैले पनि सजिलैसित अनुमान लगाउन सक्ने कुरा हो ।

हामीले माथि भनि सकेका छौं, नेपालको पत्रकरिताले आफ्नो यो महान उत्तरदायित्वलाई थरी थरीका बिध्नबाधाहरूले गर्दा पूरा गर्न सकेको छैन। अतः यी सबै कुराहरूलाई ध्यानमा राखी हामीले यो हेर्नु छ कि पत्रपत्रिकाहरूले स्वदेशी-समाचारहरू पाउने सुविधा र आवश्यक व्यवस्था होस । हुनलाई त, समाचार सङ्कलन गर्नु पत्रकार कै काम हो, तथापि खबर हरू प्राप्त गर्न र बटुल्न जुन सुबिधाहरूको व्यवस्था हुनु पर्छ, त्यो सरकारको जिम्मेवारी हो। जस्तै कि हामीले माथि पनि भनिसकेका छौं नेपालको पत्रकारिताको व्यवस्था यति खराब छ कि यी बाधाहरूलाई बाध्ने काम तिनीहरूबाट मात्र आशा गर्न सकिन्छ। र, वास्तवमा जुन प्रकारका यातायात सञ्चार सम्बन्धी सुविधाहरू साधारणतः सबै प्रजातान्त्रिक देशका पत्र पत्रिकाहरूले प्राप्त गरेका हुन्छन्, ती पनि हाम्रा पत्रपत्रिकाहरूलाई प्राप्त छैन। यस अवस्थामा कसरी पत्रहरूको राम्रो स्तर हुन सक्छ र कसरी तिनीहरूको आफ्नो दायित्व पूरा गर्न सक्ला, त्यो कल्पनासम्म पनि गर्न सकिन्न र, यो भन्नुपर्ने होइन कि यी सुविधाहरूको व्यवस्था गर्नु सरकारको उत्तरदायित्व हो ।

पत्रपत्रिकाहरूको काम समाचार प्रकाशन अवश्य हो, तर यसको साथै कुनै पनि पत्रपत्रिकाबाट राम्रो पथ–निर्देशनको पनि आशा गरिन्छ। जनमत पत्रहरूले प्रतिबिम्बित गरे तापनि, जनमत बनाउनु पनि पत्र पत्रिकाहरूको जिम्मेवारी हो। पत्रहरूमा सम्पादकीय एवं अग्रलेखहरू यसै कारणले समाबिष्ट हुन्छन्। तर, सम्पादकीय जस्ता प्रत्यक्ष रूपले मत प्रदान गर्ने कालमहरूको अलावा पनि समाचारहरूको प्रकाशन मात्रले पनि जनमत बनाउनमा अवश्यम्भावी रूपले योगदान गर्दछ। कुनै समाचार असल होस् वा खराब, त्यसको प्रकाशनले स्वभावतः पाठकहरूमा प्रतिक्रिया पैदा गर्दछ, जस्ले मत बनाउन तिर मद्दत गर्दछ। भन्न सकिन्छ कि जहाँ सम्पादकीयहरू प्रत्यक्ष रूपले जनमत तयार गर्न लेखिन्छन् र यसै कारणले यस दृष्टिले स्थूल छन्, समाचारद्वारा मत तयार पार्ने क्रिया सूक्ष्म हुन्छ। यस् प्रकारको माध्यमद्वारा अङ्कित प्रतिक्रिया बढ्ता स्थायी पनि हुनजान्छ ।

यसरी हामीले देख्यौं, पत्रपत्रिकाहरू सिर्फ जनमत प्रतिबिम्बत गर्दैनन्, सिर्फ समाचार मात्र छाप्तैनन्, वरन जनमत तयार गर्नेतिर पनि अवश्यंभावी रूपले प्रविष्ठ रहन्छन्। त, यस प्रकारका महत्वपूर्ण क्षेत्रमा स्वस्थता नरहेमा स्वभावतः त्यसको कुप्रभाव सारा समाजमा नपरी रहन सक्दैन। यही त्यो कारण हो, जसले गर्दा पत्रकारिताको महत्व छ र यही त्यो कारण हो, जसले पत्रहरूको बढता जिम्मेदारी पनि छ। अब सवाल उठ्दछ कि हाम्रा पत्रपत्रिकाहरू यो जिम्मेदारी कहाँसम्म सफलतापूर्वक पूरा गरीरहेका छन्। जस्तो कि हामीले माथि पनि भनिसकेका छौं, धेरै कारणहरूले गर्दा हाम्रा पत्रपत्रिकाहरूले आफ्ना कर्तव्यहरू समुचित रूपले पूर्ण गर्न सकेका छैनन्। र, त्यसमाथि पाठकहरू को कमी तथा रहेसहेका पठन पाठन गर्ने मानिस-

हरू सम्म पुग्नसक्ने समुचित यातायात एवं सञ्चारको व्यवस्था नहुँदा नै जति मत निर्माण पत्र-पत्रिकाहरूले गर्न सक्छ, त्यसको परिमाण नेपालमा अत्यन्त सिमित छ। तथापि सिमित परिधि-भित्र पनि जुन कार्य नेपाली पत्रहरूले यस दिशातिर गरीराखेका छन्, त्यसलाई सम्पूर्णः सन्तोष-प्रद भन्न नसकिए तापनि बिल्कुल नगण्य छ पनि भन्न सकिन्न। तर, यो स्पष्ट छ कि नेपाली पत्र-पत्रिकाहरूलाई आफ्नो गुरूत्तर उत्तरदायित्व पूरा गर्न धेरै प्रयत्न गर्नु बाँकी नै छ। निहित स्वार्थ-हरूको प्रभाव, व्यावसायिक स्वार्थ आदिले गर्दा एक स्वच्छ एवं स्वस्थ बिचारको ज्ञानोपार्जनमा बाधा त पुऱ्याई नै रहेको हुन्छ। यसको साथै हालै केही आलोचनाहरूद्वारा क्षमता सम्बन्धी प्रश्न उठाइएको पनि केही हदसम्म जायज देखिन्छ। तर जस्तो कि हामीले माथि नै भनिसकेका छौं, यी सारा त्रुटिहरू धेरै हदसम्म हट्ने थिए, यदि यातायात सञ्चारका सुविधाहरू, सरकारी विज्ञापन आदिबाट आम्दानीको केही स्रोत, उद्योगलाई प्रेरणा दिन आवश्यक पूंजीको उपलब्धी आदि व्यवस्थाहरू भइदिंदा हुन्। अवश्य त्यो भन्नु सरासर अत्युक्ति हुने छ कि सुविधाहरूको यो व्यवस्था हुनासाथ पत्रपत्रिकाहरूले अनायास नै आफ्नो कर्तव्य पूरा गर्नेछन्। पत्रकारहरूले आफ्ना पत्रपत्रिकाहरूको स्तर उकाल्नमा र आफ्नो कर्तव्य सन्तोषप्रद तरिकाले पूर्ण गर्नमा पूर्ण चेष्टा गर्नु अनिवार्य छ, नत्र यी सबै सुविधाहरू वृथा हुनेछन्। वस्तुतः पत्रकारहरू नै पत्रकारितासंग प्रत्यक्ष रूपले सम्बन्धित भएको हुँदा यसलाई सुधार्ने प्रथम जिम्मेदारी पत्रकारहरूकै हो। ठिक वातावरण प्राप्त नभएमा यस प्रकारका चेष्टाहरू नै हुनु असम्भव छ। अहिलेको अवस्थामा त यो भन्न सकिन्छ कि जे जति त्रुटि वा अभाव यस क्षेत्रमा भए तापनि उपयुक्त वातावरणको कमीले गर्दा पत्रकारहरू केही हदसम्म दोषका भागीदार छन्, किन्तु हामीले माथि भनिसके जस्तै जे जति पनि तिनीहरू यस अनुपयुक्त परिस्थितिमा गुज्रिदै छन्, त्यसको लागि धन्यवादका पात्र छन्। यसो हुनाले उपयुक्त वातावरण भइदिएमा, जिम्मेवारी प्रत्यक्ष रूपले पत्रकारहरूको काँधमा पर्न आउनेछ। पत्रकारहरूले पनि आफ्नो जिम्मेवारी महशूस गर्नुपर्ने अवस्था पर्न आउनेछ। अहिलेको अवस्थामा सारा दुःख कष्ट सही काम गरिरहेका र गर्न सक्ने पत्रकारहरूबाट धेरैमात्रामा उन्हीहरूको जिम्मेवारी; उपयुक्त वातावरण प्राप्त भएमा पूर्ण हुनेछ भन्ने आशा गर्न सकिन्छ।

भन्नुपर्ने होइन कि जनताको मत निर्माण गर्दा पत्रकारहरूलाई प्रचलित अभिरूचिको ध्यान राख्नु अत्यावश्यक हुन जान्छ। यस्ता उदाहरणहरू कम छैनन, जबकि पत्रकारहरूको इच्छाको वावजुद जनताको अभिरूचिको ख्याल राखी पत्रकारहरूले त्रुटीहरूलाई अगालि बस्न परेको छ। यसप्रकारका स्थितिहरूले प्रत्येक देशको पत्रकारहरूको समक्ष समस्याहरू प्रस्तुत गरेकै छ। नेपाल पनि यस कुराबाट स्वतन्त्र छैन। तथापि उपयुक्त वातावरण भइदिएमा पत्रकारहरूले जनताको अभिरूचिको परिमार्जन गर्ने दिशातिर सचेष्ट हुने अवसर प्राप्त गर्दछन्। नेपालका पत्रकारहरूले पनि यस्ता समस्याको सामना गर्न नपरेको होइन। रगीन पत्रकारिता ( Yellow Journalism ) को अस्तित्त्व पनि नेपालको पत्रकारितामा



नभएको होइन, तर खुशीको कुरा छ कि यस कुराले अहिलेसम्म नेपालको पत्रकारितामा विशेष स्थान ग्रहण गर्न सकेको छैन।

तथापि नेपालको आपसी आलोचना गर्ने बैरपूर्ण वातावरण आदिले नेपालको पत्रकारितामाथि स्पष्ट असर पारेको छ। कूनै हदसम्म यो पनि भन्न सकिन्छ कि गाली गलौजकै लक्ष्य लिएर पनि कुनै पत्रहरूको आविर्भाव तथा अन्त भएको छ। नैतिकता; स्वस्थता आदि कुराहरूको अस्तित्व एवं उन्नति, आर्थिक अवस्था, समाजिक स्तर आदि मौलिक कुरामा धेरै हदसम्म निहित रहन्छन्! एक उपयुक्त परिस्थिति नभएमा यी कुराहरूको सर्वथा अभावनै भएतापनि कुनै आश्चर्य छैन। अतः सरकारले तथा अरू सबै सम्वन्धित मानिसहरूले यस विषयमा ध्यान दिनु अत्यावश्यक छ।

## छापाखानाहरूको स्थिति

नेपालमा मुद्रण उद्योग अवस्था आधुनिक स्तरमा आइसकेको छन्। ठाउँ ठाउँमा प्रेसहरूको निरिक्षणले हामीलाई स्पष्ट अनुभव भयो कि यस क्षेत्रमा नेपाललाई अझै धेरै कार्य सम्पन्न गर्न जरूरी छ। त्यसो त, विकास एवं समयको प्रगति संगै संगै काठमाडौं बाहेक देशका अरू ४।५ ठाउँहरूमा पनि मुद्रण व्यवसाय खडा हुन आएको छ। तर वर्तमान स्थितिलाई ख्यालमा राखी भन्न सकिन्छ कि काठमाडौंमा यस उद्योगको केन्द्रियकरण भन्न नसकिए तापनि विशेष बढ्ता प्रगति भएको छ। राजधानिमा मात्र पनि २० भन्दा बढी प्रेसहरू छन् र स्वभावतः यस उद्योगको विकास संगसंगै सम्बन्धित ज्यालादारी काम गर्नेहरूको संख्यामा पनि वृद्धि भएको छ। तर यी सब कुरा हुँदा हुँदै पनि मुद्रण व्यवसायले सन्तोषप्रद प्रगति गरेको भन्न सकिन्न। काठमाडौं का र अरू स्थानका विभिन्न प्रेसहरूको निरिक्षणबाट एवं प्राप्त भएका तथ्याङ्कहरूबाट विवित हुन्छ कि प्रेसहरूको संख्यामा केही बृद्धि हुन आए तापनि धेरै अंशमा उद्योगको यो क्षेत्र प्रारम्भिक अवस्थामा नै छ। हैण्ड प्रेसको प्रचलन करिब करिब बन्द नै भइसकेको भन्न सकिन्छ, तथापि उद्योगले ट्रीडल र साना साना फैल्ट वेट भन्दा बढी देख्न पाएको छैन। अपवाद स्वरूप एक दूई प्रेसहरू मा रङ्गीन छपाई गर्ने अवस्थासम्म हामीले देख्यौं, तर यिनलाई अपवाद स्वरूप मात्रलिन सकिन्छ। विकास गर्नेतिर अग्रसर भैरहेका यी प्रेसहरूलाई पनि पुजि आदिको सुविधा प्राप्त छैन। हुनत उद्योग तथा वाणिज्य व्यापारमा रहेको स्थितिभन्दा बाहेक गरी प्रेस व्यवसायमाथि विचार गर्न सकिन्छ, अतः यस क्षेत्रमा साधारणतः रहेका कठिनाई र बाधाहरू यस क्षेत्रमा पनि मौजूद छन्। तर तैपनि क्षेत्रअनुसार विशेष बाधाहरू पनि छन्। विभिन्न प्रेसधनीहरूसंग छलफल हुँदाथाहा पाइएका कुरा यस प्रकार छन्:—

(१) प्रेस उद्योगको अस्तित्व केही हदसम्म भइसकेको भएता पनि परम्परा अनुसार सरकारी छाप्ने कामहरू विदेश पठाइने हुँदा धेरैजसो काम बाहिर जान्छ र यसरी कम काम भएको मा ध्नन कम हुन जान्छ।

(२) मुद्रण काम गर्न मानिसहरूलाई अर्को असुविधा भएको छ मुद्रणसम्बन्धी कानूनले गर्दा, जस बमोजिम प्रकाशनमा कुनै गैर कानूनी कुरा हुन गएमा प्रेसलाई पनि धेर हदसम्म जिम्मेवार हुन जानुपर्छ । मुद्रकहरूको उजूरी छ की मुद्रण एक व्यवसाय भएको हुनाले यस प्रकारको दण्ड मुद्रकहरूलाई बेहोर्नु नपर्ने हो ।

(३) मुद्रण उद्योगको लागि चाहिने सरसामानहरू धेरै जसो प्राप्त नहुने भएकोले सामानहरूमा आवश्यक रूपले पूंजी फसाई राख्नु पर्दछ, यसो नगरी माल सामानको स्टक नराखेमा कुनै बेला पनि ती सामानहरूको आवश्यक पर्दा काम नै रोकिन जाने सम्भावना हुन जान्छ ।

(४) पूजी प्राप्त हुने सुविधा छैन ।

(५) यस बाहेक सरकारद्वारा मुद्रित बस्तुहरू (किताप) माथि कम भन्सार तथा खाली (कोरा) कागजमाथि बढ्ता भन्सार लिइने हुदा देशको मूद्रणसम्बन्धी उद्योगमा धक्का पुगिरहेको छ ।

देशको सर्वतोमुखि विकास संगसंगै मुद्रण उद्योगमा विकास हूनु स्वाभविक छ, तर अहिले पनि सरकारद्वारा केही सुविधाहरू दिइएमा र भएको अवस्थामा सुधार गर्ने प्रयास भएमा यस उद्योगलाई काफी सहायता हुन जानेछ। टाइप फाउन्ड्रीको नाममा विशेष केही देखिएको छैन । तर यता केही दिनदेखि केही टाइपहरू पनि बन्न थालेको छ । मुद्रण उद्योगलाई बढावा दिन उद्योगको यस क्षत्रमा ध्यान दिनु आवश्यक छ। सरकारद्वारा उद्योगलाई मद्दत गर्ने काम नरोकिने गरी भन्सारसम्बन्धी दरहरूमा घटबढ गरी स्वदेशी उद्योगलाई विदेशबाट हुने स्पर्धाबाट सुरक्षित गरिनुपर्दछ ।

परिच्छेद ७

## प्रेस (पत्र-पत्रिका) हरूलाई सरकारी सहुलियत सुविधा र सहायता

नेपालको पत्रकारिताको वर्तमान स्थितिको चित्रणमा हामीले माथि नै स्पष्ट गरेका छौ, नेपालको निमित्त पत्रकारिता नै एक नयाँ विषय अथवा कुरो हुन आएको छ । हुन त नेपालको पत्रकारिताको इतिहास नियालेर हेर्‍यौं भने भारतका देशीय भाषाका पत्रकारिता समकालीन नेपालको पत्रकारिताको शुरूलाई विचार गर्दा पत्रकारितालाई एक नयाँ विषय नै मान्नुपर्दछ भन्नमा कुनै अत्युक्ति हुने छैन । कारण, हाम्रो देशमा प्रजातन्त्र मात्र होइन, बोल्ने लेख्ने आदि मौलिक अधिकार नै नेपाली जनताको निमित्त प्राप्त भएको धेरै समय अघिको कुरा होइन। जुनसुकै ठाउँमा पनि शुरू अवस्थामा संगठित रूपमा पत्रकारिता उठ्नु गाह्रो कुरा हो, कदाचित एक दुई पत्र संगठित र सुव्यवस्थित रूपले उठे पनि स्वतन्त्र रहन निकै नै कठिन छ । यसकारण नेपालको अहिलेको स्थितिमा पत्रकारिता अव्यवस्थित र असंगठित रूपमा रहनु स्वाभाविक नै छ भने पनि त्यत्तिको खडकिने छैन । यस्तो परिस्थितिमा आजको असंगठित पत्रकारिता र अव्यवस्थित पत्र–पत्रिकाबाट नै सुसंगठित सुव्यवस्थित पत्रकारिताको विकास गराउनु नै मुख्य उद्देश्य हुनुपर्दछ ।



अर्को कुरा, नेपालको पत्रकारिताले व्यावसायिक रूप लिएको छैन, यस क्षेत्रमा व्यावसायिक दृष्टिकोणले पूंजी लगाउने स्वार्थ पनि कसैले लिएको देखिदैंन । आजको स्थितिमा देशमा पत्रकारिता कसरी चलिरहेको छ, पत्रकारहरूले कस्तो कष्ट भोग्न परिरहेको छ र पत्रकारहरूले कुन आशा कुन उद्देश्य लिएर पत्र चलाई रहेछन्, यस कुरा पनि हामीले माथि नै लेखि सकेका छौं । यही अवस्थालाई त्यसै रहन दियो भने,यसतर्फ सुधार र विकासको प्रयास भएन भने नेपालको पत्रकारितामा पनि रंगीन पत्रकारिता अथवा दूषित पत्रकारिताले नराम्रो जग बसाल्नेछ भन्ने यस कमिशनलाई लाग्दछ । कारण, पत्रकारिताको पवित्र लक्ष्यलाई ध्यानमा राखी कुनै उद्देश्य र आदर्शलाई अगाडि राखेर त्यसको आधारमा जनमत तयार पार्न अघि सरेका पत्रकारहरू तथा पत्रकारितालाई आफ्नो एक दिलचस्पी सम्झी आफूले सक्दोसम्म भए पनि केही देन दिन अगाडि बढेका, पत्रकारिता नै एकमात्र काम नभए पनि पत्रकारितामा, काफी दिलचस्पी लिई काम गरिरहेका पत्रकारहरूको विचमा एक तेस्रो प्रकारका पत्रकार जसलाई सच्चा पत्रकारभन्दा मौकेवाज पत्रकार भन्न ज्यादा सुहाउला, त्यस्ता पत्रकारले पनि देशको पत्रकारितामा प्रवेश गर्ने धेरै नै सम्भावना देखिन्छ। देशमा स्वस्थ पत्रकारिताको विकासमा राष्ट्रले सक्रिय कदम चाल्नु, देशको भरखर भरखर उठ्न लागेको पत्रकारितालाई बढावा दिन प्रोत्साहन तथा प्रेस पत्रपत्रिकाको समुचित विकासको निमित्त सरकारबाट हुन सक्ने सुविधा तथा सहुलियतहरू सब तुरून्त प्राप्त हुन सकेमा दूषित पत्रकारिताले हाम्रो देशमा टाउको उठाउने मौका बहुतै कम पाउनेछ ।

अर्को कुरा, देशको वर्तमान समस्या स्वस्थ पत्रकारिताको विकास मात्रै होइन, बल्की व्यवसायी पत्रकारिताको विकास पनि हो भन्ने कमिशनले महसूस गरेको छ । एक दुई पत्र जसो तसो चल्न सके पनि पत्रकारितालाईनै एक मात्र पेशा ठान्ने व्यावसायिक पत्रकार वर्गको उत्पति नभएसम्म देशमा स्वस्थ पत्रकारिताको जग बस्न सक्दैन। पत्रकार भई आफ्नो जीविका चलाउन सक्ने अवस्था, पत्रकारितालाई विकास गरी लैजान आवश्यक साधनको प्राप्ति र अगाडि कदम चाल्न नै नदिने वर्तमान कठिनाईहरू हटाउने प्रवन्ध नभएसम्म माथि उल्लिखित पत्रकार वर्गको उत्पत्ति हुन सम्भव छैन। यस निमित्त पनि पत्रकार वर्ग र पत्रकरितालाई दिनुपर्ने सुविधा तथा सहुलियतहरूको प्रवन्ध सरकारले तुरून्तै गर्नु पर्दछ भन्ने कमिशनले ठानेको छ। राम्ररी सोची हेर्दा अहिलेको नेपालमा सरकार, जनता र पत्रकारिता सबको एउटै स्वार्थ, एउटै कर्तव्य छ भन्ने देखिन आएको छ। हाम्रो देश संक्रमण कालबाट गुज्रदै छ। सामन्ति व्यवस्थालाई छोडेर नेपाल प्रजातन्त्रको जग बसाल्ने बाटोतिर लम्कदै छ। यस स्थितिमा प्रजातान्त्रिक व्यवस्थालाई विकास गर्नु एउटै कर्तव्य हुन आएको छ। सरकार र प्रेस पत्रपत्रिकाको घनिष्ट सम्बन्ध कायम गर्ने यो भन्दा राम्रो अवसर नेपालमा वा कुनै पनि देशमा आउन मुश्किलै छ भन्ने कमिशनलाई लाग्दछ। त्यस्तै दूषित पत्रकारितालाई रोक्नु पनि कानूनी वा अरू कुनै व्यवस्थाभन्दा सरकार र प्रेस पत्रपत्रिकाको परस्पर सहयोग नै ज्यादा राम्रो र उपयुक्त हुनेछ ।

प्रेस पत्रपत्रिका चलाई रहनु भएका पत्रकारहरू र बुद्धिजीविहरूबाट कमिशनलाई आएको

प्रश्नावलीका उत्तर, देशका विभिन्न स्थानमा कमिशनका सदस्यहरू गई हेर्दा भएको अनुभव, प्रमुख पत्रकारहरूसित भेटी छलफलमा पाइएका सुझावहरू र छापाखाना तथा पत्रपत्रिकाका कार्यालयहरू निरीक्षण आदिको चस्मदिल देखिएको चित्रमा समेत अध्ययन गरी हेर्दा कमिशनको विचारमा नेपाली पत्रकारहरूले अहिले सामना गर्नु परेका मुख्य कठिनाईहरू यस प्रकार छन्:-

(१) समाचार प्राप्तिका श्रोतहरूको अभाव,
(२) प्राप्त हुन सक्ने श्रोतमा पनि सुविधाको कमी,
(३) सञ्चारको कठिनाई,
(४) पत्र सञ्चालन गर्ने वित्तिकै चाहिने जति साधन सब पत्रकारले आफूले जुटाउनु पर्ने अवस्था,
(५) आर्थिक संकट ।

पत्रकारिताको निमित्त ती कठिनाईहरू हटाउन सरकार तथा पत्रकारहरूको संयुक्त प्रयास हुनु आवश्यक छ । सरकार तर्फबाट पनि यी कठिनाईहरू हटाउन पत्रकार र पत्रपत्रिका-लाई हुनसक्ने जति सुविधा र सहुलियत दिनु आवश्यक देखिन्छ । पत्रपत्रिकाको विकासको निमित्त सरकारले सहयोग तथा सहुलियत दिनु प्रजातान्त्रिक सरकारको कर्तब्य मात्रै नभई नेपालको पर-म्परा नै हो भन्ने कमिशनलाई लागेको छ । जुन बेला नेपालमा पत्रपत्रिका थिएन, त्यस्तै नेपालको शासन व्यवस्थाले गर्दा जनताबाट पत्रपत्रिका निस्कनु पनि असम्भव थियो । त्यस बखत देशमा सरकार तर्फबाट सञ्चालन गरी गोरखापत्रको जन्म भयो । गोरखापत्र जस्तो कुनै समाचार पत्र नै सरकारले चलाउने व्यवस्था शायद संसारका कमै देशको सरकारको सिद्धान्तमा मिल्ने कुरा होला । तैपनि प्राथमिक अवस्थामा सरकारद्वारा नै पत्रकारिताको बीज रोपिनुको तात्पर्य नेपालका जनताले पनि समाचारपत्रको महत्व बुझुन भन्ने हेतुले नै होला भन्ने कमिशनलाई लाग्दछ।

२००७ सालपछि हाम्रो देशभित्र गैर सरकारी समाचार पत्र निस्के, सच्चा अर्थमा प्रेस भन्नु नै गैर सरकारी पत्रपत्रिका हुन् । यसैले परम्परा अनुसार अब यी पत्रपत्रिकालाई फल्न फुलाउन आवश्यक सुविधा र सहुलियत प्रदान गर्ने सरकारको नीति हुनु बेस छ।

देशको पत्रकारिताको स्थिति, नेपालको परिवर्तित व्यवस्थालाई विचार गरी हेर्दा प्रेस पत्रपत्रिकालाई सरकारले दिनुपर्ने सुविधा र सहुलियत तल लेखिए बमोजिम हुनुपर्छ भन्ने कमिशनको राय छ ।

(१) पत्रकारलाई मान्यता दिनेः– पत्रकारिताको विकासको निमित्त पत्रकारितालाई संचालन गर्ने पत्रकारलाई सबभन्दा ठूलो सरकारी प्रोत्साहन नै पत्रकारको मान्यता दिनु हो । पत्रपत्रिका संचालन गरिरहेका संपादक, संवाददाता तथा पत्र प्रतिनिधिहरूलाई सरकारबाट औपचारिक मान्यता दिने व्यवस्था हुनु पर्दछ, जो अरू देशहरूमा पनि चलेको छ। यसबाट पत्रकारहरूलाई समाचार लिन विशेष सुविधा मिल्न आउँदछ । समाचार प्राप्तीको निमित्त सरकारका सम्बन्धित विभागहरू, कुनै विशेष स्थानहरूमा जान तथा सम्बन्ध राख्न पाउने सुविधा पत्र प्रतिनिधिहरूलाई दिने व्यवस्था गरिनु पर्दछ ।

(२) प्रेससंग सम्पर्कः– सरकारबाट समय समयमा प्रेस सम्मेलनद्वारा प्रेस पत्रपत्रिकासंग



सम्बन्ध राख्नु ज्यादै नै राम्रो हुनेछ । सरकार र जनताको सम्पर्कका साधनमध्ये एक प्रमुख साधन प्रेस हो भन्ने कुरा निर्विवाद छ । यस्तो सम्बन्धले जनतामा सरकारी नीति तथा कदमको राम्रो ज्ञान रहनुको साथै पत्रपत्रिकाहरूलाई समाचारका अटूट श्रोत पनि मिल्दछ । सरकार र प्रेसको बीच राम्रो सम्बन्ध पनि यसद्वारा रहन आउँछ । हाम्रो देशमा प्रधानमन्त्रीहरूका एक दुई प्रेस सम्मेलन बाहेक सरकारी प्रेस सम्मेलनहरू भएको उत्तिको देखिंदैन । प्रचार विभाग मार्फत पत्रपत्रिकालाई सरकारी समाचार पठाएर पनि केही मात्रामा सरकार र प्रेसको सम्बन्ध कायम रहेको छ, तर सरकारी नीति र कदमको राम्रो प्रचार जनतामा गर्न र जनतामा सरकार प्रति सहयोगको भावना बढाउन सरकारी प्रेस सम्मेलनहरू निक्कै सहायक सिद्ध हुन आउने छन् ।

(३) सरकारी विज्ञापनः– प्रेस पत्रपत्रिकाको आर्थिक संकटमा सरकारले विज्ञापन दिएर पनि केही सहायता गर्न सक्तछ । आर्थिक संकट समाधानको दृष्टिले मात्रै नभई सरकार र प्रेसको परस्पर घनिष्ट सम्बन्धको निमित्त पनि सरकारले पत्रपत्रिकालाई विज्ञापन दिने व्यवस्था रहनु पर्दछ । सरकारको विचार जनतासम्म र जनताको आवाज सरकारसम्म पुऱ्याउने साधननै प्रेस हो । सरकारी विज्ञापन देशका पत्रपत्रिकामा दिनाले पत्रपत्रिकालाई मात्र सहायता मिल्ने होइन कि दुईको बीचमा सद्भावनाको अभिवृद्धि भई सरकारलाई पनि पत्रपत्रिकाको तथ्यहीन आलोचना रोक्ने मौका मिल्दछ । सरकारतर्फबाट विज्ञापन पाइरहेका पत्रपत्रिकाले आफ्नै स्वार्थवश पनि कसैको बहकावमा लागि विनाकारण सरकारको अनुचित आलोचना वा निन्दा गर्न मन लगाउँदैनन् । यसबाट प्रेस र सरकारको बलियो र सामञ्जस्यपूर्ण सहयोग जम्दछ । विज्ञापन दिने सरकारको इच्छाधीन विषय हो तापनि यसबारे कुनै एक सिद्धान्तको आधारमा पत्रपत्रिका छानी सरकारले विज्ञापन दिने गरेमा यस विषय अनावश्यक आलोचनाबाट सरकार परै रहनेछ ।

विज्ञापनको लक्ष्य नै जनतामा सरकारको कुनै कुराको बढी से बढी मात्र प्रचारको हेतु हुनाले विभिन्न नीति र विचारधाराका, पत्रहरूमध्ये जनतामा ज्यादा चल्ती भएका, धेरैले पढ्ने यथासम्भव देश व्यापक उच्च स्तरका पत्रहरूमा विज्ञापन निस्कनु नै सरकारको उद्देश्य पूरक हुनेछ । यसर्थ प्रेस सल्लाहकार समितिले कुनै पत्रमा सरकारी विज्ञापनको निमित्त सिफा-रिश गर्दा निम्न लिखित सिद्धान्तलाई आधारको रूपमा लिनुपर्ला भन्ने कमिशनलाई लागेको छ ।

(क) पत्रिका प्रकाशनको अवधिः– सरकारी विज्ञापनको एक उद्देश्य देशका पत्रपत्रिकालाई सहायता दिने पनि भएकोले देशको पत्रकारिताको विकासमा केही देन दिएका पत्रहरूले ग्राह्यता पाउनु पर्दछ । यसर्थ एक निश्चित अवधि (हाम्रो सुझाव १ वर्ष) प्रकाश भइ-सकेको पत्रलाई सरकारी विज्ञापन दिने आधार हवोस् यसबाट बीच बीचमा कुनै एक निहित स्वार्थ लिएर निस्की बिलाउने पत्रले सरकारी विज्ञापनबाट फाइदा उठाउनबाट रोक्न सकिन्छ ।

(ख) साधनको अभावः– प्रोत्साहनको कमीहरू कैयन कठिनाई विभिन्न समयमा कानूनको मारले कैयन पत्रपत्रिकाहरू बन्द हुँदै गइरहेकोले अहिले हाम्रो देशमा १ वर्षभन्दा बढी प्रकाशन अवधि पुगेका पत्रहरू ४।५ वटा मात्र पुगेको कुरा कमिशनले देखेको छ । तसर्थ अहिले-लाई शुरूमा विज्ञापनको सिफारिश गर्दा नयाँ पत्रिका नै भए तापनि नेपालको पत्रकारिताको

विकासमा केही समयदेखि कमिशनको रायमा २ वर्ष काम गर्दै आएको व्यक्तिद्वारा संचालित पत्रलाई पनि सरकारी विज्ञापनको सहुलियत मिल्नु पर्दछ भन्ने कमिशनलाई लागेको छ ।

(ग) वितरण संख्याः– सरकारले विज्ञापन दिनुको उद्देश्य सरकारको कुनै कुरा जनतामा प्रचार गर्ने पनि भएकोले (क) र (ख) का शर्त पूरा नभएका अखबार भए पनि नियमित ग्राहक संख्यालाई नै विज्ञापनको सिफारिशको आधार मात्र पर्ला । साथै (क) र (ख) का शर्त पूरा गरेका पत्रलाई पनि विज्ञापन दिंदा ग्राहक संख्यालाई पनि आधार भएको खण्डमा नाम मात्रका वितरण भएका पत्रले साच्चिकै जनप्रिय पत्रको बराबरी दांजोमा सहुलियत पाउने नराम्रो अवसर रोक्न सकिनेछ र पत्रको नामले मात्र मर्यादा नपाई काममा मर्यादा हुन्छ भन्ने परिपाटी पनि बस्न जानेछ ।

(घ) नेपालका धेरैजसो अझ झण्डै सब पत्रपत्रिका एकै ठाउँमा केन्द्रित भएको हुँदा देशका अविकसित स्थानबाट निस्कने त्यस्ता स्थानमा चल्ने पत्रपत्रिका पिछडिएका जाति, अल्पसंख्यक जातिको संस्कृतिको प्रतिनिधित्व गर्ने पत्रहरूलाई सरकारद्वारा विशेष प्रोत्साहन दिइनु पर्दछ । यस निमित्त यस्ता पत्रपत्रिकालाई विज्ञापन दिन उदार नीति अपनाइनु पर्दछ । सरकारी विज्ञापन दिनेबारे विस्तृत आधारको निमित्त सुझाव तयार पार्ने काम प्रेस सल्लाहकार समितिले गर्नु उपयुक्त होला ।

(४) सरकारी विज्ञापन दिने बाहेक सरकारले पत्रपत्रिकाहरूका प्रकाशित प्रति किनी नेपाली बसोबास भएको ठाउँ, दौत्यसम्बन्ध भएको देशमा र सार्वजनिक वाचनालय जस्ता संस्थामा वितरण गरी अर्को किसिमको सहायता दिन सक्तछ ।

यो व्यवस्थाबाट प्रेस पत्रपत्रिकालाई प्रोत्साहन दिनाको साथै विज्ञापन, संस्कृति तथा सरकारी नीतिको पनि देशविदेशमा व्यापक रूपमा प्रचार प्रसार हुन आउँदछ । पत्रपत्रिकालाई यस किसिमको सहायता नेपालका निमित्त नयाँ कुरो होइन, साहित्यक पत्रिकालाई सरकारबाट सिधा आर्थिक सहयोग दिने व्यवस्था २००७ सालको परिवर्तनभन्दा धेरै समय पहिलेदेखि नै हामी कहाँ थियो । 'शारदा' उद्योग आदि साहित्यिक पत्रलाई र देश बाहिरका नेपाली भाषाका पत्रिकाहरूलाई समेत आर्थिक सहायता दिएको छ ।

त्यस्तै २००७ सालपछि पनि केही वर्ष अघि श्री टंकप्रसादज्यूको प्रधानमन्त्रीत्व कालमा समाचार पत्रका प्रति किनी प्रवास पठाउने प्रथा शुरू भएको कमिशनलाई अवगत भएको छ । तर यो प्रथा कुनै नियम र ठोस आधारमा चलाएको नहुँदा पछि स्वतः बन्द भयो । जहाँतक पूर्व राणा शासन कालका झैं सिधा आर्थिक सहायता दिने कुरा छ, समाचार पत्र या साहित्यिक पत्रिकालाई सिधा अनुदान दिनु प्रजातान्त्रिक व्यवस्था सुहाउँदो छ भन्ने कमिशनलाई लाग्दैन । यसबाट सरकार र प्रेसका बीच रहनु पर्ने रमाइलो र सौहाद्रपूर्ण वातावरण कायम रहन सक्तैन । प्रेस पत्रपत्रिका सरकारबाट स्वतन्त्र रहनु पर्छ, कुनै सरकारी अवान्छनीय प्रभाव सहायताद्वारा नै भए पनि रहन जानु पत्रकारिता तथा सरकार दुवैको निमित्त सुहाउने हुँदैन ।



तसर्थ जति पनि सरकारी सहायता प्रेस पत्रपत्रिकालाई मिल्दछ, ती सिधा आर्थिक सहायता नभई सरकार एक विज्ञापनदाता वा पत्रको ग्राहकको रूपमा अगाडि आउन आवश्यकछ ।

यसरी सरकारले केही प्रतिहरू किनेर देशभित्रका विभिन्न पुस्तकालयहरूलाई दिने र देशभित्र वा बाहिरका नेपाली बसोबास भएका स्थानमा पठाउने प्रवन्ध हुनु अत्यावश्यक छ । यसबाट पत्रपत्रिकालाई सहायता मिल्नुको साथै नेपालका पत्रहरूले देशका विभिन्न स्थानका जनता तथा देश बाहिरका नेपालीहरूको हित र स्वार्थको प्रतिनिधित्व गर्ने नीति अपनाइनेछ । सरकारको यस कदमले नेपाली, पत्रकारिताबाट स्थानीय वा जातिय संकुचितता आफसे आफ हट्नेछ ।

(५) संचार सुविधाः– संचारको राम्रो व्यवस्था विना अरू कुरा जस्तै पत्रकारिता पनि फल्न फुल्न एकदम असम्भव छ । देशको संचार व्यवस्थामा पत्रपत्रिकाको विकासको घनिष्ट सम्बन्ध छ । पत्रपत्रिकाको निमित्त मात्र होइन, राष्ट्रोत्थानका अरू दृष्टिकोणबाट पनि देशमा संचारको विकास हुनु पर्दछ । आजको संचारको हालतमा पत्रपत्रिका अगाडि बढ्नु असम्भव प्राय नै छ । देशको एक ठाउँबाट अर्को ठाउँमा पत्रपत्रिका पुग्न हप्तौं र महिनौं दिनसम्म लागेको धेरै उदाहरणहरू हाम्रो अगाडि छ । सब पत्रपत्रिकाहरूको एकै स्वरमा शिकायत डांक र अरू संचारको अविकसित र अव्यवस्थित अवस्थाबारे दिएका छन् । उपत्यकाभित्रै पनि कैयौं शहरहरू अझै छन्, जहाँ हुलाक डेलिभरीको व्यवस्था छैन, राजधानीबाट दुई तीन कोश मात्रै टाढाका गाउँहरूमा पत्रपत्रिका पुग्न नसक्ने अवस्था पनि यस कमिशनले देख्यो । तसर्थ हुलाक र अरू संचारका साधनहरू छिटै राम्रो विकास हुनु पर्ने कुरातर्फ पनि सरकारको ध्यान यस कमिशनले खिच्न बाध्य हुनु परेको छ ।

संचारको विकासको साथै प्रेस पत्रपत्रिकालाई संचारको विशेष सुविधा दिनु प्रजातान्त्रिक राष्ट्रको नीति हुनु पर्दछ। हामीले माथि नै लेखिसक्यौं कि देशमा प्रजातान्त्रिक व्यवस्थालाई विकास गर्नु सरकार, जनता तथा पत्रपत्रिका सबैको साझा कर्तव्य हो । प्रेस प्रजातान्त्रिक व्यवस्थाको एक मूल साधन भएकोले यसलाई विशेष सुविधा हुनु तर्कयुक्त छ । यो कमिशन निम्न लिखित सुविधाहरू प्रेस पत्रपत्रिकालाई मिल्नु आवश्यक छ भन्ने सम्झन्छ ।

(क) प्राथमिकता– राष्ट्रका विभिन्न स्थानका जनताको आपसी सम्पर्कको सबभन्दा ठूलो साधन प्रेस हो । प्रेसविना राष्ट्रिय जीवनको कल्पना गर्नु नै मुस्कील छ । एक स्थानमा घटेका घटना, देशको कुनै एक भागका जनता के सोच्दैछन्, कस्तो समस्या सामना गर्दै छन् ? यी सब कुराहरूमा देशभरका जनताको रूचि जान्नाले नै राष्ट्रिय जीवन भन्ने चीजको विकास हुन सक्दछ। तसर्थ राष्ट्रको यत्तिको महत्वपूर्ण वस्तु प्रेस पत्रपत्रिकालाई देशका संचार साधनहरूमा प्राथमिकता दिनु पर्दछ । संचारको सबै साधन टेलिफोन, हुलाक, आकाशवाणी आदिमा श्री ५ महाराजाधिराजको हुकूम तथा राज्यको अत्यधिक आवश्यक काम कारवाई पछि सर्वप्रथम प्राथमिकता प्रेस पत्रपत्रिकालाई मिल्नु पर्दछ । प्रेसलाई प्राथमिकता दिने गर्दा सरकारबाट सर्वाधिक मान्यता पाएका संवाददाताले समाचारपत्र या संवाद समितिलाई पठाएका एक्सप्रेस खबरहरूले मात्रै यो प्राथमिकता पाउने व्यवस्था हुनु र साधारण पब्लिक मेसेजभन्दा प्राथमिकता दिनु पर्दछ ।

(ख) विशेषसुविधाः– पत्रपत्रिकामा छापिने समाचारको निमित्त प्रेस पत्रपत्रिकाले पाउने र पठाउने टेलिफोन, आकाशवाणी आदिका सन्देशहरू कुनै एक व्यक्ति विशेषको नभई सामूहिक हित तथा सार्वजनिक स्वार्थको चीज हो। यसर्थ यसमा सरकारले महशूलमा पनि विशेष सुविधाजनक दर निर्धारित गरिदिन आवश्यक छ। यसरी घटाइएको दरमा महशूल लिने गर्दा सरकारलाई शुरूमा केही फाइदा नदेखिए पनि प्रेस पत्रपत्रिकाको उन्नति भएपछि सरकारको आम्दानी बढन नै जानेछ। सरकारले परम्परागत रूपले एक किसिमले यस सिद्धान्तलाई मानिआएको छ। हुलाकबाट बुक पोष्ट पठाउँदा हुलाकमा दर्ता भएका पत्रपत्रिकालाई विशेष सुविधाजनक दरमा पठाउन पाउने व्यवस्था भइरहेको छ। यसमा सरकार धन्यवादको पात्र छ। हुलाक र अरू पनि संचारका साधनहरूमा विशेष सुविधा दिने कुन आधारमा हुनु पर्दछ भनी हाम्रो देशको स्थिति तथा अरू पनि प्रजातान्त्रिक मुलुकहरूको व्यवस्था विचार गरी यस कमिशन निम्न लिखित निष्कर्षमा पुगेको छः–

देश भित्र "प्रेस खवर" आदान प्रदान गर्दा

| | प्रथम १०० अक्षरलाई लाग्ने महशूल | त्यसपछि प्रत्येक १० अक्षरलाई | ठेगाना |
|---|---|---|---|
| आकाशवाणी | ।५० पैसा | ।४ पैसा | मुफ्त |
| टेलिफोन | ।२५ पैसा | ।२ पैसा | मुफ्त |

नोटः–टेलिफोन र आकाशवाणीमा एक्सप्रेस र अर्डिनरी श्रेणीबद्ध गरी दुई प्रकारको दर कायम गर्न पनि उचित होला। सरकारबाट कायम हुने एक्सप्रेस र अर्डिनरी खवरमा लाग्ने महशुलको दररेटमा प्रेस खवरलाई प्रथम सय अक्षरमा अरूलाई लाग्ने महशुल दरको १।४ (एक चौथाई) र त्यस पछि प्रत्येक १० अक्षरमा १।५ (पांच खण्डको एक खण्ड) लाग्ने र ठेगाना मुफ्त हुनु उचित हुन्छ।

(ग) नेपालले अन्तर्राष्ट्रिय टेलिकम्युनिकेशन संघको सदस्यता प्राप्त नगरिसकेको भए तापनि हाम्रो घनिष्ट मैत्री सम्बन्ध भएको छिमेकी राष्ट्र भारतको सरकारसंग लेखापढी गरी अन्तर्राष्ट्रिय टेलिग्राफ, ट्रंककल आदि संचारमा पनि नेपालका पत्रकारहरूलाई भारतका पत्रकारहरूले पाए सरह सुविधा दिलाउने प्रबन्ध गराउन सकेमा नेपालको पत्रकारितालाई ज्यादै सहायक सिद्ध हुनेछ।

(घ) भी. पी. र एम. ओ. प्रथाः– अहिले रहेको हुलाक क्षेत्रलाई बढाउने र अरू संचार सहित व्यवस्थाको विकास हुनु पत्रकारिताको विकासको निमित्त अत्यन्त आवश्यक छ भन्ने कुरा त माथि नै लेखिसकेका छौं। हुलाक व्यवस्थाको विकासमा प्रेस पत्रकारिताको स्वार्थको दृष्टिले हुलाकलाई विस्तृत गर्ने योजना बनी लागू हुनु पहिले नै अहिले रहेको डांकलाई सक्रिय र सुव्यवस्थित गर्ने अत्यावश्यक छ, साथै नेपालमा मुलुकभित्र भी. पी. र एम. ओ. कीमत भुक्तान रूपैयाँ चलानको व्यवस्था हुनु पत्रपत्रिकालाई सख्त जरूरी छ। यसले आम जनतालाई ठूलो सुविधा मिल्ने छ।



(६) छाप्ने कागजको उपलब्धीः– छाप्ने कागज नेपालका पत्रपत्रिकाको निमित्त एक ठूलो समस्या भइरहेको कुरा हामीले महशूस गरेका छौं। कमिशनलाई आफ्नो अध्ययनबाट अनुभव भए अनुसार नेपाली पत्रपत्रिकाको मुद्रण तथा वितरण संख्या ज्यादै कम हुनाको एक प्रमुख कारण पत्रपत्रिकाको मोल हो। १०" × १५" साइजको एक पन्ने या दुई पन्ने समाचारपत्रको मोल ५ देखि १० पैसासम्म हुनु कमिशनको दृष्टिमा महंगो नै लाग्दछ, त्यसमाथि पनि क्रयशक्ति ज्यादैकम भएका नेपाली जनताको निमित्त अखवार रोज किनी पढ्नु नै एक कठिन कुरा छ। यही कारणले नेपालका सबैजसो पत्रपत्रिकाको स्थायी पाठकको संख्या निकै कम छन्। पत्रिकाको मोल यसरी महंगो हुनाको कारण पत्रकारहरूले सहन परेका अनेक कठिनाइहरूको साथै छाप्ने कागजको महंगो भाउ नै हो भन्ने प्रेस कमिशनको धारणा छ। यस मोलमा दिन पनि पत्रपत्रिकाहरूले टुट्टा सहनुपरेको कुरा दृष्टिगोचर हुन आएको छ। छाप्ने कागज (News Print) को आयातको व्यवस्था अहिलेसम्म नभएकोले भारतको बजारबाट साह्रै महंगो भाउमा नेपाल आइपुगेका कागजबाट चलाउनु पर्दा पत्रपत्रिकाको मोल कहिल्यै घटन सम्भव छैन। यति मात्र नभई वजारमा कागत शून्य भई पत्रपत्रिकाले कागजी दुष्कालको सामना गर्न पर्ने स्थिति पनि कैयौं पटक आइसकेको छ। नेपालको छाप्ने कागज (न्यूजप्रिन्ट) आयात गर्ने व्यवस्था नभई यसै गरी भारतका बचेखूचेका कागजहरू ल्याई पत्रपत्रिका चलाई रहन परी कागजको अभावले नेपालका सारा पत्रपत्रिका बन्द हुने दिन आई नलाग्ला भनी भन्न सकिंदैन। यस निमित्त देशका सारा पत्रपत्रिकालाई उनीहरूको मुद्रण संख्या हेरी चाहिंदो जति छाप्ने कागज (न्यूजप्रिन्ट) पाउने व्यवस्था पनि हुनुपर्दछ। भारतको बजारबाट आएका छाप्ने कागज (न्यूजप्रिन्ट) को अहिलेको मोलमा नेपालले आफ्नु आयात व्यवस्था भएपछि झण्डै ४० प्रतिशत कम हुने अन्दाज यस कमिशनलाई छ। यसमा हुनसके सरकारले नै चाहिने जति छाप्ने कागज (न्यूजप्रिन्ट) झिकाई विना नाफा पत्रपत्रिकालाई उनीहरूको कोटा अनुसार कागज दिने व्यवस्था गर्ने वा यो सम्भव नभए आफूलाई चाहिने जति कागज आफैंले वा कुनै एजेन्सी मार्फत झिकाउन पाउने गरी पत्रपत्रिकालाई आफ्नो आफ्नो कोटा अनुसार इम्पोर्ट लाइसेन्स र तद्नुसार मुद्रा सटहीको सुप्रवन्ध मिलाई दिनु अत्यावश्यक छ। यसबाट नेपालका पत्रपत्रिकाको आजको आर्थिक संकट धेरै मात्रामा हट्नेछ तथा नेपालमा समय समयमा छाप्ने कागज (न्यूजप्रिन्ट) नै बजारमा शून्य हुने अवस्था पनि दूर हुनेछ।

(७) पत्रकारिताको शिक्षाः– नेपालको पत्रकारिताको इतिहासलाई हेर्दा हामी यही पाउँछौं कि २००७ सालभन्दा पहिले पत्रकारिताको शुरू वा २००७ सालपछिको पत्रकारिताको वास्तविक आन्दोलनको श्री गणेश पत्रकारितामा विशेष तालीम पाएका पत्रकारहरूको हातबाट भएको होइन; अरू हाम्रो देशका पत्रकारिताको जग बसाल्ने अग्रगामीहरू तथा व्यावसायिक पत्रकारहरू पनि होइनन्। पत्रकारिताको शुरू त यसरी पनि हुन सक्छ, तर आजको युगमा सुव्यवस्थित पत्रकारिताको विकासको निमित्त पत्रकारितामै शिक्षा वा तालीम पाएका व्यक्तिहरूको आवश्यकता महसूस गर्दछौं। पत्रपत्रिकालाई संवाददाता र अखवार नविसीहरूको निमित्त, राष्ट्रिय संवाद समितिलाई संवाददाता तथा प्रतिनिधिहरूको टीम खडा गर्न पनि पत्रकारितामा

विशेष तालीम पाएका व्यक्तिहरूको आवश्यकता हुन आउँछ । जुन विषयको पनि राम्रो विकास गर्न विशेषज्ञहरूकै आवश्यकता हुन्छ, नेपालमा पत्रकारिताको विकासको निमित्त पनि यस क्षेत्रमा विशेषज्ञहरू र व्यवसायी पत्रकारहरूको विकास गराउनु पर्दछ । यस निमित्त सरकारले आफ्नै छात्रवृत्ति तथा विभिन्न विदेशी छात्रवृत्ति अन्तर्गत छात्रहरू विदेशमा पढ्न पठाउनमा केही स्थानहरू (जर्नालिज्म) पत्रकारिताको निमित्त पनि राख्ने व्यवस्था हुनु अत्यावश्यक छ । साथै पत्रकारिताको शिक्षा सामूहिक रूपमा दिने देशभित्रै पनि पत्रकारिताका श्रेणीहरू सञ्चालन हुनुपर्दछ । यस्तो शिक्षा दुई प्रकारको दिने कमिशनको सुझाव छ ।

(क) शैक्षिक डिग्री भएका व्यक्तिलाई कलेजमा पत्रकारिताको विषय पढ्न पाउने व्यवस्था ।

(ख) पत्रपत्रिकामा काम गरिरहेका संवाददाता तथा पत्रपत्रिकाको सहयोगीहरूले तालीमी लिन पाउने प्रवन्धको निमित्त जर्नालिष्ट स्कूल बनाउने । यस बाहेक सम्पादन क्षेत्रमा आई पत्रपत्रिका चलाइरहेका प्रमुख पत्रकारहरूलाई विकसित देशका पत्रपत्रिकाको सञ्चालन, सम्पादन आदि अध्ययन गर्ने पाउने प्रत्येक मौका उपयोग गर्न पाउने व्यवस्था पनि हुनुपर्दछ भन्ने हामीलाई लाग्दछ ।

(८) सम्वाद समितिः– समाचार प्राप्तिको श्रोतको व्यवस्थाको निमित्त राष्ट्रिय सम्वाद समितिको गठन गर्ने कार्यतर्फ सरकारले नै कदम चाल्नु पर्दछ । यस विषयको योजना छुट्टै परिच्छेदमा दिइएको छ ।

(९) उदार कानून– हामीले माथि नै लेख्यौं कि हाम्रो देशमा बोल्ने, लेख्ने अधिकार प्राप्त भएकै धेरै अघिको कुरा होइन । यस स्थितिमा प्रजातान्त्रिक व्यवस्थाको विकास निमित्त यी अघिकारहरूको उपभोगमा सरकारबाट प्रोत्साहन दिइनु पर्दछ । प्रेस स्वतन्त्रता जनताको मौलिक अधिकारमध्ये एक मात्र होइन, बल्की प्रजातन्त्रको एक अभिन्न अङ्ग तथा प्रजातन्त्रकै विकासको एक साधन पनि हो । यसर्थ प्रेसप्रति सरकारको नीति सधै उदार रहनुपर्छ भन्ने महसूस गर्दै प्रचलित छापाखाना तथा प्रकाशन सम्बन्धी ऐन र प्रेस रजिष्ट्री ऐनमा हेरफेर हुनु प्रेस कमिशनले आवश्यक ठानी कानून संशोधनका सुझावहरू छुट्टै परिच्छेदमा दिइएको छ ।

(१०) यस बाहेक प्रेस पत्रपत्रिकाका चिट्ठी, डाँकबाट आउने समाचारहरू, पत्रपत्रिकाहरू देशभित्रका सञ्चारमा हुलाकबाट समाचारहरू, विशेष गरेर स्थानीय समाचार, सङ्कलन गर्ने र अरू पनि दैनिक सम्पर्कका कामहरू सञ्चालन गर्न पत्रका कार्यालयहरूमा टेलिफोन नभई नहुने कुरो हो । तर पत्रपत्रिका कार्यालयहरूको निरीक्षणबाट कमिशनलाई थाहा भए अनुसार नेपालका एक दुई पत्रिका कार्यालयमा बाहेक टेलिफोन रहेको देखिएन । रिसिवर सेट राख्न पहिले नै धरौटी को व्यवस्था भएको र अहिलेको अवस्थामा हरेक दृष्टिकोणमा पत्रपत्रिकालाई आर्थिक संकटको अवस्थामा गुज्रिन परिरहेकोले धरौटी राख्न नसक्ने असमर्थताले गर्दा टेलिफोनको रिसिभर सेट बाट प्राय सबैजसो प्रेस पत्रपत्रिका बञ्चित रहेका देखिए त्यसो हुनु प्रेस पत्रपत्रिका तथा सरकार



दुबै पक्षलाई सहयोग प्राप्त हुन र वस्तुस्थिति बुझ्न प्राय गाह्रो भइरहेछ ।

सो कुराको सुलभ पार्न टेलिफोन रिसिभर सेट धरौटी यथासम्भव प्रेस सल्लाहकार समितिको सिफारिशमा हरएक प्रेस पत्रपत्रिकाहरूलाई अरू रूल नियम बमोजिम महसूल लिने गरी टेलिफोन लाइन दिन आवश्यक छ ।

स्थानीय बाहेक देशका अरू ठाउँहरूसंग सम्पर्कको निमित्त पत्रिका कार्यालयहरूबाटै देशका विभिन्न स्थानमा ट्रङ्कल गर्न पाउने व्यवस्था पनि रहनु पर्दछ । त्यसो गर्दा लाग्ने महसूलमा उक्त सिफारिश बमोजिमको सुविधा पनि दिन बेस छ ।

प्रेस पत्रपत्रिकाका टेलिफोन, आकाशवाणीबाट आएका अति जरूरी खबर फ्लास न्यूजको डिलेभरीमा पनि हुनसक्ने ठाउँमा सकभर टेलिफोन द्वारा दिने व्यवस्था भएमा पत्र-पत्रिकालाई धेरै नै सहयोग सिद्ध हुनेछ, तर प्रेस रजिष्टर भएकाले मात्र यो समाचार पठाउने र पाउने व्यवस्था हुनु पर्दछ । लैजादा प्लेनबाट लैजाने व्यवस्था, आइपुग्ने वित्तिकै डिलेभरी हुने प्रवन्ध, पत्रपत्रिका सम्बन्धी कुराहरूलाई पत्रकारहरूको सुझावहरूलाई कदर गर्नु साथै पत्रपत्रिका कार्यालयहरूमा टेलिफोन राख्न विशेष सुविधा, ट्रङ्कलको विशेष व्यवस्था आदि अहिले प्रेस पत्रपत्रिकालाई सरकारबाट दिनपर्ने सुविधाहरू हुन भन्ने यस कमिशनलाई लागेको छ ।

## छापाखानाको लागि सहुलियत सुविधा

प्रेस मेशिन छापाखानासित प्रेस पत्रपत्रिकाको गहिरो सम्बन्ध छ, छापाखानाको विकास विना पत्रपत्रिकाको विकास असम्भव छ । प्रेस पेशाको दृष्टिकोणले नेपाल अझै निकै पछाडि छ भन्ने स्पष्ट छ । साच्चै भनौं भने आधुनिक छाप्ने कल मात्र हामीकहाँ आइनपुगेको होइन, नेपालमा छापाखाना उद्योगको राम्रो अर्थमा जग नै बसेको छैन । नेपालमा पहिला प्रेस छापाखाना खडा भएको झण्डै १०८ वर्ष भइसकेर पनि आजसम्म प्रेसका संख्याहरू बढ्नु बाहेक देशमा सन्तोषप्रद उन्नति गर्न सकेको छैन । देशका विभिन्न स्थानमा गएका कमिशनका सदस्यहरूको रिपोट तथा उपत्यकाका धेरैजसो छापाखानाको निरीक्षणको अनुभवबाट प्रेस कमिशनले नेपालमा प्रेस छापा-खानाको स्थिति सन्तोषप्रद छ भन्ने विचारमा पुग्न सकेको छैन । सरकारको गोरखापत्र छापाखाना र अरू एक दुई प्रेस छोडी धेरैजसो प्रेसहरूमा एक दुई ट्रेडलले काम गर्नु परेको छ । छोटकरीमा छापाखानाको विकास हुन नसक्नाको मुख्य कारण नै छाप्ने काम नपाउनु छ ज्यादा गरी देशभित्रकै प्रकाशनहरू देश बाहिरबाट छापिने र यस क्षेत्रमा सुविधा तथा प्रोत्साहनको कमी हो भन्ने कमि-शनलाई लाग्दछ ।

पत्रपत्रिकाको विकासको निमित्त छापाखानाको उन्नति अत्यावश्यक भएकोले पत्रपत्रिकाको साथ साथै छापाखानाको उन्नतितर्फ पनि सरकारको ध्यान जानु अत्यावश्यक छ ।

जहाँसम्म छाप्ने कामको कमीको सवाल छ, पत्रपत्रिकालाई प्रोत्साहन मिलेर विकास हुन सक्यो भने प्रेस (छापाखाना) लाई पनि काम मिल्दछ । सरकारी पुस्तक पुस्तिकाहरू समेत देशका छापाखानाहरूमा नछापिइ देशबाहिर मुद्रण हुन्छ भन्ने शिकायत कमिशनले भेटी छलफल गरेका धेरै नै महानुभावहरू तर्फबाट कमिशनमा आएको छ । नेपाली भाषा प्रकाशिनी समितिका

९स साल छापिने पुस्तकहरू मुद्रणका निमित्त बनारस गएको कुरा पनि प्रेस कमिशनको अगाडि उदाहरण आयो । यहाँबाट भ्याएसम्म देशकै छापाखानाहरूलाई सरकारले काम दिने नियम हुनु पर्दछ भन्ने कमिशनले महसूस गरेको छ ।

नेपालका छापाखानाहरूलाई काम नमिल्नाको एउटा अर्को कारण नेपालमा छाप्ता पुस्तकको जुन मोल हुन आउँछ त्यसभन्दा सस्तो मोलमा बाहिरबाट छपाई पुस्तक यही आइपुग्दो रहेछ । यसको कारण कमिशनलाई थाहा भए अनुसार भारत वा कहीं विदेशबाट नेपाल आउने कागज (ह्वाइट प्रिन्ट) मा रिमको करीब १।५० भन्सार लाग्ने, तर पुस्तकमा भन्सार नलाग्ने हुँदा यहाँ कागज किनी पुस्तक छाप्दा बाहिर छापी ल्याएका पुस्तकभन्दा बढी मोल पर्न जाने रहेछ। शिक्षा प्रचारको सद् उद्देश्यले सरकारले किताबमा भन्सार नलाग्ने व्यवस्था गरेको होला र सारा पुस्तकमा भन्सार लगाइ दिनाले शिक्षाको प्रोत्साहन रोक्नु हुन जाला भन्ने पनि शंका छ। तर पुस्तकको वर्गीकरण भई स्कूल कलेजका पाठ्य पुस्तक र अरू त्यस्तै उपयोगी शिक्षाप्रद बाहेक अरू साधारण र मनोरञ्जन किताबहरूमा भन्सार उचित मात्रामा लगाई दिए दुबै दृष्टिमा सन्तुलन कार्य हुन जानेछ ।

फेरी प्रेस सामानहरूमा साना साना पूर्जाहरूमा कम प्रतिशत भन्सार र ठूला ठूला मेशिन पूर्जामा ज्यादा प्रतिशत भन्सार रहँदा देशमा आधुनिक र विकसित छापाखाना ल्याउने प्रोत्साहन नदिनु झैं भइरहेको कुरा तर्फ सरकारको दृष्टि खिच्न यस कमिशन चाहन्छ।

नेपालका छापाखानामा छापिए जति पुस्तकको दुई प्रति गृह विभागमा बुझाई भरपाई लिएपछि मात्र प्रचार गर्न पाइने नियमले व्यावहारिकतामा पुस्तकहरूलाई कुनै बोर्डले पास गराउने जस्तो भइरहेछ भन्ने कुरा धेरैले कमिशनलाई बताए, तथा बाहिरबाट आउने पुस्तकमा यो नियम नलाग्नाले पनि देशको पुस्तकहरू देश बाहिर छापिने चलन बढ्न गएको भनी कमिशनले पत्ता लगाएको छ । हुन त कानूनमा प्रेसले छापेका कुनै पनि पुस्तक या पर्चा गृह विभागमा पास गर्न पर्दैन, तर दुई प्रति बुझाएको भरपाई नलिई प्रचार गर्न नपाइने र गृह विभागबाट बुझाउन लग्ने विस्तिकै नबुझ्ने तथा गृह विभागका एक अधिकारीले बुझिलिनलाई छापिएको पुस्तकमा केही हेरफेरको सुझाव दिने गर्दा छापाखानालाई नोक्सान हुने साथै व्यावहारिकतामा प्रकाशन पास गर्न परे झैं हुन गएकोले प्रेस स्वतन्त्रतामाथि नै एक किसिमको प्रतिबन्ध झैं हुन गएको छ। कानूनमा सरकारलाई दुई प्रति प्रकाशन बुझाए पुग्ने हुँदा बुझाउने व्यवस्थातर्फ सम्बन्धित विभागले ध्यान दिनुपर्ने आवश्यकता देखिन्छ ।

देशको पत्रकारिताको स्थितिलाई विचार गरी हेर्दा पत्रकारिताको विकास तथा जनताको राष्ट्रिय जीवनमा प्रेस छापाखानाको महत्वतर्फ विचार गर्दा राम्रो व्यवस्था भएका, उन्नतिको निकै आशा गर्न सकिने छापाखानाहरूलाई सरकारले निर्व्याजी सापट दिएर पनि अहिलेको स्तरबाट छापाखानाहरूलाई उकाल्नु परेको छ । नेपालमा प्रेस उद्योग अविकसित स्थिति मा न भए तापनि उपत्यकाभित्र प्रेस एक प्रमुख उद्योग भइसकेको छ– यहाँ प्रेस कामदार, कम्पोजिटर कै एक वर्ग खडा भइसकेको छ, यस अवस्थामा यस उद्योगलाई बढावा दिनु नै सरकारको निती हुनु पर्दछ भन्ने हाम्रो विचार छ ।



देशका केही ठाउँमा उदाहरण स्वरुप काठमाडौंमा छापाखानाको संख्या धेरै भइसकेको र सरकारी प्रेस पनि रहेको हुँदा प्रेस वर्कशप र टाइप फाउण्ड्रि पनि आवश्यक देखिइसकेको-छ। देशका साना साना प्रेसले आफ्नै वर्कशप र टाइप फाउण्ड्रि राख्न नसक्ने र यसको निमित्त विदेशमा भर पर्न परिरहेछ । सरकार तर्फबाट वर्कशप र टाइप फाउण्ड्रि खोलिएमा सरकारी प्रेसको आवश्यकता पनि टर्ने र अरू छापाखानालाई पनि धेरै सुविधा मिल्न सक्छ ।

छापाखानाहरूलाई यथेष्ट पावर विद्युत शक्ति पाइने सुविधा दिने कुरा पनि यस कमिशन शिफारिश गर्दछ ।

छापाखाना उद्योगको विकासको निमित्त सरकारको विचारमा राम्रो काम भइरहेका छापाखानाहरूलाई बढाउन छापाखाना नै धितोमा लिई पैसा सापट दिने व्यवस्था पनि अहिलेको व्यवस्थामा आवश्यक देखिन्छ ।

परिच्छेद ८

## प्रेस (पत्रिपत्रिका) सम्बन्धी कानूनी सुधारको आवश्यकता

स्वच्छ पत्रकारिताको आफ्नो कर्तव्य पालनमा कुनै बाधा उत्पन्न भइरहेको महसूस गर्न हुन्छ कि भए ती बाधाहरू के के हुन् ? भन्ने यस प्रेस कमिशनको प्रश्नावलीको प्राप्त उत्तरावलीमा धेरै महानुभावहरूले आर्थिक संकटलाई प्रधानता दिई जबसम्म पत्रकारको आफ्नो प्रकाशनलाई अर्काको मुख ताक्नु पर्ने परिस्थिति र अवस्था परिरहन्छ, तबसम्म स्वच्छ र स्वस्थ पत्रकारिताको कल्पनासम्म गर्नु पनि हास्यास्पद हुन जानेछ भन्ने मत प्रकट गर्नु भएको र केही सज्जनहरूले जबसम्म पत्रकारहरूमा पत्रकारिताको शैक्षिक योग्यता तथा कुशल अनुभवको खाँचोको प्रतिकूलमा पनि आफूलाई कसैको प्रेरणा वा आफ्नै क्षणिक आवेशको भरमा दलगत वा व्यक्तिगत स्वार्थको निमित्त पत्रकारको नाममा दुनियाँको अगाडि उभिने लगन चलिरहन्छन्, तबसम्म पत्रकार जगतमा सुदृढता आउन सक्तैन भन्ने सुझाव छ ।

उक्त दुई मत बाहेक अरू केही सज्जनहरूले वर्तमान् छापाखाना र प्रकाशन सम्बन्धी ऐन २००९ को केही दफालाई किटी औल्याई, कसैले समुचा ऐनलाई हचूवा बोलीमा ऐनको संशोधन तर्फ सकेत गरेका छन् ।

कानूनविषय बाहेक उक्त दुई विषयमा अर्कै परिच्छेदमा विवर्शन गराईएकोले कानून विषयमा यस परिच्छेदमा केही सुझावहरू प्रस्तुत गरिन्छ ।

प्रकाशन स्वतन्त्रताबारेमा देशमा के अवस्था रहेछ भनी केलाई हेरेमा अन्तरिम शासन विधान (तेस्रो सशोधन, २०१०) को गत २००७ साल चैत्र २९ गते देखिन् नै लागु हुने गरी प्रकाशनमा आएको विधानको १६ दफाभाः–

"प्रचलित कानूनको अधिनमा रही–

(क) वाक र प्रकाशन स्वतन्त्रताको अधिकार हुनेछ" भन्ने कानूनी मूल निर्देश सिद्धान्त निर्माण भएको देखिन्छ ।

यसैको सिलसिलामा प्रकाशन सम्बन्धमा के कति ऐन कानून प्रचलितमा आईसके को रेछ भनी यो प्रेस कमिशनले छानबीन गर्दा निम्न लेखिएका ऐन कानून अहिले प्रचलितमा भएको देखियो ।

(१) मुलुकी ऐनको अदलको ३१ क नं.
(२) छापाखाना प्रकाशन रजिष्टरी सम्बन्धी ऐन २००८
(३) छापाखाना प्रकाशन सम्बन्धी ऐन २००९
(४) छापाखाना प्रकाशन रजिष्टरी सम्बन्धी साविक ५, ६ दफाको ०११-१-१६-४ को संशोधन ।
(५) काठमाडौं उपत्यकाञ्चल कमिश्नर मैजिष्ट्रेटको सवाल (संशोधन २०१४) नेपाल गजेट खण्ड ७ अतिरिक्ताङ्क १, साल २०१४-८-२० मा प्रकाशन
(६) मधेश गोश्वारा (सशोधन ऐन २०१४) नेपाल गजेट खण्ड ७ अतिरिक्ताङ्क १०, साल २०१४।८।२० मा प्रकाशित ।
(७) नागरिक अधिकार ऐन २०१२
(८) छापाखाना प्रकाशन सम्बन्धी (दोस्रो सशोधन) ऐन २०१४ नेपाल गजेट खण्ड ७ अतिरिक्ताङ्क १० साल २०१४-८-२० मा प्रकाशित

प्रजातन्त्र प्रणाली भएको देशमा जसलाई जति कुराको अधिकार हुन्छ, त्यसको त्यत्ति नै कर्त्तव्य पनि हुने हुदा अधिकार तथा कर्तव्यलाई ठीक तौलमा राखेर जसले जुन काम गर्दछ, त्यो नै उसको अधिकार स्वयं सिद्धको कुरा भएकोले यसको प्रतिकूलमा बनेको कुनै कानून र नियम प्रजातन्त्र सुहाउदो हुन सक्तैन । यस कुराको दृष्टिकोणले हेर्दा देशको शान्ति सुरक्षाको निमित बनेको कानूनको परिधिभित्रै वाक तथा प्रकाशन स्वतः आउने हुदा यसको निमित छुट्टै कानून धेर जसो प्रजातान्त्रिक देशहरूमा दरकार नसम्झी नभएको देखिन्छ। तर नेपाल प्रजातन्त्रको प्रथम सिढीमा नै भएकोले सव कोही विषयमा ऐन कानून पनि बनी नसकेको र प्रजातन्त्र पद्धतिको सिध्वान्त अनुसार कार्यान्वित हुदा बन्न गएका विभिन्न दृष्टिकोणका गहिरो छापको परम्परा बहुत पातलो त के, छैनकिको बराबर भएकोले पहिले पहिले शुरूमा जुनसुकै काममा पनि धेरै कुराको प्रेरणाबाट मानिस मात्रको मनोवृत्ति कर्तव्यतिर भन्दा अधिकारतर्फ ढल्कने सम्भावना भएको समेत हुँदा मानिसको मनोवृत्ति स्वस्थ तथा स्वच्छ स्थानमा पुर्‍याउनको उद्देश्यले एक परम्परा बसाल्नको निमित्त मात्र पनि वर्तमान व्यवस्थालाई प्रकाशन सम्बन्धी कानूनको दरकार देखिन आउँदछ। जति मानिसहरू अधिकार तथा कर्तव्यमा अभ्यास भई आफ्नू निश्चित कर्तव्यको छापा स्पष्ट तुल्याउँदै जान्छन्, त्यसको साथसाथै कानूनको परिधि पनि विशाल र उक्त लेखिएको आधारभूत मूल सिद्धान्तमा ऐन कानून परिणत गद लानु प्रजातन्त्र प्रणाली सुहाउँदो समयानुकूल कदम हुनेछ ।

कमिशनलाई प्राप्त भएको कानून विषयको सुझावहरूमा छापाखाना र प्रकाशन सम्बन्धी ऐन २००९ को ३६ दफाको तिब्र विरोध देखिन आएको छ। सो ३६ दफामा दुनियाँको



हितको निमित्त सरकारले जुनसुकै खबर आलोचना र प्रकाशन रोक्न सक्छ भन्ने लेखिएको छ । त्यो ऐनले कुनै प्रकाशनलाई बन्द गर्नको कारणमा दुनियाँको हितलाई हेर्ने कुरा त्यो ऐनमा प्रष्ट लेखिएको देखिनाले विना कारण सरकारले कुनै प्रकाशन रोक्ने कुरा त सवालै उठ्न नसक्ने हो ।

(१) तर दुनियाँको हित भन्ने शब्दको परिधि स्पष्ट रूपमा नभई असिमितहुन गएकोले सो प्रयोग गर्दा सरकारिया कर्मचारीहरूको कार्यमा पनि पग पगमा टीका टिप्पणी भई त्यसको प्रतिक्रियामा वस्तुस्थिति नै धमिलीन जाने र कुनै निश्चित संकेत नभएबाट पत्रकारहरू सरकारदेखि सधैं सचेत र सशंक भइरहनु पर्ने परिस्थिति उक्त वाक्यबाट बनिरहने नै हुँदा पत्रकार र सरकारको बीचमा सामन्जस्य हुनुको बदला मन मुटावले प्रोत्साहन पाउने अवस्था बनाई रहन्छ ।

(२) जुन ऐन कानूनको प्रतिकूल पर्ने गरी जसले जे कार्य गर्दछ त्यसलाई त्यै कानूनको आधारमा सजाय हुने कानूनमा व्यवस्था गर्नु प्रजातन्त्र पद्धतिको श्रीगणेश भएकोले सो सिद्धान्त-लाई अङ्गालेर नागरिक अधिकार ऐन २०१२ बनी प्रकाशमा ल्याइसकेको समेत देखिएकोले त्यसको प्रतिकूल हुने गरी बनेको ऐनको स्वतः मर्यादा भङ्ग हुन्छ र त्यस्ता ऐन प्रयोग भएमा वादविवादको अध्याय खोलिन्छ ।

(३) दुनियाँको हित बहुतै वादविवादको विषय हो । यस्तो तर्कदारी शब्दको पृष्ठभूमि मा जो कानून आधारित हुन्छ, त्यसको प्रयोगको नतीजामा एकमत कहिल्यै कसैको हुन सक्तैन ।

(४) दुनियाँको हितको परिभाषा यो ३६ दफा समावेश भएको छापाखाना र प्रकाशन सम्बन्धी ऐन २००९ मा कतै उल्लेख भएको छैन । जब कानूनी रूपले त्यसको अर्थ र तौल कहिले पनि एकै नासको होला भनी भन्न कदापि सकिदैन । समय र परिस्थिति अनुसार दुनियाँको हितको अर्थमा विभिन्न तरीकाबाट कार्यान्वित हुन जाने सम्भावना छ ।

(५) दुनियाँको हित भन्नाले कुनै कुरा घट्न लाग्दा त्यो घट्न नदिन रोक्ने वा सो घटेपछि अर्को चोटि त्यस्तो घट्ना पुनः हुन नदिन दुनियाँको हितको निमित्त रोक्ने केहो ? घट्नै नदिई रोक्दा कसैले केही नगर्दा पनि यो कानून प्रयोगमा आउने सम्भावना छ ।

(६) जुन दृष्टिकोणले दुनियाँको हितको निमित्त खबर आलोचना वा प्रकाशन बन्द गरिन्छ, त्यस्तो अर्थमा चित्त नबुझे निष्पक्ष कुनै क्षेत्रमा गएर, जस उपर सो घट्ना घट्दछ, उसले आफ्नु प्रतिक्रिया दर्शाउने हो, सो कुरा पनि स्पष्ट रूपमा उल्लेख नहुँदा शान्ति र नम्र मनोभावनालाई पनि उच्छृखङलता र उग्ररूपमा परिणत पार्ने परिस्थितिलाई आह्वान गर्दछ ।

यसैले हरेक दृष्टिकोणबाट कानून भनेको स्पष्ट रूपको हुनु पर्दछ र जस्तो काम कुरा गर्दा वा गर्न लाग्दा जो अहित हुन जान्छ भन्ने ठहरिन्छ, त्यसको स्पष्ट रूपमा अनुसूची तयार पारी तदनुसार कानूनको प्रतिवन्ध हुनु बेस छ ।

यदी यो दफा रहने नै हो भने पनि "दुनियाँको हित" भन्ने वाक्यलाई यसरी असिमित नबनाई कानूनी प्रष्ट व्याख्यान गरी त्यसको प्रतिकुलमा लेखिएका जो जति प्रकाशन देखिन

आउदछन् या ठहर्दछन्, त्यसको सो लेखिएका प्रति मात्र खबर आलोचनाको प्रकाशन, सरकारले रोक्नु समयानुकूल हुनेछ। नत्र एक पटक निस्केको प्रकाशनको प्रतिक्रियाले धेरै काल समय देखि देश, नरेश र जनताको लामो सेवा गरिआएको देशको प्रतिष्ठित पत्रिपत्रिकाको पनि गति बन्द गर्ने जस्तो हुनेछ। न्यायको तौलमा त्यस्तो किसिमको सजाय सन्तुलन पूर्ण, देखिने छैन र त्यसको प्रतिक्रियाले कहिले पनि पत्रकारिता देशमा छिपिन पाउने परम्परा जम्न पाउने अवस्था आउन दिदैन।

प्रजातन्त्र पद्धति भएको देशमा बन्ने कानून तथा ऐनहरूको मूल आधार संविधान संग हुन्छ। विधानद्वारा प्रदत्त अधिकार हनन् हुने गरी बनेको कानून स्वतः गैर कानूनी ठहर्दछ। अहिले प्रचलनमा आएको अन्तरिम शासन विधानमा "वाक तथा प्रकाशन" यी दुई विषयलाई एउटै सूत्र तथा तौलमा राखेको देखिन्छ।

वाक् स्वतन्त्रताको आधारमा प्रचलित कानूनले प्रतिवन्ध भएको विषय तथा परिपाटिलाई ध्यानमा राखेर, सो बाहेक जो कोहिले पनि आफ्नू ईच्छाधीनको विषयमा बोल्न कानूनले न त कसैको ईजाजत चाहिन्छ, न कुनै परिपाटीको प्रतिवन्ध देखिन्छ।

तर प्रकाशन सम्बन्धमा भने छापाखाना र प्रकाशन सम्बन्धी ऐन २००६ को ४।८ दफाको उपदफा १।२ ले कार्यान्वित हुनु भन्दा अगाडिनै स्थानीय हाकिमले रू. १,०००।– सम्म डिपोजिट माग्न सक्ने र सो दाखिल गर्न नसके छापाखाना स्थापित गर्ने प्रकाशन गर्ने कार्यमा लाग्न बञ्चित गरिएको छ।

यसबाट यो कुरा स्पष्ट हुन्छ कि विधानले देखाएको समान अधिकारमा पनि कानूनले व्यावहारिक पद्धतिमा विलकूल भिन्नता पारिदिएको छ।

विधानमा वाक तथा प्रकाशन विषयमा समान अधिकार भएपछि तद् अनुसार बन्ने कानून पनि यस विषयमा समानताको हुनु पर्दछ। कथं कदाचित परस्परमा प्रतिकूल पर्न गए कानूनले विधानको परिधिलाई नै नाघेको ठहर्न जानेछ, जो कानूनको दृष्टिकोणबाट कदापि त्यस्तो हुन सक्तैन, साथै हुनु अनुचित हो।

प्रकाशन सम्बन्धी कार्यमा प्रथम भागमा नै यो डिपोजिट माग्न सक्ने कानूनी व्यवस्थाले शैसव अवस्थाको प्रेस तथा पत्रपत्रिकाको विकास तर्फको लम्काईलाई पनि ठूलो तगारो हुन गएको छ।

किन कि वर्तमान पत्रकारिताको फस्टाईको कमीमा आर्थिक कमजोरी नै एक ठूलो कारण नने कुरा भिन्न परिच्छेदमा दर्शाई सकेको विषय हो।

अर्को कुरा, प्रकाशन सम्बन्धी विषयमा कानूनको परिधि नाघेर कसैले कुनै कार्य गर्‍यो भने त्यस्तोमा प्रकाशन जफत गर्ने, डिपोजिट माग्ने, सो मागिएको डिपोजिट जफत गर्ने र अर्को स्वीकृति नभए पूर्व स्वीकृतिबाट चलेको सञ्चालन स्वतः बन्द हुने पद्धति छापाखाना र प्रकाशन सम्बन्धी ऐन २००६ को ६–११–१३ दफामा व्यवस्था भएको प्रस्टै देखिएकै हुँदा त्यो



विषयमा केही कार्य गर्नु भन्दा अगाडि पनि अर्को प्रतिवन्ध रहनु अस्वाभाविक मात्र हैन कि अयुक्तिसंगत देखिन्छ।

त्यसमा पनि डिपोजिट राख्न पर्ने कुनै अनिवार्य नभई स्थानीय हाकिमको स्वेच्छामा निर्भर हुने कानूनी व्यवस्था हुँदा त्यस्तो ढङ्गको कानूनी सिद्धान्त रहन गएमा सबैलाई समान व्यवहार होला भन्ने कुरामा पनि शंकै छ। त्यस्तो व्यक्तिबाद भिन्न नीति अपनाइने कानूनी पद्धति रहनु कानूनको मर्यादामा आँच पुग्न जानुको साथै कानूनमा पनि केही कटमिरोपना झल्किन्छ, जसको प्रतिक्रियाले कानून प्रतिको मर्यादामा नै धक्का पुग्दछ।

अतः पत्रपत्रिका प्रकाशन गर्नु वा छापाखाना राख्नु भन्दा अगाडि डिपोजिट माग्न सक्ने छापाखाना र प्रकाशन सम्बन्धी ऐन २००६ को ४ र ८ दुबै दफाको क्रमशः उपदफा १ र २ खारेज गर्नु दरकार छ। साथै त्यसैको ३.४ उपदफालाई क्रमशः १.२ गरी ४ उपदफा माउल्लेख भएको (२) लाई (१) मा परिणत गर्नु र ४ र ८ दुबै दफामा देहायको २ उपदफामा क्रमशः देखिएको "यो ऐन बमोजिम धरौट नलिइएको वा उपदफा ३ बमोजिम धरौट फिर्ता भइसकेको छापाखाना र समाचारपत्र" भन्ने वाक्यको दरकार देखिंदैन। छापाखाना र प्रकाशन सम्बन्धी ऐन २००६ को सिद्धान्त अनुसार लेखक तथा प्रकाशकलाई भन्दा छापाखाना उपर कडा निगरानी राखेको देखिन्छ।

यसो हुनाको मूल कारण लेखक तथा प्रकाशक सम्ममा मात्र सीमित भएको योजना वा लेख जनसमक्ष उतारी प्रकाशमा ल्याउने मुख्य साधन छापाखाना नै हो भन्ने सम्झी त्यसो हुन गएको होला। कुनै एक हदसम्म यो तर्क पनि ठिकै होला, तर अहिले विचार नगर्ने हो भने यस्तो दृष्टिकोण उपयुक्त हुन सक्तैन।

छापाखाना एक उद्योग धन्धा हो, जसको सञ्चालन गर्न कानूनले एक वा धेरै व्यक्ति समूहले सक्छन्। देशको तब उन्नति हुन्छ, जब औद्योगिक धन्धाले प्रोत्साहन पाउँदछ; जुन कुरा आज विकसित कहलाइएका देशको दृष्टान्त सबैको अगाडि प्रत्यक्ष छ।

यस्ता परिस्थितिमा छापाखानालाई नै विशेष गरी दोष थुपारिने किसिमको कानूनी पद्धति र लोभले छापाखानाको विकासमा धेरै उकालो परिरहनेछ।

छापाखानाले जो जस्ता किताव लिखत पत्र, समाचारपत्र, समाचार पत्रिका छाप्दछ, त्यसको पृष्ठभूमिमा कुनै न कुनै रचनाकार वा प्रकाशक जरूरै हुने हुँदा जसले जुन कुराको उद्देश्य लिई जे कुरा गर्‍यो वा गर्न खोज्यो, त्यो नै त्यसको जवाफदेही रहनु कानूनी दृष्टिकोण हुनुपर्दछ। नकि ज्यालामा काम गर्ने सिद्धान्तले नै कानून बमोजिम स्थापित भएको कुनै एक व्यावसायिक यन्त्र वा सो सञ्चालनमा पूंजी लगाउने देशको औद्योगिक व्यक्ति। लेखक या प्रकाशक गुम छन् वा छापाखानाको नै आयोजना अन्तर्गत प्रकाशित गरिने हो भने ता कुरा भिन्दै हो र त्यस अवस्थामा पनि छापाखाना सञ्चालित गर्नु स्थानापन्न व्यक्ति उपर लेखक वा प्रकाशकको रूपमा मात्र कानूनी कारवाई हुनुपर्दछ। छापाखानाको गतिविधिमा कुनै आँच पर्न दिन हुँदैन।

नेपालमा किताबको रूपमा आज जो जति प्रकाशन देखिएको छ, ती प्रायः स्वदेशी छापाखानामा नछापिइ विदेशका छापाखानामा छापिन पुगको एक मुख्य कारण पनि उही हुन सक्छ।

यो परम्परालाई जति छापिन र अगाडि बढ्ने व्यवस्था कायम भइरहन्छ, मानिसमा राष्ट्रियताको गहिरो धारणा र राष्ट्रियताको भावना नउठ्नाको कारण मध्ये यो पनि एक भई रहन्छ।

यस्तो परम्परा हुन जानु राष्ट्र विकास तथा हितको निमित्त एक ठूलो घातक हुनेछ। यीनै कुरालाई दृष्टिमा राखेर छापाखाना र प्रकाशन सम्बन्धी ऐन २००९ को ५ दफाको उपदफा (१) मा उल्लेख भएको "कुनै छापाखाना" भन्ने शब्दको बदला "मुद्रक, प्रकाशक, सम्पादक तथा लेखक" भन्ने रहनुपर्दछ।

अर्को कुरा जो शख्त जरूरत छ, त्यो यस ऐनमा रहित छ' "त्यो हो राष्ट्रियता" त्यसको खलल विषयमा कुनै उल्लेख भएको देखिंदैन; जो देशको हितको निमित्त शख्त जरूरी मात्र हैन कि अनिवार्य नै छ।

अतः सो ऐनको दोस्रो संशोधनको ५ दफाको उपदफा १ को (६)मा "खलल" पार्ने भन्ने शब्दको अगाडि "राष्ट्रियताको" भन्ने शब्द पनि हुनुपर्दछ र ५ को उपदफा(ज)सोही "५ दफाको स्पष्टीकरण "– अन्तर्गत आउनुपर्दछ। अर्को कुरा छापाखाना तथा प्रकाशन सम्बन्धी ऐनमा स्पष्ट शब्दमा संपादक र मुद्रकको कुनै कर्तव्य र दायित्व उल्लेख भएको छैन, शिर्फ प्रकाशक र छापाखानाको धनी उपर मात्र विभिन्न दृष्टिकोण अपनाएको छ।

छापाखानाको मालिक नै स्वतः मुद्रक सम्झिए जनसमूहको सामूहिक आर्थिक सङ्कलनबाट चलेको छापाखानाको कैयौं सेयरहोल्डरलाई मुद्रक भन्नुपर्ने अवस्था पर्न जान्छ, जो कम्पनी कानूनले त्यस्तो मिलकोकार्यको जवाफदेही बेहोर्न नपरी लगाएको नाफा नोक्सान सम्मको बेहोरे पुग्दछ। अतः छापाखाना सञ्चालनका पूंजी वाला सबका सबलाई कानूनले मुद्रक भन्नमिल्दैन।

यस्तो परस्पर विरोधी कानून र अव्यावहारिक कुरालाई तुरून्त अन्त्य गरी यसको स्पष्ट व्यवस्था हुनु परेको छ, जसको कार्यको असर जड छापाखानालाई नछोई त्यो गर्ने गराउने व्यक्तिसम्म मात्र सीमित हुनुपर्दछ। यसैले अब यहाँ सवाल उठ्दछ, छापाखानाको मुद्रक को हुन सक्छ र कुन छापाखानाको मुद्रक को भनी सरकारले थाहा पाउने र त्यसको दायित्व कस्तो हुनुपर्दछ।

कम्पनी कानूनको रूपबाट प्रेसधनी एक व्यक्ति वा लिमिटेड कन्सर्न समेतबाट हुन सक्ने भएकोले छापाखाना र प्रकाशन सम्बन्धी ऐन २००९को ४ र ७''दफामा प्रेसधनी वा छापाखाना मालिक"भनी जो लेखिन गएको छ र तिनीहरू उपर जो कारवाईको व्यवस्था छ, त्यसले कम्पनी कानून र छापाखाना प्रकाशन सम्बन्धी ऐनसंग सामन्जस्य आएको देखिंदैन। एउटा ऐनको सिद्धान्त-लाई अर्काले खण्डन गरेको छ।



उक्त दुबै ऐनबाट प्राप्त सुविधाको वचावट निमित्त प्रेस छापाखानाको कारवाई उपर प्रेसधनीमा मात्र सीमित नगरी छापाखाना जिम्मा लिई प्रेस सञ्चालन गर्न प्रेसधनीहरूबाट लगाउ कुनै व्यक्ति वा प्रेसधनी नै मुद्रकको रूपमा नियुक्ति हुनुपर्दछ र प्रेस सम्बन्धी कार्यमा त्यै व्यक्ति पूर्णतया जवाफदेही हुनुपर्दछ छापाखाना प्रकाशन रजिष्टरी सम्बन्धी ऐन २००८ को ५-६-९ दफामा जसको दर्ता र खारेजीको समेतको व्यवस्था प्रष्ट देखिएको छ। तर आजतक प्रेसधनीलाई नै जो मुद्रक बनाइएको छ, त्यो विलकुल अव्यावहारिक छ।

मुद्रकको स्थान कहिले पनि रिक्त हुनु हुँदैन र छापाखानाबाट छापिएका अनधिकृत पत्र तथा अनधिकृत पत्रिकाको छापाखाना उपर पनि पूर्ण उत्तरदायित्व मुद्रकमानै निर्भरहुनुपर्दछ।

कानून बमोजिम मुद्रक कायम हुनुभन्दा अगाडि वा मुद्रकको रिक्त समयमा छापिएका गैर कानूनी प्रकाशनप्रति मात्र निजी प्रेस भए प्रेस मालिक र लिमिटेड कन्सर्नको छापाखाना भए त्यस कामलाई मुकरर गरिएको व्यवस्थापक व्यक्ति मुद्रकसरह जवाफदेही हुनुपर्दछ।

उक्त कुराको पूर्णतया जवाफदेही बहन गराउन छापाखाना र प्रकाशन सम्बन्धी ऐन २००९ को ३५ दफामा "लेखिएको प्रेसवाला या प्रेस कम्पनीको मेनेजरलाई थाहा नदिई" भन्ने वाक्य झिकिनुपर्दछ।

छापाखाना र प्रकाशन सम्बन्धी ऐन २००९ को ४।८ दफाको उपदफा ३ र दफा ५, ७, ९, ११, २१ बमोजिम जफत हुने भएको धन माल विषयमा दफा ५ को उपदफा (१) बमोजिम उल्लिखित शब्द चिह्न अथवा आकार हो होइन भन्ने निर्णयतर्फलाई मात्र सो ऐनको २२ दफा ले अदालतको शरण जान पाउने व्यवस्था देखिएको र सो बाहेक सोही ऐनको दफा १२।१७।१८।१९बमोजिम भएको परिणाम उपर र यो छापाखाना र प्रकाशनसम्बन्धी ऐन२००९ को दफा दफामा लेखिएका कार्य प्रणालीको प्रतिकूल भएको कुनै कारवाई उपर समेत अदालतको शरण जान पाउने ऐनमा प्रष्ट व्यवस्था नभएको र"दियालो"दैनिकले काठमाडौं मैजिष्ट्रेट उपर दिएको उजुरीमा कार्यविधि तर्फ अदालतको अधिकार क्षेत्र बाहेकको भन्ने सर्वोच्च अदालतको स्पेशियल बेन्चले फैसला दिएकोले सो २०१४–७–२०–३का फैसलाले कार्यविधि तर्फ अदालतले हेर्न नपाउने सिद्ध हुन गएकोले त्यसो हुनु उचित नहुँदा कार्य प्रणालीतर्फ पनि अदालतले ठीक बेठिक के हो भनी हेर्न पाउनु पर्ने व्यवस्था हुनु पर्दछ। कानून बनी त्यसको अन्तर्गत भएका कार्य, आदेश, निर्देश र फैसला या त्यो प्रशासकीय यन्त्रद्वारा भएको होस या न्यायपालिकाबाट भएको होस्, कानून बमोजिम सो भएको छ छैन भन्ने जाच्ने वा अपिल सुन्ने र कानूनको व्याख्यान गर्ने पूर्ण अधिकार देशको सर्वोच्च अदालतलाई हुनु पर्दछ। प्रशासकीय क्षेत्रले कानूनको अर्थ लगाई त्यसको परिधिभित्र मात्र सीमित हुनु हो भने कानून, कानून रहन सक्तैन।

अतः उक्त ऐनको २२ क दफाले ५, ७, ९, ११, २१ को र ५ को १ दफा भित्र पर्छ पर्दैन भन्ने कुरा लिएर मात्र अदालतको ढोका घचघच्याउने व्यवस्था भइरहेछ। छापाखाना र प्रकाशन रजिष्टरी सम्बन्धी ऐन अन्तर्गत भएका सबै गतिविधि र कार्य, आदेश, फैसलाउपर उक्त ऐनको दफा २२ बमोजिम गठन गरिने सर्वोच्च अदालतको स्पेशीयल बेन्चले हेरिने व्यवस्था हुनु बेस छ।

समितिको तालुकवालाले १० वर्षसम्मलाई किताव वा लेख रजिष्टरी गरिदिने अदलको ३१ क नं. ऐनमा लेखिएको छ। प्रकाशन सम्बन्धी विषयमा अब समितिसंग कुनै सम्पर्क नरही छापाखाना प्रकाशन सम्बन्धी र रजिष्टरी सम्बन्धी दुबै ऐनले स्थानीय हाकिम वा बडाहाकिमसंग सम्बन्धीत रहन गएकोले सो कुरामा एउटा पद्धतिमा ढाल्नका निमित्त अदलको ३१ क नं. मा उल्लेख भएको समितिको तालुकवालाको सट्टा स्थानीय हाकिम वा बडाहाकिम रहनु बेस छ। नेपाल ऐन व्याख्या सम्बन्धी ऐनको २८ दफाले ०७ सालभन्दा अगाडि प्रकाशमा आएका कानूनमा उल्लेख भएको तालुकवाला शब्दलाई सरकार सम्झाउने भएकोले समेत अदलको ३१ क नं. उल्लेख भएको तालुकवालाको सट्टा स्थानीय हाकिम वा बडाहाकिम रहनु पर्दछ।

अर्को कुरो त्यसरी रजिष्टरी भएको प्रतिकूल पारी प्रकाशन गरेमा सजाय कसले गर्ने हो ? सो कुरोपनि सो अदलको ३१ क नं. मा प्रष्ट नहुँदा त्यसतर्फको कारवाई र सजाय गर्ने अधिकार पनि छापाखाना प्रकाशन सम्बन्धी कानूनको प्रयोग गर्न पाउने अधिकारीलाई हुनु पर्दछ। अदलको ३१ क नं. का ऐनले रजिष्टरी गराइएका प्रकाशनलाई मात्र तोकिएको म्यादसम्म अरूले छाप्न नपाउने संकेत गरेको छ। कानूनको नियम रूल अन्तर्गत प्रकाशमा आएका गैह्र प्रकाशनलाई स्वतः सर्वाधिकार (Copy Right) हुन जाने छापाखाना प्रकाशन रजिष्टरी सम्बन्धी ऐनमा यसको केही व्यवस्था छैन।

यस्तो पद्धती रहेमा रजिष्टरी बेगर जसको प्रकाशन पनि उसको अधिकारमा रहन नगई प्रकाशकको स्वीकृति बेगर उनाउ कसैले पनि प्रकाशन गर्न सक्ने अवस्था पर्न जानेछ। यसैले सो कुरा हुन नपाउनाको निमत्त कानून अन्तर्गत प्रकाशमा आएका जो जति प्रकाशन हुन्छन्, ती सब प्रकाशकको स्वतः सर्वाधिकार सुरक्षित हुनु पर्दछ। कि त भने सर्वाधिकार गर्न पाउनेतर्फ कानूनी व्यवस्था हुनु आवश्यक छ।

संवाद समिति विषयमा नेपाल कानूनमा केही संकेत देखिदैन। यसको गठनको विषयमा सरकारले दिलचस्पी लिएको र विदेशी संवाददाता जस्तै "हिन्दुस्तान समाचारले" नेपाल-को विभिन्नस्थानमा सरकारसंगको कुनै किसिमको सम्झौता नगरेरै पनि आफ्नु कार्य आफ्नै नियम रूल अन्तर्गत संचालन गरेको विभिन्न श्रोतबाट यस कमिशनलाई अवगत हुन आएबाट समेत संवाद समिति सम्बन्धमा पनि देश तथा परिस्थिति सुहाउँदो कानूनको दरकार देखिन्छ।

पत्र-प्रतिनिधिहरूलाई सरकारिया मान्यता के कस्तो कसलाई दिइने हो, सो विषयमा पनि कुनै कानूनी व्यवस्था देखिंदैन। त्यस विषयमा पनि कानून बन्नु शख्त जरूरत देखिन्छ।

परिच्छेद ६

## प्रेस सल्लाहकार समिति

प्राक्कथन

"प्रजातन्त्रको प्रादुर्भाव पछि हाम्रो मुलुकमा अनेक संस्था, कमिटि, समिति बने; तैपनि त्यसबाट देशको समुचित उन्नति हुन सकेको छैन। फेरि यो प्रेस सल्लाहकार समिति किन?" भन्ने प्रश्न उठ्न सक्दछ। यसमा हाम्रो जवाफ यो छ– हाम्रो मुलुकमा जति पनि संस्था, कमिटी,



समिति ईत्यादि बने; तिनीहरू मध्य जस जसमा सरकारी र गैर सरकारी नागरिकहरूमा सहयोग र सद्भावनाको वातावरणमा काम हुन सक्यो; ती सफलै सिद्ध भएका छन्। तिनीहरू तब मात्र असफल भएका छन्, जब यस्तो हुन सकेन। त्यस्तै वातावरणमा काम गराउन नै प्रेस सल्लाह-कार समितिको सिफारिश हामीले गरेका हौं।

उद्देश्य र कारण

१. पत्रपत्रिकाहरू र सरकारको बीचको सम्बन्ध सौहार्दमय भएमा मात्र मुलुकमा स्वच्छ पत्रकारिताको विकास संभव छ। यो सम्बन्ध सौहार्दमय बनाउनु प्रेस सल्लाहकार समितिको प्रथम उद्देश्य हो।

२. प्रजातन्त्रको विकासको लागि ईमान्दार, निष्पक्षपाती निर्भिक, रचनात्मक आलोचना र समालोचनाको जरूरी छ। यसको लागि देशमा स्वस्थ वातावरण तयार पार्नुको साथै यस्तो आलोचना र समालोचनाको कार्य गर्नु स्वच्छ पत्रकारिताको प्रधान कर्तव्य हो।

एकचोटी एउटा प्रश्न माथि बादविबाद हुँदा ईस्वी सन् अठाह्रौं शताब्दीको सुप्रसिद्ध फ्रान्सिसी लेखक वोल्टेयरले भन्नु भएको थियो– "म तपाईले भन्नुभएको एक शब्दसंग पनि सहमत छैन, तर म तपाईले जे जति बोल्नु भयो; त्यो बोल्ने तपाईको अधिकारको यथोचित सुरक्षा गर्न आफ्नो ज्यानको बाजी लगाउन कटिवद्ध छु।" आफ्नो दोष नघटाई आफ्नो गुण नबढाई हाम्रो उन्नति हुन सक्तैन। हाम्रा विद्वान् मित्रहरू हाम्रा दोषहरू देख्न पत्ता लगाउन जति सिपालु हुन्छन्, त्यति हामी आफैं हुँदैनौं। पत्रपत्रिका पनि देशको नागरिकको उत्थानको, लागि यस्तै विद्वान मित्रको काम गर्नमा बहुतै सहायक हुन सक्छ। यस काममा पत्रपत्रिकाको सेवा गर्नु प्रेस सल्लाहकार समितिको दोश्रो उद्देश्य हो।

३. "सबै शक्तिमा शक्तिवानको नैतिक पतन गर्ने शक्ति पनि निहित छ, तथा पूर्ण शक्तिमा पूर्ण शक्तिवानको पूर्ण नैतिक पतन गर्ने शक्ति पनि निहित छ" भन्ने प्रसिद्ध अंग्रेजी ईतिहासकार लर्ड एक्टनको भनाई पूर्ण सत्य नभए पनि त्यसमा सबै शक्ति सम्पन्न संस्था वा व्यक्तिहरूको लागि पनि एउटा गहिरो सल्लाह र जनाउ छ। शक्तिको मदमा सरकार वा पत्रपत्रिकाले कुनै प्रकारको आलोचनालाई असह्य महान् ठान्नु अपराध हो। यस्ता शक्ति मदमत्त स्वगुणगानको अत्यन्त पक्षपाती एवं दोषगानका परम कट्टर सत्रुहरूको बाघपन्जा-बाट प्रजातन्त्र एवं मानवताको रक्षा गर्नु प्रेस सल्लाहकार समितिको तेश्रो उद्देश्य हो।

४. हाम्रो मुलुकमा आधुनिक प्रजातान्त्रिक परिपाटी अपनाईन थालिएको ७–८ वर्ष मात्र भएकोले प्रजातान्त्रिक परिपाटीको सफलताको लागि आम जनता सजग हुनु अत्यावश्यक भएको र स्वस्थ पत्रपत्रिकाले आम जनतालाई सजग पार्नमा निकै सहायता दिन सक्ने भएकोले स्वस्थ पत्रपत्रिकालाई हुर्काउन आवश्यक स्वस्थ वातवारणको सृजना गर्नमा सहायक हुनु पनि प्रेस सल्लाहकार समितिको चौथो लक्ष्य र कारण पनि हो।

५. कलमको तरवार फलाम वा ईस्पातको तलवारभन्दा डरलाग्दो र शक्तिशाली हुन्छ। त्यतिमात्र होइन, पत्रपत्रिकाको शक्ति त अझ व्यापक र गहिरो पनि हुन्छ। भनौं भने पत्रपत्रिका राम्ररी चलाउनु एउटा मुलुकको जनहितकारी सरकार चलाउनु जत्तिकै र गाह्रो महत्वपूर्ण पनि छ तथा अनुभवहिन नैतिकताहिन व्यक्तिहरूको हातमा पत्रपत्रिका रूपी बायुयान हाक्ने अभिभारा गर्नु जत्तिकै भयानक पनि सिद्ध हुन जान्छ। हाम्रो देशमा यस्ता अनुभवी र दक्ष पत्रपत्रिकाका महारथीहरूलाई सृजना गर्ने प्रोत्साहन दिने यथासम्भव मिलाउनु वा वातावरण पैदा गर्नु पनि प्रेस सल्लाहकार समिति खडा हुनुपर्ने अर्को उपयुक्त कारण र त्यसको काम पनि हो।

बिलायतको उदाहरण

यस सम्बन्धमा ईस्वी सन् १९४९ मा प्रकाशित बृटेनको "रायल कमिशन अन द प्रेस" को रिपोर्टको प्यारा ४६८ मा व्यक्त तथ्य यस प्रकारको छः– सन्डे एक्सप्रेसका सम्पादक श्री जोन गर्डनले–ईस्वी सन् १९४६ जुलाई ५ तारिखका दिन आफ्ना उप-सम्पादकहरू र संवाददाताहरूलाई संवाद समाचारको सत्यताबारे लेखिएको एउटा सन्देश हामीलाई पढेर सुनाउनु भयो। सो सिलसिलामा पढदै जांदा उहाँले भन्नु भयो– "अति कटु सत्यवादी हुने मेरो ईच्छा छैन, तर स्पष्ट तथ्य यही हो र यो साचो हो भन्ने हामीलाई थाहा छ कि जब जब हामी, आफुलाई केही थाहा भएको विषयमा समाचार पत्रमा कुनै विवरण पढ्दछौं, हामीले विवरणलाई ज्यादाजसो असत्यनै पाउँदछौं। यो एउटा महत्वपूर्ण र शायद आम पत्रपत्रिकाको कुरा लिने हो भने अति कटु विचार हो, तर हाम्रो अनुभवले भन्छ कि यसमा वास्तविकताको सारभूत तत्व समावेश भएको छ।"

हाम्रा पत्रपत्रिकाहरूको बारेमा यो तथ्य कति हदसम्म लागू हुन सक्छ, हामी यकिन गरेर भन्न सक्दैनौं, तर बिलायत जस्तो प्रजातान्त्रिक पत्रकारिताको थकाली देशमा समेत अहिले पनि यस्तो परिस्थिति भएकोले पत्रकारिताको स्वतन्त्रता एवं उन्नतिको लागि तथा पत्रकार महलमा काबिल व्यक्तिहरूले मात्र प्रवेश गर्न पाउन भन्ने हेतुले पत्रकारहरूले नै विशेष रूची लिनु पर्ने भनी "जनरल काउन्सिल अफ द प्रेस" खडा हुनु जरूरी छ भनी जोरदार सिफारिश भएको र तद्नुसार खडा भई उपयोगी समेत सिद्ध भएको बुझिएकोले पनि हामीलाई पनि करिब त्यस्तै मुलुकको आधुनिक माग बमोजिमको एकप्रेस सल्लाहकार समिति खडा गर्ने विचारमा प्रेरणा मिलेको हो।

यस सिलसिलामा उक्त बिलायतको "रायल कमिशन अन दि प्रेस" को "जनरल काउन्सिल अफ द प्रेस" शिर्षक परिच्छेदमा दिइएको केही प्रासंगिक कुराहरू यहाँ पेश गर्नु शायद असंगत वा अरूचीकर नहोला। यस उसले ती केही प्रासंगिक कुराहरू पेश गर्दछौं।



एक केन्द्रीय संस्थाको आवश्यकता

६१८ "तर, यो अफसोसको कुरा हो कि अहिलेसम्म प्रेस पत्रपत्रिकाहरूले आफ्नै काम काज कार्य पद्धति नियमित गर्न चाहिने आन्तरिक संगठन गर्न सकेको छैन। . . . .यो झन् आश्चर्यको कुरो हो कि पत्रकारिताको स्वतन्त्रता अथवा त्यो सत्य परायणता जसमा यसको सुनाम निर्भर छ कायम गर्नको लागि एउटा पनि संस्था छैन. . . . .।"

नियुक्ति र तालिम

जनतालाई बोध गरिने विषयहरू जति जति जटील हुन्छन्, उति उति नै पत्रकारमा तीक्ष्ण जेहेन र गहकिलो शिक्षाको जरूरत हुन्छ। पत्रकारसँ कुनै घटना,भाषण वा आविश्कारलाई महत्वपूर्ण तुल्याउने पृष्ठभूमिको कमी भएमा उसले आफ्ना पाठकहरूलाई त्यो घटना इत्यादिलाई महत्वपूर्ण वा बोध पनि गर्न सक्ने छैन, र आफ्नो विषयलाई नै घतलाग्दो पार्न नसक्दा उसको झुकाव केवल मामुली एवं कम महत्वका कुराहरूमा केन्द्रीभूत हुन जानेछ।

पत्रकारले असल साधारण शिक्षा प्राप्त गरेको हुनुपर्छ, तर यो पर्याप्त हुँदैन। स्कूल पाठशालामा पाइने भन्दा बढी इतिहास अंग्रेजी (राष्ट्रिय भाषा) वा (मातृभाषा) को ज्ञान, केन्द्रीय र स्थानीय सरकार र न्यायालय र अदालतहरूको कार्यविधि र कमसेकम अर्थशास्त्रका आधारभूत सिद्धान्तको व्यवहारिक ज्ञान पनि पत्रकारमा हुनु पर्छ।

स्कूल पाठशालाबाट होस् अथवा विश्वविद्यालयबाट होस्, पत्रकारिताको क्षेत्रमा काबिल सुयोग्य व्यक्तिहरूको नियुक्ति गर्ने र उनीहरूले आवश्यक शिक्षाको स्तर र व्यावसायिक दक्षता प्राप्त गर्ने र कायम राख्ने निश्चित गराउने समस्या पत्रकारिताको सबभन्दा महत्वपूर्ण समस्याहरू मध्ये एक हो। किनभने कुनै पत्रकारको पेशाको महत्व मात्र होइन कि समाजले पत्रपत्रिकाबाट चाहेको कुरा र पत्रपत्रिकाले अहिले समाजलाई दिइरहेको कुराको बीचमा जुन अन्तर अहिले देखिन्छ, त्यसको पूर्ति हुने सम्भावना समेत पनि पत्रकारको योग्यता र दक्षतामा निर्भर छ।

यस उसले माथि उल्लेखित "जनरल काउन्सिल अफ द प्रेस"ले सुयोग्य व्यक्तिहरू छात्ने र उनीहरूले प्रशस्त व्यावसायिक र शैक्षिक तालिम हासिल गराउने उत्तम उपायको अध्ययन गर्नु पर्छ र साथै आधार तालिम एवं परिपक्व पत्रकारहरूलाई पत्रकारी पेशाका समस्याहरू र तिनीहरूको राजनीतिक र आर्थिक पृष्ठभूमिको अध्ययन गर्ने काममा मद्दत गर्नु युक्तिसंगत तथा आवश्यक योजना हरू कार्यान्वित गराउन प्रयत्नशील हुनु पर्छ।

प्रेस सल्लाहकार समितिको गठन बिधि

१. प्रेस सल्लाहकार समितिको अध्यक्ष प्रधान न्यायाधीश वा उहाँबाट मनोनित कुनै अर्को न्यायाधीश हुनेछ। अध्यक्ष १

२. हाललाई कमसेकम २ वर्षसम्म कुनै दैनिक वा साप्ताहिक वा पाक्षिक वा मासिक पत्रिकाको सम्पादक भइसकेको वा त्यस्तो पत्रिकासंग लेखक वा सवाददाताका रूपमा अक्षुण र

दृढ सम्बन्ध भएका पत्रकारहरू मध्येबाट प्रेस सल्लाहकार समितिका अध्यक्ष, साहित्य– कला अकादमीका भाइस चान्सेलर र सल्लाहकार सभा अथवा संसदका अध्यक्षको बोर्डले प्रचलित पत्र-पत्रिकाको बहुमतको रायबाट छानेका सदस्यहरू ७ जना

३. शाही प्रेस सेक्रेटरी, गृहमन्त्रालयका प्रचार नायव सचिव, प्रचार डाइरेक्टर, प्रधान सम्पादक रेडियो नेपाल, प्रधान सम्पादक गोरखापत्र पदेन सदस्यहरू पाँच जना

४. राजनीतिक दलका सदस्य नभएका साहित्यिक सांस्कृतिक र सामाजिक कार्यकर्ताहरूबाट माथि उल्लिखित १३ जनाको समितिले थप्ने सदस्यहरू ६ जना जम्मा १९ जना सदस्यहरू

५. यस सल्लाहकार समितिको सेक्रेटरी पत्रकार सदस्यहरूमध्येबाट १ वर्षको निम्ति अध्यक्षद्वारा छानिनेछ ।

६. गैर सरकारी सदस्यहरू २।२ वर्षमा छानिने छन् ।

प्रेस सल्लाहकार समितिको लागि सरकारबाट अपेक्षित सुविधा

प्रेस सल्लाहकार समितिको लागि सरकारबाट हाललाई एउटा अफिस कोठा, एक ठूलो टेबिल (२४'–३६'), २५ कुर्सी, एक सानो टेबिल र एक दराज दिइनु उपयुक्त होला । प्रेस सल्लाहकार समितिको बैठक साधारणतः महिनाको १ चोटी बस्नेछ र सरकारबाट त्यसको निम्ति देश विदेशका लब्धप्रतिष्ठित पत्रकारहरूलाई स्वागत गर्न तथा पत्र व्यवहार, रिपोर्ट लेखाउने आदि काम गराउन पियन टहलुवाको काम गराउनको खर्चको लागि र मसलन्द खर्च समेतको लागि वर्षको हाललाई मो रू. २४००।– सेक्रेटरीले आफ्नो जिम्मेदारीमा खर्च गर्न सेक्रेटरीको जिम्मामा दिने व्यवस्था भए सरकारको पत्रकारिताप्रति सद्भावनाको रमाइलो प्रतीक हुनेछ । खर्चरकम थोरै भएकोले पनि सब खर्च मिह्ला दिने काम प्रेस सल्लाहकार समितले नै आवश्यकतानुसार गर्न हुने तुल्याउनु पनि बेश होला भन्ने यस कमिशनको राय छ ।

प्रेस सल्लाहकार समितिको कार्यहरू

१. सरकारले पत्रपत्रिकाउपर तथा पत्रपत्रिकाले सरकारउपर उचित नीति अपनाएमा धन्यबाद र प्रशंसाको प्रस्ताव पास गरी प्रचार प्रसार गर्ने ।

२. सरकारले पत्रपत्रिका विरूद्ध नाजायज नीति अपनाएमा त्यसउपर सुझाव सल्लाहसहित सम्बन्धित विभागको ध्यान आकर्षित गर्ने ।

३. कुनै पत्रपत्रिकाले वा पत्रपत्रिकासंग स्पष्ट सम्बन्ध भएको पत्रकारले पत्रकारिताको मर्यादा उलङ्घन गरी केही समाचार वा लेख प्रचार प्रसार गरेमा सुझाव सल्लाहसहित सम्बन्धित पत्रपत्रिका वा पत्रकारको त्यसमा ध्यान आकर्षित गर्ने ।

४. कुनै अयोग्य व्यक्तिलाई पत्रपत्रिका चलाउन वा सम्वाददाता हुन सरकारबाट वा पत्रपत्रिकाको तर्फबाट मान्यता दिइएमा कारण, सुझाव, सल्लाहसहित त्यसमा सम्बन्धित बिभाग वा व्यक्तिको ध्यान निम्त्याउने ।



५. सरकारद्वारा कोलम्बोप्लान अन्तरगत या कुनै रकमबाट गैर सरकारी पत्रकारहरूलाई पत्रकारिताको अध्ययन गर्न मिलाउने । प्रत्येक वर्ष ५ जनासम्म उम्मेदवारहरू छानी सिफारिश गरी पठाउने ।

६. समय समयमा देशीविदेशी लब्धप्रतिष्ठ पत्रकारहरूलाई स्वागत गरी पत्रकारितावारे उहाँ-हरूको प्रवचन गराउने आयोजना गर्ने ।

७. पत्रपत्रिकालाई सरकारबाट प्राप्त हुनुपर्ने सहूलियत प्राप्त नभएमा सो प्राप्त गराउन यथोचित प्रयत्न गर्ने र आवश्यकतानुसार सहूलियतको सिद्धान्त तयारपारी सुझाव दिने ।

८. प्रचलित पत्रपत्रिकाको गतिविधिवारे समय समयमा सरसल्लाह गरी राय सुझाव प्रकट गर्ने ।

९. पत्रकार, सम्पादक आदिमा हुनुपर्ने योग्यताबारे सुझाव, सल्लाह व्यक्त गर्ने ।

१०. हरेक बैठकमा छलफल भएका विषयहरूको र पास भएका प्रस्तावहरूको रेकर्ड सेक्रेटरी ले राख्ने र प्रत्येक वर्षको अन्तमा त्यस वर्षको सेक्रेटरीको देख रेखमा प्रेस सल्लाह-कार समितिको वर्षभरीको कार्यरिपोर्ट तयार पारी प्रकाशित गर्ने । यसमा पनि हाललाई सरकारी सहायता प्राप्त हुनु बाँछनीय होला ।

११. प्रेस सल्लाहकार समितिको जुनसुकै सदस्यले पनि देशको पत्रकारिता सम्बन्धी प्रस्ताव प्रेस सल्ल्लाहकार समितिको बैठकमा राख्न सक्नेछ र अध्यक्षको स्वीकृति प्राप्त भएपछि उक्त प्रस्ताव बारे छलफल र आवश्यक निर्णय हुनेछ ।

दुई विशेष सुझाव

१. असाधारण परिस्थितिमा बाहेक सरकारले कुनै पत्र वा पत्रिकाको विरूद्ध केही कदम सोझै उठाउनुभन्दा पहिले प्रेस सल्लाहकार समिति मार्फत आफ्नो उजूरी सुल्झाउने प्रयत्न गरि सकेपछि मात्र सोझै सम्बन्धीत पत्र वा पत्रिकाको विरूद्ध कारबाही गर्ने गरिएमा सरकार र पत्रपत्रिकाको बिचको सम्बन्ध कटु हुने सम्भावना कम हुनेछ । त्यस्तै कुनै पत्र वा पत्रिकाले कुनै सरकारिया विभाग वा अफिसरको विरुद्ध केही तथ्यहीन सामाचार एवं टिका टिप्पणी छपाउनुभन्दा अघी प्रेस सल्लाहकार समितिमार्फत सम्बन्धीत विभाग वा अफिसरको ध्यान आकर्षित गरी राम्ररी बुझेर मात्रै कदम बढाउने गरेमा पनि सरकार र पत्रपत्रिकाको बिचको सम्बन्ध बढ्ता मधुरो हुन जानेछ ।

२. प्रेस सल्लाहकार समितिलाई साँच्चिकै उपयोगी बनाउनको निम्ति बैधानिक (Statutory) मान्यता प्राप्त हुनुपर्छ । यसले प्रचलित विधान अन्तर्गत रही दिएका सुझाव, सल्लाहको लागि यसउपर कुनै कानूनी कारबाही सम्भव हुनु हुँदैन ।

परिच्छेद १०

# (१) राष्ट्रिय सम्वाद समिति

प्राक्कथन

एक राष्ट्रिय सम्बाद समितिद्वारा सिर्फ पत्रकारिताको विकासमा सहायता हुन जादैन किन्तु समाचारको आदान प्रदानद्वारा यस प्रकारका माध्यमले राष्ट्रियतालाई ठोस रूप प्रदान गर्नमा पनि मद्दत पुऱ्याउदछ। साथै कुनै पनि देशको लागि आपनो एक सम्वाद समिति हुनु इज्जत को कुरा पनि हो। त्यसो त अहिलेसम्म पनि विभिन्न सरकारी वा गैर सरकारी साधनहरुद्वारा समाचार सङ्कलन एवं आदान प्रदानको कार्य केही मात्रामा सम्पन्न भई नै रहेको छ। तथापि एक सुसङ्गठित ढङ्गमा र जनताको स्तरमा यस कुराको ब्यवस्था नहुन्जेल, यसले ठोस रूप प्राप्त गर्न सक्दैन।

पत्रकारिताको विकासमा वर्तमान अवस्थामा स्वतन्त्र रुपले जनतातर्फबाट नै यस दिशातिर कदम चालिनु असम्भव प्रायः छ। डाक तारको असुविधा बाहेक, आर्थिक कठिनाईले गर्दा पनि यस प्रकारको आशा गर्न गाऱ्है छ। एक सुव्यवस्थित ढङ्गले राष्ट्रिय सम्बाद समिति खडा गर्ने, तत्कालै आवश्यक पर्न जाने पंजीको अभाव बाहेक, वर्षेनी घाटा पर्ने स्पष्ट हुनाले पनि जनतातर्फबाट यस दिशामा कारवाई हुन गाह्रो छ। यद्यपि यो क्षेत्र सर्वथा जनताको नै हो। अतः सरकारबाट नै तत्कालको लागि प्रयत्न हुनु आवश्यक छ। प्रेस कमिशनका प्रश्नावली-हरूको उत्तरमा प्राप्त भएका सुझावहरू तथा पत्रकारहरुसंग कमिशनमा भएको छलफलबाट पनि यही निष्कर्ष मा पुगिएको छ। हुन त, कसै कसैले सरकारबाट यस क्षेत्रमा प्रवेश भएमा पत्र-कारितामा नै हस्तक्षेप हुनेछ भन्नी विचार प्रकट गरे, सरकारले सक्रिय रुपले यस कुरामा आफ्नै पूर्ण नियन्त्रणमा कार्य सञ्चालन गर्न थालेमा यस प्रकारको स्थिति पछि उठ्न पनि सक्छ तथापि परिस्थितिलाई ध्यानमा राखी सरकारबाट केही नगरिनु पनि उचित हुने छैन। अतः सबभन्दा बेश कुरा यही हुनेछ कि अर्ध सरकारी स्तरमा सम्बाद समितिको प्रारम्भ गरियोस। सम्बाद समितिलाई आपनो क्रिया कलापमा सम्पूर्णतः स्वतन्त्र राख्नको लागि सरकारले यसको प्रशासन, दैनिक कार्य आदिमा बिल्कुलै हस्तक्षेप गर्नु हुँदैन। समितिको मौलिक उद्देश्यको हनन भएमा अरू यस्तै मौलिक एवं पूर्व स्वीकृत सैद्धान्तिक कुराहरूको कार्यान्वित नभएमा मात्र सरकारद्वारा आपनो अधिकार प्रयोग गरिनु पर्दछ। अन्यथा, अरू सबै कुरामा समितिले कुनै पनि स्वतन्त्र सम्बाद समिति सरह काम गर्नु पर्दछ। एक राष्ट्रिय सम्बाद समिति खडा गर्ने बारे श्री ५ को सरकारको दिलचस्पी देखिएको हुँदा यस पवित्र उद्देश्यको पूर्ति गर्न सरकारबाट यस प्रकारको रूख अख्तियार गरिनु आवश्यक छ। यस बाहेक पनि एक तोकिएको अवधि भित्र यसरी खडा गरिएको समितिले पूर्ण स्वतन्त्रता प्राप्त गर्ने दिशातिर प्रगतिशील हुनु पर्दछ। यस प्रकारको गतिशील योजना एवं त्यसको कार्य परिणतिले पछि गएर एक स्वस्थ, सुव्यवस्थित एवं स्वतन्त्र सम्बाद समिति खडा हुन सक्छ।



यसको आवश्यकता

नेपालमा प्रजातन्त्र आएको ८ वर्ष भइसक्यो, तर प्रजातन्त्रको विकासमा साथ दिने एक महत्वपूर्ण अङ्ग पत्रकारिताको जग मजबूत पार्न कुनै ठोस कारवाई भएकै छैन। ८ वर्ष अगाडिको दाँजोमा हाल पत्रकारिताको चहल पहल अवश्य बढेको छ, तर त्यो चहल पहलको निश्चित आधार छैन, कुनै भरोसा छैन। पत्रकारिताको महत्व बुझ्नेहरूले त्यसको आधारभूत कुरा देशव्यापी "खबर सङ्कलन गर्ने संस्थाको" आवश्यकता पनि महसूस गरेका छन्, अहिलेसम्म त्यस्तो कुनै संस्था अथवा एजेन्सी नभईदिएबाट देशको कुना काप्चाका खबर समेतले जनसमक्ष प्रकाश पाउन सकेका छैनन्। आधुनिक युगमा पृथ्वी एकापट्टिको मानिसले अर्कोपट्टिको खबर केही क्षणमै सुन्न पढ्न पाउँछन्। तर हामी आफ्नै देशको १० कोश परको खबर एक हप्तामा मुस्कीलले सुन्न पढ्न पाउँछौं। हामीसंग खबर आदान प्रदानको जति पनि साधनहरू छन्, त्यतिबाट पनि यदि देशव्यापी खबर सङ्कलन संस्था भइदिएको खण्डमा तुरुन्तै नभए पनि केही बेरमा एक क्षेत्रका मानिसले अर्को क्षेत्रमा भए बितेका घटनाहरू सुन्न पढ्न पाउने थिए, र एकले अर्कोलाई एकै घरको जहान सम्झन बेर लाग्ने थिएन।

नेपालमा प्रजातन्त्रको प्रादुर्भाव भएपछि जति अखवारहरू निस्केर बन्द भए अथवा निस्की रहेकाहरूमा पनि मुस्किल– मुश्किलले चलिरहेछन्, तिनीहरूको कठिनाईको असली कारण आर्थिक र अरू कुराभन्दा बढी "समाचार" कै अभावको कारण हो। "समाचार" खोज्न सम्पादक आफैं दगुर्नु पर्छ, एक दिन चक्कड मार्न सकेन कि समाचार पत्र निकाल्न मुस्कील पर्दछ। समाचार आउने निश्चित सुव्यवस्थित कुनै श्रोत छैन। यसमा अर्को कुरा, कुनै पनि पत्रले जुन स्थानबाट पत्र प्रकाशित हुन्छ, त्यस स्थानको मात्र खबर छाप्न समर्थ होलान्। तर देशका अरू भागको खबर ज्यादै कम मात्रामा प्राप्त हुन सक्छ। त्यसो हुँदा पाठक तथा ग्राहकहरू पनि त्यही क्षेत्रमा मात्र सीमित हुन्छन् र व्यापक हुन सक्तैन। ग्राहकको कमीले आर्थिक सङ्कट आइपर्दछ र पत्र प्रकाशनको अन्त हुन्छ। यसै महत्वपूर्ण कुराहरूको पूर्तिको लागि यो समाचार एजेन्सीको आवश्यकता छ। यदि देशको पत्रकारिताको सुरक्षा गर्ने हो र यसको प्रगति गर्दैलगी प्रजातन्त्र मजबूत तुल्याउने हो भने एजेन्सीको स्थापना अविलम्ब हुनु आवश्यक छ। देशव्यापी आम चुनाव अगाडि आइरहेकोले पनि यसको आवश्यकता अझ बढेको छ।

यसको उद्देश्य

यसको जग मजबूत तुल्याउन र देशव्यापी गर्नमा सजिलो पार्न यसलाई हाल अर्ध सरकारी संस्थाको रुपमा सञ्चालन गर्न उचित देखिन्छ। यसै आधारमा यसको उद्देश्य निम्न प्रकार हुनुपर्दछः–

१. देशका सबै भागमा घटेका घटनाहरू र बितेका कुराहरूको निष्पक्ष रुपले समाचार सङ्कलन गर्ने र बिक्री वितरण गर्ने।

२. विदेशी खबर सङ्कलन संस्थाहरूसित सम्पर्क राखी आदान प्रदानको व्यवस्था मिलाउने।
३. विभिन्न स्थानमा बराबर आवश्यकता हेरी आफ्नो स्टाफ करेसपण्डेण्ट पठाई स्थानीय विषय माथि प्रकाश दिने अग्रलेख सम्पादकीय टिप्पणी आदि तयार पारी सङ्कलन गर्ने।
४. जनतामा सरकारी कार्य राम्ररी बोधगराउने काममा सहायक बन्ने ।

यसको नीति

देशमा प्रचलित नियम कानूनभित्र रही पत्रकारिताको विकासमा सहयोग दिने पवित्र कार्यमा भइरहेको कमी पुरा गर्न पूर्व मेचीदेखि पश्चिम महाकाली सम्म देशका सबै भागमा महत्वपूर्ण कुराहरू, विशेष घटनाहरू, राजनैतिक, सामाजिक, सांस्कृतिक, आर्थिक र त्यस्तै अरू क्षेत्रका गतिविधिहरू, सरकारी तथा गैर सरकारी समारोह,सरकारी कार्यहरूको विवरण, रचनात्मक कार्यहरू, सरकारी दौडाहा,भ्रमण,जिल्ला सरकारहरूको उल्लेखनीय कार्य हरू अनियमित र प्राकृतिक विपतीहरू, राष्ट्रिय जीवनमा घट्ने सबै उल्लेखनीय घटनाहरू आदिको निस्पक्ष रूपले सकभर तुरुन्तै रिपोर्ट सकलन गरी पत्रपत्रिका रेडियो आदिलाई बेलैमा बिक्री वितरण गर्ने यसको नीति रहनेछ ।

यसका कार्य

आफ्नो उद्देश्य मुताविक यसको मुख्य कार्य निम्न प्रकार हुनेछः—

१) देशका विभिन्न भागबाट निष्पक्ष रुपले कसैको दवावमा नपरी यथार्थ कुराको समाचार सङ्कलन गर्नेछ ।
२) आफ्ना प्रतिनिधि तथा रिपोर्टरहरूबाट केन्द्रमा समाचारहरू आएपछि त्यसलाई सम्पादन गरी वितरण गरिनेछ ।
३) समाचार सङ्कलनका लागि सबै किसिमको उपाय तथा प्रबन्ध मिलाउनेछ ।
४) आफ्नो सामर्थ्य र शक्तिले भ्याएसम्म नेपालका कुना काप्चाबाट समेत समाचारहरू सङ्कलन गर्नेछ ।
५) विदेशी अखवारहरूलाई पनि समाचार बेच्ने प्रबन्ध मिलाउनेछ ।
६) ठाउँ ठाउँको स्थानीय समस्याहरूमाथि प्रकाश दिने । अग्रलेख, सम्पादकीय टिप्पणी आदिको सङ्कलन गर्नेछ ।
७) ती लेखहरूको सङ्कलन रिपोर्टर तथा प्रतिनिधिहरूबाट भै आएपछि माग अनुसार वितरण हुनेछ ।
८) सरकारी कार्यहरू तथा सरकारी भ्रमणहरूको विस्तृत रुपले रिपोर्टिङ्ग गर्न प्रबन्ध मिलाउने
९) चुनावको समयमा सरकारी सहायताबाट सबै जिल्ला, प्रगन्ना, थुम, दर्राहरूमा समाचारहरू सङ्कलन गर्न विशेष प्रबन्ध मिलाउने ।



१०) समाचार सङ्कलन र वितरणका सम्बन्धमा आइपर्ने अरू विशेष कामहरू सबै गर्नेछ ।

प्रस्तावित सम्बाद समिति गठनबारे प्रेस कमिशनको सुझाव यसप्रकार छः—

(१) समितिको सञ्चालन गर्नको लागि डाइरेक्टरहरूको एक बोर्ड हुनेछ, जसमा ३ जवान सरकारी तथा ४ जवान गैर सरकारी सदस्य हुनेछन् । कुनै पनि हालतमा डाइरेक्टर्स बोर्ड मा गैर सरकारी सदस्यहरू बहुसंख्यक हुनुपर्दछ ।
(२) सञ्चालक समितिका गैर सरकारी सदस्यहरूको चुनाव १००० रु.को शेयर किनेका समितिका शेयर होल्डरहरूले आफू मध्येबाट छान्ने छन् ।
(३) यसरी छानिएका गैर सरकारी सञ्चालकहरूको चुनाव प्रत्येक २ वर्षमा हुनेछ ।
(४) समितिको आम्दानी खर्चको हिसाव सरकारले नियुक्ति गरेको अडिटरले वर्षेनी गर्नेछ।
(५) समितिको कार्य सञ्चालनमा कुनै प्रकारको सरकारी प्रभाव वा हस्तक्षेप हुनु हुँदैन । पूर्व निर्धारित आधारभूत सिद्धान्तहरूको परिधिभित्र समितिको गतिविधि पूर्णतः स्वतन्त्र हुनुपर्दछ । समितिलाई कुनै प्रकारको राजनैतिक प्रभाव वा सरकारी हस्तक्षेपबाट बचाएर स्वतन्त्ररुपले काम गर्न दिइनु अत्यावश्यक छ ।
(६) समितिको दैनिक काम तथा प्रशासन चलाउन एक मेनेजिङ्ग डाइरेक्टरको निर्वाचन हुनेछ। मेनेजिङ्ग डाइरेक्टर सञ्चालन सिमितिको गैर सरकारी सदस्यमध्ये नै हुनुपर्दछ । मेनेजिङ्ग डाइरेक्टरको कार्यकाल २ वर्ष हुनेछ ।
(७) समितिको कार्य सञ्चालन गर्न बेला बेलामा बस्ने सञ्चालक समितिले नियमावली बनाउने छ ।
(८) सञ्चालक समितिमा राजनैतिक दलका सदस्यता प्राप्त गरेका व्यक्तिहरूले स्थान पाउँनु हुँदैन ।

सम्बाददाता

(१) केन्द्रीय कार्यालयमा रहने प्रधान सम्पादक, सम्पादकहरू एवं अन्य स्टाफ बाहेक देशभरी समितिका सम्बाददाताहरू देशका समस्त क्षेत्र व्यापक रूपले फैलनु पर्दछ, ता कि देशका सबै कुनाहरूबाट अथवा धेरैजसो भागबाट समाचार प्राप्त हुन सकोस् । वास्तवमा, सम्बाददाताहरूको महत्व सम्बाद समितिमा सबभन्दा बढ्ता छ ।

(२) देशभरीका जिल्लाहरूमा समान संख्यामा सम्बाददाताहरू राख्नु नत व्यावहारिक नै देखिन्छ, न त आवश्यक । विभिन्न जिल्लाहरूमा विभाजित भएतापनि व्यापारिक र अरू विभिन्न कारणवश क्षेत्रीय नाकाहरू भएको हामी सबैलाई थाहा नै छ । अतः यी नाकाहरूमा संबाददाता नियुक्ति गर्ने बारे विशेष ध्यान दिएर, अरू जिल्लाहरूमा समय र आर्थिक अवस्थाले दिएमा सम्बाददाताहरू नियुक्त गर्दै लैजानु व्यावहारिक देखिन्छ । यस दृष्टिकोणले (राजधानी बाहेक) सम्बाददाताहरूलाई दुई श्रेणीमा र त्यस्तै

गरी विभिन्न क्षेत्रहरूलाई पनि दुई श्रेणीमा विभाजन गर्न सकिन्छ । यस श्रेणीकरण अनुसार हाललाई देशभरीका नाकामा प्रथम श्रेणी एवं ६, अरू स्थानमा द्वितीय श्रेणीका सम्बाददाताहरू नियुक्त गरी काम थाल्न सकिन्छ । यसमा विराटनगर, जलेश्वर,वीरगञ्ज, भैरहवा,पाल्पा, नेपालगञ्ज, पोखरा र धनकुटालाई प्रथम श्रेणीमा तथा झापा, इलाम, मलङ्गवा, कोइलावास, धनगढी, डोटी ,दांग लाई द्वितीय श्रेणीमा राख्न सकिन्छ । यसबाहेक पूर्वीय, पहाडी इलाकाको परिस्थितिलाई ध्यानमा राखी पूर्व १, २, ३, ४ नं. मा पनि सम्बाददाताहरू राख्नु आवश्यक देखिन्छ । सो श्रेणीकरणगरिंदा क्षेत्रीय नाका पर्ने कुरा तथा प्राप्त हुने समाचारको परिमाण एवं समाचार प्राप्त गर्न सुविधाजनक केन्द्र परेको कुरालाई ध्यानमा राखिनु पर्दछ । हाललाई यसरी केही स्थानमा मात्र सम्बाददाता राखेर काम चलाइएमा केही अरू जिल्लाहरू छुट्न जाने सम्भावना केही हदसम्म भए तापनि विभिन्न क्षेत्रीय नाकाहरूमा यी स्थानहरूको निर्धारण हुने नभएकोले स्वभावतः नै आसपासका सम्बाददाताहरू नभएको क्षेत्रमा पनि समितिको पहुच रहने नै छ । तथापि यो कहिल्यै बिर्सन हुन्न कि समितिले सारा स्थानहरूमा आफ्नो सम्बाददाता राख्न सधैं प्रयत्नशील हुनुपर्दछ । यस बाहेक समितिले समाचारको उपयोगिता हेरी पारिश्रमिक दिने व्यवस्था अनुसार नियुक्त भएका सम्बाददाताहरू देशका अरू क्षेत्रहरूमा पनि राख्नुपर्दछ ।

हाल यी केन्द्रहरूबाट कसरी अरू क्षेत्रहरूको समाचार प्राप्त गर्न सकिन्छ भन्ने बारे हामी उदाहरण पोखरालाई लिन सक्दछौं र पोखराबाट स्याङजा नजिकै भएकोले, पोखराको फेवाताल पारीपट्टिबाट नै पश्चिम ४ नं. इलाका शुरू हुने हुनाले र बागलुङ पनि संगै भएकोले पोखरामा सम्बाददाता राखेपछि फेरि पश्चिम ४ नं तथा बागलुङ का लागि भनी छुट्टै सम्बाददाता नियुक्त गरिरहनु पर्ने तत्काल आवश्यक छैन ।

आम्दानी खर्चको मोटामोटी अनुमान

यस प्रकारका केन्द्रहरूमा रहने स्टाफ तथा जिल्लाहरूमा सम्बाददाता राख्ने खर्च एवं केन्द्रीय कार्यालय आदि सबै खर्चको हिसाब गर्दा अनुमानतः वार्षिक खर्च, पटके खर्च बाहेक मोरू ४०,०००। को आवश्यकता पर्नेछ । खर्चको एक मोटामोटी फांटवारी यस प्रकार हुनेछः-

केन्द्रिय कार्यालयतर्फः-

वार्षिक

| | | | | | |
|---|---|---|---|---|---|
| एक प्रधान सम्पादक के मासिक मो रू. | | | ३५०।- | दरले | ४२००।- |
| एक सम्पादक के | ऐ | ऐ | २५०।- | " | ३०००।- |
| दुई उप-सम्पादक के | ऐ | ऐ | १५०।- | " | ३६००।- |
| एक विशेष प्रतिनिधि के | ऐ | ऐ | २००।- | " | २४००।- |
| ३ सम्बाददाता के | ऐ | ऐ | १००।- | " | ३६००।- |
| तल्लो श्रेणीका स्टाफ के | ऐ | ऐ | | | ३०० ०।- |
| आ. वा. टेलिफोन के | ऐ | ऐ | | | ८०००।- |



| | | | | | |
|---|---|---|---|---|---|
| घर भाडा बिजुली | ऐ | ऐ | २००।- | | २४००।- |
| ७ नं. द्वितीय श्रेणी के रू. | | | ५०।- | का दरले | ४२००।- |
| अरू आवश्यक परी आउने खर्चको लागि जगेडा | | | | | ५६००।- |
| | | | | | ४०,०००।- |
| यस बाहेक अफिस फर्निचर, टाइपराइटर समेत अरू सामानकै पटके खर्च | | | | | ३०००।- |

प्रारम्भमा केही वर्ष समितिलाई टुट्टा पर्ने स्पष्टछ । सरकारले दिने ग्राहक चन्दा बाहेक अरू स्रोतबाट राम्रो आमदानी हुने हाल कमै सम्भावना छ । यसको साथ, सरकारले समिति खडा गर्न लगाउने पूंजीको रकम अरू शेयरवाला सरह गरी बाँकी विस्तारै विस्तारै पठाउनुपर्ने हुँदा सरकारद्वारा दिइने ग्राहक चन्दाबाट केही कट्टी हुँदा, सरकारबाट हुने आमदानी पनि ग्राहक चन्दाअनुसार सम्पूर्ण प्राप्त हुनेछैन ।

यी सबै कठिनाइहरू हुँदै हुँदै पनि आवश्यक सुविधाहरू प्राप्त गरेर केही समयपछि पत्र-पत्रिकाहरूले विकास गरिसकेपछि पत्र-पत्रिकाहरूबाट पनि ग्राहक चन्दास्वरूप सन्तोषप्रद आमदानी हुने सम्भावना छ । तर यसको लागि केही समय अवश्य लाग्नेछ ।

यस सिलसिलामा सरकारले यसरी घाटा पर्ने काममा रूपैयाँ लगाउनु उचित होइन भन्ने तर्क उठ्नु स्वभाविक छ । तर, अति गम्भीरतापूर्वक सोची हेरेमा स्पष्ट हुनेछ कि यसरी घाटा पर्ने रकम यति थोरै छ कि त्यति घाटा सहेर यदि यो कार्य पूर्ण हुन्छ भने सरकारले यसमा भाग लिनु तर्कसंगत मात्र होइन, आवश्यक पनि छ सरकारले अहिले पनि कतिपय विदेशी सम्वाद समितिहरूबाट समाचार खरीद गरी वर्षेनी हजारौं रूपैयाँ खर्च गरिनै राखेको छ । त्यस खर्च भइरहेको रकममा अलि कमी गरेर अथवा राष्ट्रिय सम्वाद समितिले पछि राम्ररी समाचारहरू दिन थालेपछि यी विदेशी समितिहरूलाई दिइने ग्राहक चन्दा राष्ट्रिय सम्वाद समितिको समाचार खरीद गर्न लगाएमा सरकारलाई साबिकभन्दा केही बढी खर्च यो काम उठाएर लाग्नेछैन र यी सबैभन्दा महत्वपूर्ण फाइदा यो हुन्छ कि नेपालको आफ्नै सम्वाद समिति हुनेछ । अतः सरकारद्वारा यस कार्यको पूर्तिमा पूंजी लगाउन अत्यन्त जायज र लाभदायक छ भन्न सकिन्छ । फेरि विदेशी सम्वाद समितिहरूबाट सिर्फ विदेशी समाचार प्राप्त भइरहेको र र स्वदेशी समाचार प्राप्त नभइरहेकोमा, राष्ट्रिय सम्वाद समिति खडा गरिएमा उक्त अभाव पूर्ति हुने मात्र होइन, राष्ट्रिय गौरव पनि बढ्न जानेछ ।

हुन त, यस क्षेत्रमा जनतातर्फबाट नै कारवाई हुनुपर्ने हो र वास्तवमा यो क्षेत्र जनताकै हो । तथापि वर्तमान स्थितिमा जनतातर्फबाट यो आशा गर्न नसकिने हुँदा तथा राष्ट्रियताकै लागि पनि एक राष्ट्रिय सम्वाद समिति अत्यावश्यक हुँदा र सरकारको अस्तित्व नै राष्ट्रसेवा भएको हुँदा सरकारबाट तत्काल आवश्यक पूंजी लगाइनुपर्दछ । यो पूंजी अरू शेयरवालाहरूको शेयरभन्दा धेरै नै बढी हुने हुँदा सालबसाली राष्ट्रिय सम्वाद समितिलाई दिन ग्राहक चन्दाबाट समितिको कार्य सञ्चालनमा धक्का नपर्ने गरी कटाउँदै लैजानुपर्दछ । ता कि विस्तारै विस्तारै सर-

कारको शेयर र पूंजी कम हुँदै जाओस् र समिति बढ्दा मात्रामा स्वावलम्बी हुन सकोस् । त्यसो त अहिलेदेखिन् समितिको काम कारवाइमा सरकारले कुनै प्रकारको हस्तक्षेप गर्न हुँदैन र सरकारले यस कुराप्रति सदैव सचेत रही समितिको स्वतन्त्रतामा समितिको प्रजातान्त्रिक नियमावलीको बन्धनबाहेक अनुचित प्रभाव पार्न प्रयत्न गर्नु हुँदैन । अनि मात्र समतिले एक स्वस्थ तरिकामा विकास गर्ने अवसर पाउने छ। तथापि यसको अलावा पनि सरकारले यो दिशामा प्रयत्नशील रहनुपर्दछ समिति कालान्तरमा सम्पूर्णतः स्वावलम्वी होस् ।

परिच्छेद-११

## स्वच्छ तथा स्वस्थ पत्रकारिताको व्याख्या तथा पत्रकारिताको स्तर र विकाससम्बन्धी सुझाव

स्वच्छ तथा स्वस्थ पत्रकारिताको समस्या हर देशमा हर समयमा रहिरहन्छ । जहाँ पत्रकारिता भन्ने चीज नै हाम्रो अगाडि रहन्छ, त्यहाँ केही न केही समस्या जरूर नै रहन्छ । फेरि यो समस्या एक पटक सुल्झाएर सिद्धिने होइन । देशका जनता, सरकार र विशेष गरेर पत्रकारवर्ग नै संधै सचेत रहेमा मात्र पत्रकारितालाई आपनो बाटो छोड्नबाट रोक्न सम्भव हुनसक्छ । त्यस्तै स्वच्छ तथा स्वस्थ पत्रकारिताको परिभाषा नै पनि सधैं एक रहँदैन, समय र स्थिति हेरी यो परिभाषामा पनि परिवर्तन भइरहन्छ । आजको तथ्य भोलि असत्य, र आजको आवश्यकता भोलि अनावश्यक र अझ अनुचित हुनजान्छ । पत्रकारिताको उद्देश्य र कर्तव्य नै राष्ट्रका जनताको आवश्यकतामा निर्भर गर्दछ,यसर्थ पनि देशको राजनैतिक परिस्थिति,सामाजिक आवश्यकता र सांस्कृतिक समस्या हेरी परिवर्तन हुँदै जान्छ । स्वच्छ र स्वस्थ पत्रकारिता के हो भन्ने चीजको कुनै एक परिभाषा दिनुभन्दा पहिले पत्रकारिताको महत्व, आवश्यकता र उत्तरदायित्वमा केही प्रकाश दिनु उपयुक्त हुनेछ । देशका प्रत्येक सामूहिक संस्था झैं पत्रकारिताको पनि एक ठूलो शक्ति तथा उत्तरदायित्व छ । अरू पत्रकारिताको क्षेत्र ज्यादै विस्तृत भएकोले यसको शक्ति तथा उत्तरदायित्व दुबै नै निकै ठूलो छ । तलबारभन्दा कलमको धार तीखो हुन्छ भन्ने कहावतको तथ्यमा विचार गरी हेर्दा कलममध्ये पनि पत्रकारिताको कलम ज्यादा तीखो देखिन्छ । पत्रकारितालाई राष्ट्रको मार्ग प्रर्दशक भन्नमा कुनै अत्युक्ति हुन आउँदैन । नेपोलियन जस्ता शक्तिशाली तानाशाहले पनि एक समय भन्न परेथ्यो "म तोपभन्दा पनि बढी पत्रकारदेखि डराउँछु ।" यसबाट स्पष्ट छ– पत्रकारिताको शक्ति कति विस्तृत हुँदो रहेछ । पत्रकारितालाई छोटकरीमा भन्ने हो भने यसको काम जनमतको प्रतिनिधित्व गर्नु मात्र होइन, जनमतलाई सिर्जना गर्नु पनि हो । जनमतको प्रतिनिधित्व भन्ने बित्तिकै इमान्दारी साथ प्रतिनिधित्व गर्नुपर्ने कर्तव्य स्वयंसिद्ध तथा जनमत सिर्जना गर्ने पत्रकारिताको शक्ति र उत्तरदायित्व दुबै स्पष्ट हुन्छ। यसर्थ स्वच्छ पत्रकारिताले राष्ट्रको उन्नति र विकासमा जति ठूलो देन दिन्छ, नराम्रो पत्रकारिताले उत्तिकै भयङ्कर नोक्सान पनि गर्न सक्छ ।

समाचार पत्रमा लेखिएका कुराहरू केही न केही रूपले अखवार पढ्ने र नपढ्ने जनतासम्म पनि पुग्दछ । आफ्नो देशका विभिन्न स्थान र विदेशका खवरहरू पनि जनताले पत्र-पत्रिकाबाट



थाहा हुने हुँदा दुइ देशको बीच मैत्री अथवा विद्वेष पैदा गराउनमा पनि पत्रपत्रिकाले ठूलो काम गर्दछ । शासकवर्गले जनताको राय थाहा पाउने र शासकको आवाज जनता सम्म पुऱ्याउने साधन पनि पत्रि-पत्रिका नै भएकोले देशभित्रको स्थितिमा पनि समाचार पत्रको ठूलो प्रभाव हुन्छ । समाचार पत्रले गलत रूप रङ्ग दिएर समाचारहरू छाप्न लागेमा देशको स्थिति नै नाजुक हुन जान्छ । प्रथम महायुद्धपछि एकजना जर्मन सेनापतिले भनेका थिए– "युद्धमा इङ्गल्याण्डको विजय गराउनमा इङ्गल्याण्डका प्रधान मन्त्रीकोभन्दा पनि लण्डन टाइम्सको ज्यादा हात छ ।" यी सब कुराबाट स्पष्ट हुन्छ, पत्रकारको जिम्मेवारि सिर्फ आफ्नो पत्रप्रति मात्र होइन, आफ्नो समाज, आफ्नो देश र समस्त मनुष्य जातिप्रति नै हुन्छ । पत्रकारको पेशा जीबिकाको साधन पनि हो, तर पत्र-पत्रिकाको मुख्य लक्ष्य लोकसेवा हो भनी कहिल्यै बिर्सिन हुँदैन । पत्रकार तथा पत्रपत्रिकाको सम्मुख ठुलठुला प्रलोभन आउँदछन् । स्वार्थ शासक, व्यवसायी र तरह तरहका मतलवी तत्वबाट पत्रकारद्वारा आफ्नो प्रचार गराउने प्रयास हुन्छ । फेरी पत्रकारको आर्थिक स्थिति अक्सर राम्रो हुँदैन, तसर्थ पत्रकारले प्रलोभनमा फस्ने खतरा संधै नै रहन्छ । यस खतराबाट बच्न सक्ने वातावरण तयार गर्नु नै हर देशको पत्रकारिताको समस्या हो । दुषित पत्रकारिताबाट पत्रकारितालाई पर राख्नु देशको सरकार तथा जनता दुबैको कर्तव्य हुन आउँछ अझ विशेष गरेर यस कुराको विशेष जिम्मेवारि देशका पत्रकारवर्ग–उपर नै रहन्छ ।

कुनै एक स्वार्थ या मतलब भएको तत्वको प्रलोभनमा फस्नु, कसैको अनुचितदवाव या प्रभावमा पर्नु झूठ तथा आधारहिन भनेर थाहा पाएका कुराहरू प्रकाश गर्नु, सत्य हो भनि थाहा नभएका कुरा अनुचित तरिकाबाट छाप्नु आदि सबलाई हामीले दूषित पत्रकारिताका अन्तर्गत सम्झेका छौं । यस्ता अस्वस्थ प्रभावबाट प्रेस (पत्र-पत्रिका)लाई पर राख्ने सबभन्दा ठूलो कर्तव्य देशका पत्रकारवर्गमा नै रहन्छ भनी माथि नै लेखी सकिएको छ । यहाँ सन् १९५२ मा संयुक्त राष्ट्रसंघको जनरल एसेम्बलीको बैठकमा स्वेडनको प्रतिनिधि श्री रोल्फ एडवर्गले प्रकट गर्नु भएको विचार उल्लेख गर्नु अनुचित होइन । उहाँले भन्नु भएथ्यो "सरकारको काम त समाचार सम्बन्धी स्वतन्त्रताको आधार तयार पार्नु मात्र हो, यस आधार भित्र रही प्रेस नैतिकता नियमावली खडा गर्ने काम त पत्रकार तथा पत्रकारिताको नै हो ।" सांच्चै भन्ने हो भने पत्रकारिताको व्यवसायमा लागेका तथा अरू सूचनाका साधन या काम गर्ने मानिसहरूबाट नै समाचार दिदा व्याख्या गर्दा तथा कुनै सत्य कुराकै प्रतिनिधित्व गर्दा समेत सत्यवादी बन्ने नैतिक बन्धनमा रहेर उत्तरदायित्वको उच्चतम् स्तरमा रहने निरन्तर तथा स्वेच्छापूर्वक प्रयास गरेर मात्रै पत्रकारिता स्वच्छ तथा स्वस्थ रहन सक्दछ । देशमा पत्रकारिता विकास गराउने वातावरण र सुविधा प्रदान गर्ने कर्तव्य सरकारको पनि हो' तर पत्रकारिताको नैतिकताका नियमहरू इमान्दारी साथ पालन गर्ने र त्यस सुहाउँदो वातावरण तयार गर्ने उत्तरदायित्व पत्रकारिताको व्यवसायमा लागेका वर्गको नै हुन आउँदछ भन्ने यस कमिशनको विचार छ ।

हुनत प्रेस (पत्र-पत्रिका) ले रिक्ततामा काम गर्न सक्दैन, फस्टाउने वातावरण नभई प्रेस फल्न फुल्न सम्भव छैन । वास्तवमा स्वस्थ वातावरणमा अनुत्तरदायी पत्रकारिता हुर्कन

सक्दैन। तर सार्वजनिक क्षत्रमा काम गर्ने केही सरकारी पदाधिकारी, राजनैतिक नेता अनुत्तरदायी भए भन्दैमा प्रेस (पत्र-पत्रिका)ले पनि अनुत्तरदायी बन्न सुहाउँदैन। देशमा उत्तरदायित्वको भावना सब क्षेत्रमा कायम गर्न, देन दिन सक्ने सबभन्दा ठूलो शक्ति प्रेसकै हुन्छ र वास्तवमा स्वस्थ तथा उत्तरदायीत्वपूर्ण वातावरण सिर्जना गर्ने काम नै मुख्य हो।

माथि लेखिएका कुनै पनि प्रकारका अस्वस्थता तथा अनुत्तरदायीत्वतिर नखसी जनमत प्रतिनिधित्व गर्नु र जनमतको सिर्जना गर्नु नै प्रेसको एक मात्र कर्तव्य हो भन्ने सम्झेर कुनै स्वार्स्थपूर्ण तत्वको दबाब वा प्रभावबाट परै रही निर्भिकता पूर्वक सरकार, सरकारी अधिकारी राजनैतिक पार्टी तथा नेता अन्तका अरू पनि सार्वजनिक जिम्मेवारीका पदमा रहेका व्यक्ति तथा शक्तिको निष्पक्ष विश्लेषण तथा समालोचना गर्नु नै स्वच्छ पत्रकारिता हो भन्ने हामीलाई लाग्दछ। साथै देशमा उत्तरदायित्वको भावना तयार गर्न जत्तिकै अनुत्तरदायि वातावरणभित्र रहे पनि आफ्नो उत्तरदायीत्व नभूली आफ्नो कर्तव्य पूरा गर्दै जानु नै स्वस्थ पत्रकारिता हो।

हरेक देशमा विभिन्न समयमा विभिन्न आवश्यकताको पूर्तिमा देन दिन विशेष ध्यान दिनु स्वच्छ तथा स्वस्थ पत्रकारिताको एक लक्षण हो। उदाहणरको रूपमा आजको हाम्रो देश को स्थितिलाई नलेऔं–प्रजातान्त्रिक व्यवस्था कायम गर्नु हाम्रो आजको काम हो। अहिले देशको प्रजातान्त्रिक विकासको निमित्त तथा राष्ट्रियताको भावना र अन्तरराष्ट्रिय सहयोग कायम गर्न अगाडि सर्नु नै स्वच्छ तथा स्वस्थ पत्रकारिताको अर्को लक्षण हुन आएको छ।

स्वच्छ तथा स्वस्थ पत्रकारिताको प्रकाशन स्वतन्त्रतासंग गहिरो सम्पर्क छ, तसर्थ यस विषयलाई यस दृष्टिकोणबाट पनि विश्लेषण गर्नु आवश्यक देखिन्छ। प्रकाशन स्वतन्त्रता जनताको मौलिक अधिकार हो। यो अधिकार विना कुनै राष्ट्रको पनि सर्वतोन्मुखी विकास सम्भव छैन। हरप्रजातान्त्रिक सरकारको कर्तव्य जनतालाई प्रकाशन स्वतन्त्रता प्रदान गर्नु हो, साथै यस स्वतन्त्रताको सदुपयोग गर्नु पत्रकारिताको कर्तव्य हो। सरकारबाट यो स्वतन्त्रता राम्ररी प्रदान भएको छैन, तसर्थ देशमा स्वच्छ पत्रकारिता सम्भव छैन् भन्ने तर्क दिनु पत्रकारको निमित्त सुहाउँदैन। यदि प्रकाशन स्वतन्त्रताको राम्रो व्यवस्था छैन भने जनताको यस अधिकार प्राप्ती को निमित्त लड्नु पनि स्वच्छ पत्रकारिताको काम हो। तर स्वतन्त्रताको मतलब स्वेच्छाचारिता होइन, प्रकाशन स्वतन्त्रता जनताका मौलिक अधिकारमध्ये एक हो। यसर्थ यस अधिकारको प्रयोग पनि यस्तो तवरबाट हुनुपर्छ, जसद्वारा जनताको अर्को मौलिक अधिकारमा धक्का नपरोस् यसर्थ प्रकाशन स्वतन्त्रताको अधिकारको सदुपयोगतर्फ पत्रकारवर्गले नै विशेष ध्यान दिनु आवश्यक छ।

यसको सिलसिलामा नेपाल भाषा पत्रिकाका सम्पादक श्री फत्तेबहादुरले काठमाडौं मेजिष्ट्रेट विरुद्ध सर्वोच्च अदालतमा दायर गरेको मुद्दामा सर्वोच्च अदालतको स्पेसियल बेन्चले २०१४।१२।७।५ मा दिएको फैसलाको केही अंश उद्धृत गर्नु अनुपयुक्त हुनेछैनः–

"पत्रकारिता बुद्धिजीवीको एक अत्यन्त जवाफदेही पूर्ण पेशा हो, आजको युगमा यो पेशा एक विशिष्ट तथा महत्वपूर्ण स्थान राख्दछ। स्वच्छ पत्रकारिता समाज सरकार



दुवैलाई कल्याणकारी मार्गतर्फ अग्रसर गराउन सक्तछ। समय समयमा सचेतकको रूपमा अग्रसर भै दुवैलाई गलत मार्गबाट हटाई सही पथप्रदर्शन पनि गर्न सक्तछ। फलस्वरूप यो पेशा सम्मानित पनि छ, साथै पत्रकारको भूल या त्रुटी देश हितको खिलाफ समान रुपमा हानिकारक पनि सिद्ध हुन सक्तछ। अतः कानूनी नियन्त्रणको आवश्यकता महशूश गरिन्छ।"

प्राप्त अधिकारको नराम्रो तवरले उपयोग गर्नु पत्रकारिताको काम होइन। स्वच्छ तथा स्वस्थ पत्रकारिताको आधार नै जनसाधारण प्रतिको विश्वास र आस्था हो। सार्वजनिक हित र स्वार्थमा खराब हुन सक्ने समाचारहरू प्रकाशमा ल्याउन पत्रपत्रिकाले विशेष ध्यान दिनु पर्छ। आधिकारक तवरवाट थाहा नभएका समाचार र हल्लाहरू प्रकाश गर्दा स्पष्ट रुपले पुष्टि नभएको भनी लेख्नु पर्दछ। यहाँ बृटेनको प्रेस काउन्सिलले यो विषयमा दिएको एक वक्तव्यमा उल्लेख गर्नु उपयुक्त होला। वक्तव्य भनिएको छ– "यौन विषयमा प्रौढ तरिकाले लेख्नु प्रेसको आधिकारभित्रकै कुरा भए पनि कुनै कुनै पत्रपत्रिकाले यौन विषयलाई अस्वस्थ तरिकाले प्रयोग गरेकोमा यो काउन्सिल ज्यादै चिन्तित छ। यसबाट जनताको नैतिकतामा खराब प्रभाव पार्न सक्तछ, कारण समाचार पत्र तथा पत्रिकाहरू युवक युवतिहरूले पढ्छन्।"

हाम्रो देशमा यस प्रकारको समस्या अहिले नहुन सक्ला तर कुनै पनि समस्यालाई विचार गर्दा पत्रकारिताको यस ढंगको धारणा हुनु आवश्यक छ।

प्रेसको वाञ्छनीय स्तर

पत्रकारिताको स्वच्छ र स्वस्थतापछि अर्को आवश्यकता यसको स्तर हो। हुन ता विश्वका विकसित देशहरूका दाँजोमा, अझै हाम्रा छिमेकी राष्ट्रहरूका दाँजोमा हेर्दा पनि हाम्रो देशका पत्रकारिताको स्तर राम्रो भन्न सकिन्न। हुन पनि हाम्रो देशमा पत्रकारिता सच्चा अर्थमा शुरू भएको भरखर भरखरै मात्रै हो भने पनि हुन्छ। देशमा जनताले प्रकाशन स्वतन्त्रताको अंशसम्म पनि ८ वर्ष पहिले उपभोग गर्न पाएको थिएन। यस स्थितिमा हाम्रो देशको पत्रकारिताको इतिहासको ७ वर्षभित्र पत्रकारिताले आजसम्म जुन विकास गर्न सक्यो त्यो सन्तोषकै कुरा छ। तर, देशको आवश्यकता हेरी आजको पत्रपत्रिकाको स्तर लाई सन्तोषप्रद छ भन्न सकिन्न। प्रेस (पत्रपत्रिका)को स्तर देशको स्थितिमा निर्भर गर्दछ। विकसित देशको दाँजोमा पिछडिएका देशका पत्र-पत्रिकाहरू पुग्न सक्दैन। तर राष्ट्रको जतिको अत्यावश्यक माग छ, त्यस स्तरसम्म पुग्नुलाई वाञ्छनीय स्तर भनी प्रेसको माग्नु पर्दछ। आर्थिक कठिनाई, दक्ष पत्रकारको अभाव, समाचार प्राप्तीको श्रोत नहुनु, आदि कारणले देशको पत्रपत्रिकाले चाहिंए जति स्तरमा पुग्न गाऱ्हो छ। राष्ट्रको माग पूरा गर्न, जनताको रूचि परिमार्जन गर्न, अझै अहिलेको स्थितिमा जनताको आवश्यकता पूरा गर्न र सबभन्दा ठूलो कुरा जनमतको राम्रो प्रतिनिधित्व र जनमत सिर्जना गर्नमा नेपालको पत्रकारिताले राम्रो सफलता पाउन सकेको छैन। आजको एक दुई पानामा निस्केका दैनिक पत्रपत्रिकामा "गेटअप लेआउट" आदि पत्रकारिताको कला विषय विचार गर्नु त आवश्यक नै हुन आउँछ। तर, यस सानो परिमाणमा नै पत्रपत्रिकाले जुन जुन सेवा तथा राष्ट्रलाई देन दिन सम्भव छ, त्यहाँ

सम्म नेपालको पत्रकारिता पुगेको छैन भन्नु राष्ट्र तथा जनसेवालाई आफ्नो एक मात्र लक्ष्य सम्झी निरन्तर प्रयास गरिरहेका पत्रकारहरूप्रति अन्याय नै भएपनि वास्तविकता होइन भन्न सकिन्न । आलोचना होइन, सुझावको रूपमा हामी पत्रकारवर्गलाई एक कुरा भन्न आवश्यक सम्झन्छौं । देशमा पत्रकारिता नै एकमात्र लक्ष्य सम्झने पेशावाल पत्रकारिताको भावनाको देशमा कमी नै छ । प्रेस (पत्र-पत्रिका)ले बाँझो मरुभूमिमा काम गर्न सक्दैन, यो मान्नै पर्दछ । कुनै विकास गर्ने अवकाश र तथा प्रोत्साहनको अभावमा पत्रकारहरूले मात्र पनि धेरै उन्नति गर्न सक्दैन, यो पनि सत्य हो । तै पनि पत्रकारिता नै लक्ष्य सम्झने प्रवृत्तिको पत्रकारवर्गमा अहिले सबभन्दा कमी छ । देशसेवाका विभिन्न काम मध्ये पत्रकारिता पनि एक हो भन्ने सम्झे मात्र पर्याप्त छैन, अहिलेको स्थितिमा देशको पत्रकारवर्गले पत्रकारितालाई नै एउटा मात्र लक्ष्य सम्झन पर्दछ, अरू सेवाका साथ यसलाई पनि एक सम्झेर काम गरेर पुग्दैन। हामीले माथि नै भनिसकेका छौं, पत्रकारिता लोकसेवाको साथै जीविकाको साधन पनि हो, तर शुरू शुरूमा पत्रकारिता जीविकाको साधन हुनु मुस्किल छ । साँच्चै भनौं भने अहिले नेपालमा पत्रकारिता सिर्फ सेवा गन साधनमात्रै छ । यस क्षेत्रमा आउने पत्रकारहरूले पनि त्याग र सेवा सत्यनिष्ठा बाहेक अरू केही गर्ने या पाउने आशा गर्न सक्दैनन् । यस निमित्त पत्रकारहरूले अहिले सेवाको भावलाई फलको वास्ता नगरी सेवा मात्र सम्झेर अगाडि बढ्नु परेको छ । पत्रकारताका निमित्त आवश्यक सुविधा सरकारतर्फबाट खोज्नु स्वाभाविक छ, साथै पत्रकारितालाई विकास गर्न सुहाउँदो वातावरण तयार गर्न पत्रकारवर्गले आफ्नो प्रयास तथा देनलाई अझ बढाउँदै लैजाने उत्साह राख्नु परेको छ । ठूलो भन्दा ठूलो त्याग र सेवा गर्न तयार रहनु आवश्यक छ । देशमा दक्ष पत्रकारहरूको अभाव जरूर छ, तर पत्रकारवर्गमा सेवा र त्यागको भावना बढ्दै गएमा दक्ष पत्रकारिताको निमित्त उति ठूलो कमी हुन आउँदैन ।

पत्रकारिताका नैतिकतासम्बन्धी नियम झैं पत्रकारिताको स्तरतिर ध्यान दिने काम पनि सरकारभन्दा पत्रकारवर्ग कै हो । पत्रकारहरूकै प्रयासबाट नै पत्रपत्रिकाको स्तर उकास्न सम्भव छ, यस विषयमा सरकारले नियम बनाएर लागू गर्नु सम्भव छैन । साँच्चै भनौं भने सरकारले पत्रपत्रिकामा न्यूनतम पत्रसंख्या, त्यस्तै स्तर आदिको नियम बनाउनु पनि प्रकाशन स्वतन्त्रतामा सीमा राख्नु झैं हुन्छ । यस विषयमा नेपालका स्थानीय हाकिम तथा बडाहाकिम-हरूद्वारा पत्रपत्रिकाका सम्पादकलाई पत्रमा कमसे कम यति पृष्ठसम्म कायम राख्ने छौं भन्ने कबुलियत गराएका, तथा पत्र रजिष्टर गर्नुभन्दा पहिले पत्रकारको योग्यता जाँच्ने काम गरेका कुराहरू प्रेस कमिशनले पत्रकारहरूसंग भेट छलफल गर्दा तथा निरीक्षण गर्दा थाहा पाइएको छ । पत्रकारितामा योग्य व्यक्तिहरूलाई मात्रै प्रोत्साहन दिनु पत्रपत्रिकाहरूलाई निम्नतम स्तर-भन्दा तल जान नदिनु आवश्यक भए तापनि यसबारे सरकारले कानून नियमहरू बनाएर सम्भव छैन । यसलाई पत्रकारिहरूले न आफ्नो उत्तरदायित्व सम्झेर कदम उठाउन उचित होला भन्ने हामीलाई लाग्दछ । तैपनि पत्रकारिताको विकासलाई ध्यानमा राखी पत्रकारवर्गलाई केही सुझाव दिन हामी अनुचित ठान्दैनौं ।



## पत्रकारिताको विकास सम्बन्धीसुझावहरू

१. पत्रकारिताको स्तर सन्तोषप्रद हुनु कतिको आवश्यक कुरा हो, भनी रहन पर्दैन । कुनै पनि चीजको स्तर त्यस बेला उठ्दछ, जब त्यो दक्ष योग्य व्यक्तिबाट सञ्चालित हुन्छ। नेपालको यो स्थितिमा त तालिम प्राप्त पत्रकारहरू पाउन सकिन्न। कारण पत्रकारिता नै प्रारम्भिक हुदैछ। प्रारम्भिक काल हुँदा करीब १।२ वर्ष यही रूपबाट चल्न दिए पनि सके त्यै समयभित्र, नभए त्यसपछिता पत्रकार क्षेत्रमा सकभर योग्य व्यक्तिहरू मात्रै आउन पाउन भन्ने कुरा पत्रकार वर्गले नै विशेषध्यान दिनुपर्दछ। पत्रकारिताजस्तो उत्तरदायि काम जोसुकैको हातमा छोड्नाले राष्ट्रको ठूलो हानि हुन सक्छ । पत्रकारवर्गको इज्जतको निमित्त पनि यस क्षेत्रमा उत्तरदायी व्यक्तिले मात्रै प्राय स्थान पाउनु उचित हुन्छ । यसर्थ दुई वर्ष भित्र पत्रकार क्षेत्रमा योग्य पत्रकारबाहेक अरूलाई आउन निरूत्साहित गर्नु पनि पत्रकारवर्गले नै गर्नु उचित हुन्छ । योग्यताको अर्थ हामी कुनै विश्वविद्यालयबाट शैक्षिक योग्यता प्राप्त व्यक्तिलाई मात्र लिदैनौं यस विषयको शैक्षिक योग्यता भएका अथवा कुनै एक लब्धप्रतिष्ठ योग्य सम्पादकको अधीनमा कमसे कम एक वर्ष कुनै पत्रिकामा काम गरिसकेका पत्रकारलाई मात्रै सम्पादक क्षेत्रमा एक दुई वर्षभित्र पत्रकार क्षेत्रमा आउन प्रोत्साहन मिल्न आवश्यक छ ।

२. हामीले माथिनै भने झैं अर्को कुरा, अहिलेका पत्र पत्रिकाहरूको साइज र पृष्ठ संख्यामा बृद्धि हुनु आवश्यक छ । एक पत्रे अखबारको प्रधान सम्पादक बन्नु भन्दा एक ठूलो अखबारको उप-सम्पादक बन्नु ज्यादा इज्जत रहने मात्र होइन, त्यसबाट बढ्ता सेवा गर्ने मौका पनि हुन्छ । पत्रकारितालाई फस्टाउने केही वातावरण तैयार भए पनि पत्रपत्रिकाको साइज र पृष्ठ संख्या बढाउन पट्टि लम्कनु अत्यन्त जरूरी भइसकेको छ । कमसे कम दुई वर्षभित्रमा नै निम्न ढङ्गका पत्रपत्रिकाको साइज र पृष्ठसंख्या निम्न लेखिएबमोजिम भए नेपालमा पत्रकारिताको बारेम हेर्न र साथै बोल्नमा केही हिचकिचाउने अवस्था पर्ने थिएन । पछिको भविष्यलाई तलदिएको तालिकालाई उछिनेर अझै अगाडि बढ्नु बेस छ ।

| किसिम | पृष्ठ संख्या | साइज |
|---|---|---|
| दैनिक | ४ | १८–२२ |
| अर्ध-साप्ताहिक | ८ | १८–२२ |
| साप्ताहिक | १० | १०–२२ |
| मासिक | ३२ | ०– ०– |

हुनत यस विषय कुनै कानून नियम बनाउनु व्यवहारिक हुन आउने छैन, तर पनि पत्रकारहरूले यस चीजको आवश्यकता आफैंले महशूश गर्नु पर्दछ ।

३. अर्को कुरा हामी पत्रकारहरूलाई भन्न चाहन्छौं पत्रपत्रिकामा समाचार, विज्ञापन, सम्पादकीय, फिचर आदिको कुन एक निश्चित अनुपात हुनु नितान्त आवश्यक

छ। पत्रको साइज जतिसुकै होस्रोस्,त्यसको कुनै एक निश्चित अंश समाचार, त्यस्तै सम्पादकीयलाई दिने, विज्ञापनलाई एक निश्चित अंशभन्दा बढ्न नदिने व्यवस्था हुनुपर्दछ। समाचारमा पनि एकै ठाउँको मात्रै नभइ सकभर राष्ट्रव्यापी प्रतिनिधित्व हुन दिने तथा आफ्नो कुनै एक नीति अन्तरगत राष्ट्रिय र अन्तर्राष्ट्रिय समाचारको अनुपात कायम गर्न प्रयास अहिलेदेखि शुरू हुन उचित छ।

४. राष्ट्रिय सम्बाद समिति बन्नुभन्दा पहिले नै कमसेकम स्थानीय समाचार प्राप्ती र सङ्कलन को निम्ति पत्रपत्रिकाहरूले एक ठोस व्यवस्था गर्नु सम्भव छ। विभिन्न पत्रपत्रिकाहरूले ठाउँ ठाउँमा आफ्ना आफ्ना सम्बाददाता राखेर काम गरिरहन परिरहन्छ, समाचार प्राप्तीको श्रोत नै अहिले आफ्नो सम्बाददाता मात्र छ। यस विषयमा विभिन्न पत्रकारहरूले आपसी सहयोग द्वारा देशका केही स्थानहरूमा नगर सम्बाद समितिहरू खडा गर्न सक्दछन्। यसतर्फ पत्रकारहरूको प्रयास हुनुपर्ने देखिन्छ।

५. समाचार सङ्कलनमा मात्रै होइन छापाखानाका निमित्त पनि पत्रपत्रिकाहरूको परस्पर सहयोगले धेरै नै फाइदा उठाउन सकिन्छ। धेरै नै पत्रपत्रिकाहरूले आफ्नो छापाखाना कायम गर्न सक्ने स्थितिमा छैनन्। छापाखानालाई पैसा तिरी रहँदा सधैंभरी आर्थिक समस्या पत्रपत्रिकाहरूले सामना गरिरहनु परेको छ। दुई चार वा त्यसभन्दा बढी पत्रपत्रिकाहरू मिली सहकारी ढङ्गमा एक सानै भए पनि छापाखाना खडा गर्न पनि सम्भव हुनसक्छ। पत्रपत्रिकाको सहयोगले बनेको यस छापाखानाले पत्रहरू छाप्न मात्र सुविधा हुने होइन त्यस छापाखाना नै अर्को उद्योग बन्न जान्छ। यसबाट पत्रपत्रिकालाई धेरै सुविधा मिल्न सक्दछ।

६. प्रकाशन केन्द्रको विषयमा पनि हामी केही भन्न आवश्यक सम्झन्छौं। अहिले पत्रपत्रिकाहरू देशका एक दुई बाहेक सबैजसो राजधानीमा केन्द्रीत छन्। हुन त सञ्चार सुविधाको कमीले गर्दा देशका ठाउँहरूमा प्रकाशन केन्द्रहरू खोल्न गाह्रो छ। तर देशका सारा पत्रपत्रिकाहरू एकै ठाउँ केन्द्रित भएर रहँदा देशका विभिन्न ठाउँका खबरहरू समावेश गर्न गाह्रो हुने मात्र होइन, राष्ट्रका विभिन्न स्थानमा समाचार पत्रसम्म पुऱ्याउन गाह्रो पर्दछ। नेपाल जस्तो सञ्चार कठिनाई भएको देशमा त प्रकाशन केन्द्रहरू सकभर छरिनु पर्दछ। सञ्चार साधनहरू प्रसस्त विकसित भएर एक दुई घण्टामै देशको एक कुनाको अर्को कुनासंग सम्पर्क रहन सक्ने स्थानमा पनि एकै समाचार पत्रले देशका विभिन्न स्थानबाट एकसाथ पत्र प्रकाश गरिरहेको उदाहरण हाम्रो अगाडि छ। तर हाम्रो देशमा ठीक यसको उल्टो प्रवाह छ, देशका भएको एक दुई भागबाट पनि समाचार पत्र र छापाखानाहरू समेत काठमाडौं आउँदै छ। राष्ट्रिय जीवनको विकासमा पत्रकारिताको ठूलो स्थान छ। देशका विभिन्न स्थान, कमसेकम□ "क" र "ख' श्रेणीका जिल्लाहरूमा "क" श्रेणीको जिल्लामा ११ × १२ को फ्लाट र "ख" श्रेणीको जिल्लामा ७ × १० ट्रेडलको भए पनि अहिले छापाखानाहरू स्थापना हुनु आवश्यक देखिन्छ। छापाखानाको सुविधा भएपछि पत्र पत्रिकाहरू पनि विकेन्द्रीत रुपमा छरिन थाल्नेछन्।

---

नोटः– □सरकारी स्तर को जिल्ला विभाजनलाई लिएको



७. पत्रपत्रिकाले जनमतमा कत्तिको प्रभाव पार्दछ, त्यसको उल्लेख माथिनै भै सकेको छ। पत्रकारिता राष्ट्रिय जिवनको एक शक्तिसाली अङ्ग भएकोले नै स्वार्थपूर्ण तत्वले यसलाई आफ्नो स्वार्थसिद्धिको अङ्ग बनाउन चाहन्छन्। फेरी अरू व्यवसायमा झैं पत्रकारितामा पनि व्यावसायीक प्रतियोगीता हुन्छ। व्यापार एकाधिपत्य गर्न चाहने तत्वले व्यापार क्षेत्रमा चलेझैं पत्रकारिता क्षेत्रमा पनि यस्तै तत्वले योजनाबद्ध तरिकाले देशभर पत्र श्रृङ्खला खडा गर्न सक्दछ। यसले अरू पत्र-पत्रिका प्रतियोगितामा टिक्न नसकेर बिलाउने खतरा छदैंछ, त्यसभन्दा पनि भयङ्कर डर त यो छ कि एउटै कुरा देशका कैयन् यस श्रृङ्खलाभित्रका पत्रहरूले एकैसाथ प्रतिनिधित्व गर्दा जनमतलाई नै भ्रमात्मक बाटो तर्फ बंग्याउन सक्दछ। भनाईको तात्पर्य यो होइन कि देशका पत्र-पत्रिकाहरूले एकै राय प्रकट गर्नु हुँदैन, विभिन्नता हुन पर्दछ। राष्ट्रिय हित र सार्वजनिक स्वार्थको कुरा विभिन्न पत्रको एक विचार एक राय हुनु झन् राम्रो हो। तर स्वार्थपूर्ण तत्वले तयार बनाएको रेडिमेड विचारलाई प्रचार गर्ने काम एकसाथ धेरै पत्र-पत्रिकाले गर्न लागेमा राष्ट्रको भयङ्कर क्षती हुने सम्भावना छ। हुन त हाम्रो देशमा यो समस्या आई सकेको छैन, तर यो खतरा देशको पत्रकारितामा आउन नदिन सरकार,जनता तथा पत्रकार-वर्गले पनि सदा सचेत रहनुपर्दछ। यस निमित्त पनि अहिले देखि पत्र-पत्रिका प्रकाशन केन्द्रहरू देशभर छरिने व्यवस्था हुनु उचितछ, ता कि देशका विभिन्न क्षेत्रका प्रकाशनहरूको अभावबाट फायदा उठाई यस्ता तत्वले देशव्यापी पत्र श्रृङ्खला जमाउन नसकुन्।

(८) पत्र-पत्रिका चलाई रहेका वा अरू सूचनाका साधनमा काम गर्ने पत्रकारहरू रहेका अथवा विभिन्न पत्र वा सूचना साधनका सम्वाददाताहरू एकै ठाउँ रही केही संख्यामा पत्रकारहरू भेला हुन सक्ने हर सम्भव स्थानमा "प्रेस क्लब"हरू खडा हुनु पनि पत्रकारिताको निमित्त मद्दत हुनेछ। कारण यस्ता क्लबले मनोरन्जन दिने मात्रै होइन, पत्रकारहरू एकै ठाउँ भेला हुँदा विचार आदान प्रदानद्वारा समाचार सङ्कलनमा सुविधा र पत्रकारहरूको मुख्य कर्तव्य सत्यको खोजमा पनि सहायक हुनेछ। पत्रकारलाई आपसी विचार आदान प्रदानले आत्म विकास गर्ने मौका पनि मिल्ने छ। यस क्लबमा पत्र, समाचार एजेन्सी, रेडियो वा अरू पनि कुनै सूचना साधनमा काम गर्ने सरकारी तथा गैर सरकारी पत्रकारहरू र अरू फ्रिलान्स जर्नलिष्टहरू सदस्य हुन सक्ने नियम रहनुपर्दछ।

परिच्छेद १२

## पत्रकारहरूको लागि आचरण सम्बन्धी केही नियमहरू

प्रजातान्त्रिक परीपाटी अङ्गालेको देशमा जनमत र जन भावनालाई प्रतिनिधित्व गर्ने र प्रतिविम्बित पार्ने साधनहरूले आफ्नो कति महत्व र विशिष्ट स्थान राख्दछन्, तथा तिनमा सत्य निष्ठा विवेक र उत्तरदायित्वको कति प्रचुरता र प्रावल्यता रहन्छ अथवा रहनुपर्दछ त्यो त कुनै पनि प्रजातन्त्रको सच्चा अर्थ बुझ्नेको लागि ऐनमा जत्तिकै छर्लङ्ग भई ऐना रहन्छ। यसमा यहाँ विशेष व्याख्यानको दरकार परोइन। हाल २००७ साल यता हाम्रो देशमा पनि अप्रजातान्त्रिक शासनको एकाएक समाप्ति बाद प्रजातान्त्रिक व्यवस्था र परिपाटीको प्रारम्भ भै

दिन प्रतिदिन यस्को विकास हुँदै गइरहेको छ । प्रजातन्त्रलाई दृढ तुल्याउनमा ठूलो योगदान गर्ने पत्रकारिताको पनि आफ्नै ढङ्गले दिनप्रतिदिन विकास हुन थालेको छ । आठ वर्ष अघिसम्म सरकारद्वारा सञ्चालित एक गोरखापत्र बाहेक खबर पत्र एकसम्म देख्न नपाएका तिनै नेपालीहरूले आज १२।१३ वटा स्वतन्त्र दैनिक पत्रहरू र कैयन साप्ताहिक, अर्ध-मासिक, मासिक र त्रैमासिक पत्र-पत्रिकाहरू देख्न पाउनु र पत्र-पत्रिकाको महत्व र उपयोगिताको यति तीव्रगतिले बढ्दै जानु नेपालमा पत्रकारिताको प्रारम्भका साथै विकास पनि हुँदैछ भन्नुमा केही अत्युक्ति होवोइन ।

केही पनि नभएको ठाउँमा यति चाडो सानै र अपुरो रूपमा भए पनि पत्रिका अखवार पत्रिकाहरूको अस्तित्व र केही मात्रामा उन्नति भएको पाउन हामी प्रजातन्त्र प्रेमी नेपालीहरूको लागि निक्कै खुशी लाग्ने कुरा हो । अरू क्षेत्रका विभिन्न नयाँ प्रयोग र नयाँ व्यवस्था जस्तै नेपालको जनजीवनमा पत्रकारिता पनि एक नयाँ विषय र प्रयोग भएको हुनाले यसमा अनेकौं त्रुटी, कमजोरी विकार र संकुचित दृष्टीकोणले केही न केही रूपमा प्रश्रय पाइरहेको होला, सम्न्ती नेपालको अचानक परिवर्तनले ल्याएकोयो अन्योल अनिश्चित र संक्रमण कालको वातावरणमा यस्तो विकार देखिनु कुनै आश्चर्य कुरा होइन, विस्तार विस्तार प्रजातान्त्रिक जन-जीवनको परिपक्वताका साथै यो अनैतिक विकार अवश्य हट्दै जानेछ । तर यो विकार आफसे आफ दिन वित्नुको साथ साथै हटेर जाला भनी हात बाँधेर बस्न चाहीं भूल हुनेछ, जुन भूलले गर्दा यो धमिलो र अनैतिक वातावरणको आयु लम्व्याउँदै लानेछ । यसले छिपिन पायो भने यसलाई उखेल्न एक मानिसको बलको सट्टा हजार मानिसको बल चाहिनेछ । तसर्थ बेलैमा हाम्रा आफ्ना कमजोरीहरूप्रति सचेत रही आफ्नो उत्तरदायित्व र कर्तव्यमुताविक यिनीहरूलाई घटाउँदै र हटाउँदै लानमा नै आफ्नो भलाई निहित रहनेछ ।

स्वच्छ र स्वस्थ पत्रकारिताको परिभाषा, त्यसको महत्व र त्यसले पाउनुपर्ने सहुलियत सुविधा, पत्रकारहरूको अनेकौं कठिनाई र प्रतिकूल वातावरणको बावजुद लगनशीलताको वर्णन र पत्र-पत्रिकाको मौजुदा स्थितिको दिग्दर्शन आदि अरू परिच्छेदहरूमा प्रस्तुत गरिए, यस परिच्छेदमा हामीले प्रेस (पत्र-पत्रिका)हरूको देश, नरेश, जनता र सरकारप्रतिको उत्तर-दायित्व सम्बन्धी केही आचरण संस्मरण गराउने धृष्टता गरेका छौं ।

हामीले माथि भने जस्तै प्रजातन्त्रको एक अति महत्वपूर्ण स्तम्भ पत्रकारिता स्वच्छ र स्वस्थ कायम राख्दै लानको लागि पत्रकारहरूको आचरण विशेष संयमपूर्ण हुनु नितान्त आवश्यक छ । किन भने उनीहरूको कलममा समाज, जनजीवन र राष्ट्रिय मनोभावनाको उत्थान र पतन निर्भर गर्दछ ।

तसर्थ प्रेस कमिशन यो सुझाव प्रस्तुत गर्न आवश्यक सम्झन्छ कि देशका समस्त पत्रकारहरूले आफूलाई आचारण सम्बन्धी कुनै नैतिक नियमहरूद्वारा बल ल्याउनुपर्दछ, जसबाट आफ्नो लेखन कार्य पूरा गर्दा उनीहरूलाई देश, नरेश, जनता र समाजप्रतिको आफ्नो महान उत्तर दायित्व पूर्ण गर्नमा नैतिक बल मिलोस् ।



आफ्नो उत्तरदायित्व पूरा गर्दा पत्रकारहरूले आफ्नो मनमा राख्नुपर्ने पत्रकारिता-सम्बधी आचरणका मोटामोटी नियमहरू पनि यसै रिपोर्टमा समावेश गर्नु प्रेस कमिशनले आफ्नो कर्तव्य संझेको छ । यी नियमहरूलाई पत्रकारितामा लागेका सबैले पालन गर्नुपर्दछ भन्ने हाम्रो धारणा छ ताकि देशको स्वच्छ र स्वस्थ पत्रकारिताको परम्परा कायम गर्न सजिलो परोस् ।

पत्रिकाहरूको आचारणसम्बन्धी नियमहरू कुनै कानूनी नियम नभै एक नैतिक नियमसम्म भएको हुनाले यसलाई पालन गराउनको लागि कानूनी विशेष व्यवस्था मिलाउन उति राम्रो हैन तापनि पत्रकारहरूलाई यी नियमहरू पालन गराउने प्रयत्न प्रस्तावित प्रेस सस्लाहकार समितिले नैतिक स्तरमा गराउन पर्दछ भन्ने कमिशनको राय छ ।

पत्रकारहरूको कार्य कलापलाई कानूनी सीमानाभित्र राखेर मात्र पत्रकारितामा त्यतिको स्वच्छ र स्वस्थता आउन सक्तैन, जतिको नैतिक नियमहरू पालन गराउनमा विशेष प्रोत्साहन र जोड दिंदा आउन सक्तछ । मौलिक प्रचुरताका साथै नैतिक प्रबलता नभै स्वच्छ र स्वस्थ पत्रकारिताको आशा गर्न सकिन्न, नैतिकताको अभावमा रङ्गीन पत्रकारिताको सम्भावना विशेषरूपले बढी हुन्छ । तसर्थ यस किसिमको झुकावलाई अनुत्साहित गर्ने प्राथमिक जिम्मेदारी यिनै नियमहरूको आधारमा प्रेस सल्लाहकार समितिको हुनुआवश्यक छ । साथै प्रत्येक पत्रकारले पनि देशमा स्वच्छ र स्वस्थ पत्रकारिताको परम्परा कायम राख्न उपर्युक्त नियमहरू-लाई हृदयंगम गरी पालन गर्नुपर्दछ भन्ने प्रेस कमिशनको विशेष अनुरोध छ । वस्तुतःपत्रकारिता जगतमा नैतिक स्तर बढाउने पूर्ण जिम्मेदारी पत्रकारहरूको हो ।

नियमहरू

(१) व्यक्तिगत तथा दलगत जेसुकै स्वार्थलाई बिर्सि राष्ट्रिय हितलाई जहिले पनि सर्बोपरि राखी यसमा कुनै किसिमको आँच पर्न नदिनु र राष्ट्रिय भावनालाई जागृत गर्नु गराउनु वर्तमान नेपालमा पत्रकारहरूको एक महत्वपूर्ण कर्तव्य हुनु आवश्यक छ ।

(२) राष्ट्रिय एकताका प्रतिक तथा राष्ट्रका सर्वोच्च नायक श्री ५ महाराजाधिराज तथा शाही परिवार, सार्वजनिक आलोचनाभन्दा माथि रहने एक पवित्र र उच्च संस्था भएको हुनाले त्यसप्रति कुनै किसिमको विवाद र आलोचना पैदा गर्ने भावनालाई बढावा दिन हुँदैन ।

(३) पत्रकारहरू विशेष तवरले प्रयत्नशील रहनुपर्दछ । पत्रकारहरूले आफ्नो कर्तव्य पालन गर्दा मौलिक मानव तथा सामाजिक अधिकार र प्रतिष्ठाको उचित कदर गर्नु पर्दछ तथा पत्र-पत्रिकामा आफ्नो विचार प्रकट गर्दा र समाचारहरू प्रकाशित गर्दा सच्चाई र इमान्दारीको नीति अपनाउनु पर्दछ ।

(४) प्रेस (पत्र-पत्रिका) जनमतको सृजना गर्ने एक प्राथमिक साधन हो । तसर्थ यस व्यवसायमा लागेका महानुभावहरूले कुनै पनि कार्य सार्वजनिक स्वार्थसित सम्बद्ध भएको

सम्झी हरबखत सचेष्ट रही कुनै पनि त्यस्तो कार्य जानाजान गर्नबाट पछि हट्नुपर्दछ–जसबाट जनजीवनमा विषवृक्ष रोपियोस्, विकार पैदा गरोस् ।

(५) पत्रकारहरूले देशमा साम्प्रदायिक भावना बढाउने, धार्मिक कटुता पैदागर्ने, आतङ्क अशान्ति संघर्ष र हिंसालाई प्रोत्साहन गर्ने खालका समाचारहरू र सम्पादकीय टिप्पणीहरू छाप्न प्रकाशित गर्नमा बडो होशियार रहनुपर्दछ ।

(६) पत्रकारहरूले समाचार सङ्कलन र प्रकाशन स्वतन्त्रता तथा स्वच्छ र आलोचना गर्ने हक निर्भिकतापूर्वक प्रयोग गर्नुपर्दछ, तर आफूले प्रकाशित गरेको समाचार सत्य र आफ्नो सम्पादकीय विचार सत्य र तथ्यमा आधारित होस् भन्ने कुरामा विशेष सतर्क रहनुपर्दछ ।

(७) पत्रकारहरूको एक विशेष कर्तव्य यो पनि हुनुपर्दछ कि उनीहरूले कुनै पनि सत्य कुरोलाई तोडमोड गरेर अथवा तथ्यलाई दवाएर जनसमक्ष राख्नुहुँदैन । जनतालाई जानाजान भ्रममा पार्ने कोशिस गर्न हुँदैन ।

(८) झूठो भनी थाहा भएको अथवा साँचो भनी विश्वास नगरिएको समाचारलाई प्रकाशित गर्नु पनि पत्रकारले पाप सम्झनु पर्दछ ।

(९) बरू पुष्टि हुन नसकेका समाचार छाप्नु परेको छ भने स्पष्ट शब्दमा पुष्टि नभएको भनी छाप्ने गर्नुपर्दछ, ताकि जनता भ्रममा नपरून ।

(१०) आफूले प्रकाशित गरेको समाचार पछि गएर असत्य अथवा झूठो ठहरियो भने थाहा हुनासाथ भूल सुधार गरिहाल्नु पर्दछ । साथै असत्य समाचारको सुधार, स्पष्टीकरण अथवा खण्डन सम्बन्धित व्यक्ति अथवा समुदायबाट प्राप्त भयो भने त्यसलाई पनि उत्तिकै महत्वका साथ प्रचार गरिदिनु पर्दछ, जतिको पूर्व समाचारलाई गरिएको थियो ।

(११) पत्रकारिता जस्तो महत्वपूर्ण र पवित्र व्यवसायमा कहिल्यै पत्रकारहरूले व्यक्तिगत निजी स्वार्थको प्रभाव पर्न दिन हुँदैन ।

(१२) आफ्नो अखबार बिकाउने अथवा आफ्नो निजी स्वार्थपूर्ति गर्ने उद्देश्यले भए नभएका काल्पनीक समाचारहरू प्रकाशित गरी सनसनी पैदा गर्न, कसैप्रति इर्ष्या द्वेष बमनस्य पैदागर्ने, कलहको बिउ रोप्ने जस्तो घृणित कार्यबाट पनि पत्रकार बिलकुल टाढा रहनु पर्दछ ।

(१३) पत्रकारहरूले आफ्नो व्यवसाय पत्रकारिताप्रति जनताको आस्था, विश्वास, श्रद्धा र मर्यादा प्राप्त गरी त्यसलाई कायम राख्न खोज्नु पर्दछ ।

(१४) आफूलाई विश्वास गरिएको गोप्य कुरा प्रकाश गर्ने समयप्रति इमान्दारी वर्तिनु पर्दछ र अरू अरू गोपनीयताको पनि हरबखत आदर गर्नुपर्दछ ।

(१५) व्यक्ति विशेषको घरायसी अथवा व्यक्तिगत कुरासित सम्बन्धित कुनै हल्ला अथवा रिस इवीले झूठो निन्दा र लान्छना प्रचार गर्नु पत्रकारको निमित्त अशोभनीय विषय हो ।



(१६) आफ्नो व्यापक प्रचारको शक्तिको आधारमा कुनै पत्रकारले कसैलाई डराउने धम्काउने प्रष्ट रूपले अनुचित आर्थिक फायदा उठाउने, व्यक्तिगत स्वार्थ पूर्ति गर्ने गर्नु साह्रै घृणित र अमानुषिक कार्य हो ।

(१७) पत्रकारहरूले आफ्नो पत्र-पत्रिकाहरूमा यौनसम्बन्धी अश्लीलता, कामोत्पादक, जन नैतिकतामा नराम्रो असर पार्ने, अपराध गर्ने भावनालाई प्रोत्साहन दिने किसिमका विज्ञापन छाप्न तथा अरू तरहले प्रकाश हुनु रोक्नु पनि एक विशेष कर्तव्य हुनुपर्दछ ।

(१८) यस सम्बन्धमा अरू नियमहरू आवश्यकतानुसार प्रेस सल्लाहकार समितिले बेला बेलामा बनाउनेछ ।

परिच्छेद १३

## नेपाली पत्रकारिताको संक्षिप्त इतिहास

बितेका ७२ वर्षभित्र नेपालमा तथा बाहिर जन्मेका दैनिक, अर्ध-साप्ताहिक, सातामा तीन पटक प्रकाशित हुने,पाक्षिक,मासिक, द्वैमासिक, अर्ध-वार्षिक तथा वार्षिक प्रकाशन समेत लगभग दुई सय पत्र-पत्रिकाहरू प्रकाशित भएको देखिन्छ। तीमध्ये सवा सय जति काठमाडौंमा, देशका अरू भागमा संभवतः २० ओटा र विदेशबाट चाहिं लगभग ६० ओटा प्रकाशित भए । यसबारे अझै पूर्ण विवरण सहित राम्रो जानकारी हुन सकेको छैन तापनि यीमध्ये समाचार पत्रको दृष्टिले सबभन्दा जेठो आजसम्म प्रचलनमा आएको ५८ वर्षअघि जन्मेको गोरखापत्र नै हो। अखबारहरूको यस लहरमा २४ ओटाजति दैनिक, ३० ओटा अर्ध साप्ताहिक र साप्ताहिक, १० ओटा पाक्षिक, ४० ओटा मासिक र बाकि अरू किसिमका पत्रपत्रिकाहरूका बथान देखिन आएका छन् । अहिले चाहिं देशभित्र र बाहिर गरेर लगभग ५० ओटा पत्रपत्रिकाहरू निस्कँदै छन् । काठमाडौंमा सरकारी स्तरमा दर्ता गरिएका पत्रपत्रिकाहरूको संख्या १३८ सम्म देखिएको छ । तिनमा प्रजातन्त्र अघि पाँचओटा र त्यसपछि १३३ । कुनै कुनै पत्रपत्रिका चाहिं दर्ता नभइकन पनि प्रकाशित भएको छ–जस्को दर्ताको प्रमाण पाईदैन । समस्त पत्रपत्रिकाहरू मध्ये ४ वटा पत्रहरू धरौटी नराखेकोमा बन्द भए । ९८ वटा यी बाहेक अरू चारओटामा सरकारले प्रतिबन्ध लाउनु परे तापनि सर्वोच्च अदालतको निर्णय अनुसार तिनको प्रकाशन पुनः प्रारम्भ भएको देखिन्छ। यसमध्ये एउटा चाहिं सरकारद्वारा बन्द गरिए पछि प्रकाशित भए न ।

१९४३ सालमा मोतिराम भट्टले 'गोरखा भारत जीवन' नामक मासिक पत्रिका काशीमा छापेर हाम्रो पत्रकारिताको जगमा पहिलो ईंट हाले। कृष्णदेव पाण्डेसंग मिलेर उनैले १९५०मा काठमाडौमा पाशुपत छापाखानाको स्थापना गरे। यसै ऐतिहासिक प्रेसबाट १९५५ सालमा 'सुधा सागर' नामक साहित्यिक मासिक पत्रिकाको प्रकाशन भयो। यस पत्रका सम्पादक को थिए भन्ने कुरा यसको कुनै प्रति फेला नपरेकोले किटान गरेर भन्न सकिन्न तापनि यसको प्रकाशनको पुष्टि १९५६ मा पशुपत प्रेसले छापेको 'नलोपाख्यान' भन्ने उपन्यासको भित्री कभरमा उक्त पत्रिकाको प्रचारमा निम्ति छापिएको निम्नलिखित मार्मिक अपिलबाट हुन्छः–

'यो बडो खुशीको बात भयाको छ कि हाम्रो गोर्खा भाषामा पनि ५५ सालका श्रावण महिनादेखिन सुधा सागर भन्या निस्केको छ। जस्मा अनेकौं तरहका बिघ्न आनन्द दिन्या श्लोक कथाहरू समेत हाली प्रकाश हुन्छ, यस्मा हाम्रा गोर्खाली सज्जन महाशयहरूले आफ्नो देश, आफ्नो भाषाको उन्नती निमित्त अवश्य दया दृष्टि गर्नु हुन्य छ। . . . . यो मासिक पत्र तपाईहरूबाट मद्दत नगर्दिनाले कथं कदाचित बन्द भयो, ग्राहक कम भयो भन्या मेरो मात्र नोक्सान पर्न्या होवैन, तपाईहरूलाई पनि केहि शरम हुन जाला। विदेशीहरू पनि यहि भन्नन् कि नेपालबाट एक मासिक पत्र निस्क्याको थियो। सो पनि ग्राहक कम हुनाले बन्द भो। . . . यस फगत एक्लो अनाथ "सुधा सागर" को उपर दया राखी आफ्ना देश, भाषाको उन्नति गर्नु हवस्। तपाईहरू को सदैव हित चिताउन्या मेनेजर पाशुपत प्रेस, ठहिटी आढत नेपाल।"

तिनै ताक काशीबाट ढुण्डिराज ऋषिकेश उपाध्यायको फर्मबाट पं. एम. एस. शर्माको सम्पादकत्वमा "उपन्यास तरंगिणी" भन्ने उपन्यास-प्रधान मासिक पत्रिका निस्क्यो, केही अङ्क मात्र निस्कि यो पनि बन्द भएको बुझिन्छ। यस पत्रिकाको सम्बन्धमा पनि उनै ढुण्डिराज ऋषिकेश द्वारा प्रकाशित "महेन्द्र प्रभा" नामक उपन्यासको जिल्दमा छापिएको निम्न लिखित विज्ञापनबाट मात्र थाहा हुन सकेको छः–

"यो मासिक पत्र लिन्या मानिसले १ सालको कं. रू. २ पठाई ग्राहकको श्रेणीमा नाम दर्ज गराउनु पर्छ। यो मासिक पत्रिकाका १ सालमा १२ अङ्क हुन्छन्। सो अङ्क १२ पेजी ५ फर्मा ६० पृष्ठको हुन्छ। १।१ अङ्क प्रतिमास प्रकाश हुन्छ यस पत्रिकामा नाना तरहका उपन्यासहरू प्रकाश हुन्या छन्, यस्तो अमूल्य मासिक पत्रिकाको दाम पनि बहुत कम अर्थात् १ सालको कं. रू. २, मात्र छ। यदि यो पत्रिका लिन्याँ इरादा नभया मलाई यो पत्रिका लिई गोर्खा भाषाको उन्नति गर्नु क्यै सरोकार छैन, भन्या जवाब कार्डद्वारा सूचना गर्दिनु होला। नत्र भन्या द्वितीय अङ्क तपाईकानाममा भीपी. भैजान्या छ, शुभम् (तपाईको ढुण्डिराज ऋषिकेश उपाध्याय)

१९०८ सालतिर नै जङ्ग बहादुरद्वारा नेपालमा पहिलो हाते प्रेस (गिद्धे प्रेस) ल्याइयो र त्यस पछि १९५० सालसम्ममा फाटफुट अरू २।३ प्रेसहरू पनि भए । यसै बीचमा पाशुपत प्रेसबाट १९५५ सालमा "सुधा सागर" नामक साहित्यिक पत्रिका निस्के तापनि नेपालमा हाते प्रेस उत्रेको ४२ वर्ष पछि मात्र देव शम्शेरको सदिच्छाले त्यै पाशुपत प्रेसबाट १९५८ साल वैशाख २४ गते पहिलो समाचार पत्र साप्ताहिक गोरखापत्रको प्रकाशन प्रारम्भ भए देखि नेपाल भित्र पनि पत्रकारिताको ईतिहास प्रारम्भ भयो ।

अखवारी जगतको ऐतिहासिक पृष्ठभूमिमा प्रमुख सहायक तिनताकका छापाखानाहरूका सम्बन्धमा केही लेखिनु अप्रासंगिक हुने छैन ।

१९१९ सालमा मनोरञ्जन प्रेसबाट संस्कृतमा "मोक्ष-सिद्धि" नामक पुस्तक रणोद्दीपको सुपरीण्टेण्डेण्टमा केदारनरसिंहद्वारा छापियो । त्यसपछि १९२७ मा प्रोपाइटर



कम्याण्डर इनचीफ रणोद्दीपको मर्जी मुताबिक कप्तान बिजय जङ्ग पाण्डे क्षत्रिणा शोधितः तत् अक्षर बिन्यासी डिठ्ठा बीर बहादुर भन्ने लेखिएको ऐनको किताब छापियो । यसबाट उक्तः मनोरञ्जन प्रेसले सरकारी तथा गैर सरकारी दुवै काम गरेको देखिन्छ । समयका दृष्टिले सिमित साधनहरूका बीच त्यस प्रेसले १०।१२ साइजको १२ सय पेजी ठेली पुस्तक निकाल्न सक्नु वास्तवमा प्रशंसनिय र महत्वपूर्ण कुरो हो ।

त्यसपछि दोस्रो प्रेस नारायणहिटी छापाखानामा १९३३ मा मुद्रित कवाज सम्बन्धी एउटा पुस्तक भेटिएको छ । त्यसपछि चाहिं बसन्तपुर जङ्गी लिथो ग्राफी छापाखानामा १९४६ तिर मुद्रित कवाज सम्बन्धी अर्को एउटा पुस्तक भेटिएको छ ।

सरकारसंग भएका गोरखापत्र छापाखाना सम्बन्धी सनद सवालहरू हेर्दा तिनताक अथवा केही अघिदेखि सरकारको टिकट अड्डा नामक एउटा छापाखाना भएको बुझिन्छ । यसबाट सरकारी टिकट लिफाहरू त्यसै प्रेसमा छापिने कुरो सिद्ध हुन्छ ।

एक वर्षभित्रै यस प्रेसले २।३ वटा ठाउँ फेर्‍यो । यै अनुपातले यसको नाम पनि क्रमशः "गोरखा पत्र जङ्गी लिथो–छापाखाना"(श्रावण १९५६), "टाइप छापाखाना"(भाद्र १९५६) र पछि फेरि केवल छापाखाना भएको देखिन्छ । गोरखापत्र तथा अरू प्रकाशनहरूको लगत छुट्टै परिशिष्टमा दर्शाएको छ ।

गोरखापत्र निस्केको केही महीना पछि नै दार्जिलिङ्गको गोरखा प्रेसबाट पादरी गङ्गाप्रसाद प्रधानको सम्पादकत्वमा निस्केको गोर्खे खबर कागतले ४० वर्षसम्म जनता र भाषाको सेवा गर्‍यो। उता बनारसबाट चाहिं १९६३ मा सर्वश्री देवीदत्त पराजुली, चक्रपाणी चालिसे तथा सोमनाथ सिग्देलहरूको रसिक समाज नामक साहित्यिक मण्डलीले "सुन्दरी" भन्ने प्रधान मासिक पत्रिका निकाले । बिद्यार्थीहरूको सिमित साधनले नभ्याउँदा पछि यसको सञ्चालन विश्वराज हरिहर शर्माको फर्मद्वारा भए तापनि यो धेरै चलेन । त्यसपछि मागृप्रसाद शर्मा अधिकारीको छद्म नाम राखी पं. राममणी आदीले प्रभाकरी कम्पनीबाट गद्य पद्यात्मक "माधवी" मासिक पत्रिका निकालेका थिए। आर्थिक संकट नभए तापनि राणा दरबारी दवावले गर्दा ८ महिनासम्म मात्र चलेर यो पनि बन्द भयो।१९७१ मा बाबु माधवप्रसादले 'चन्द्र' भन्ने सचित्र मासिक पत्रिका निकाले । यसका १२ अङ्क हरू नियमित रूपले प्रकाशित भएको देखिन्छ । यसपछि १९७२ को आश्विन ११ गते देखि उनै माधवप्रसादद्वारा मुद्रित तथा सूर्यबिक्रम ज्ञवालीद्वारा प्रकाशित साप्ताहिक "गोर्खाली" देखा पर्‍यो र एक वर्ष जति राम्रैसंग चल्यो । त्यसपछि यस पत्रिकाले गरेको निवेदन यस प्रकार छः–

"तपाईहरूको गोर्खाली सेवक ११ महीनाको लागिसक्यो, तल माथि २।१२ दाँत उम्रे, घुंडा टेकी राम्रै हिंड्न लाग्यो तर अझसम्म उभिन समर्थ भएको छैन । उभियोस् यो कसरी ? पुष्टकारी औषधीहरू केही खान पाएको भए शरीरमा बल आई खुट्टा टेकी अरू साथीहरूको

सहभागी भैं खेल्न कुद्न सक्ने थियो। तर अफसोच ! पुष्टकारी ता परै रहोस् बेलामा पेट भरी दूध खान पनि पाउँदैन, माता पिता श्रीमान् ऐश्वर्यमान भएर पनि "गोर्खाली" लाई दुर्बलदेखि साथीहरू आश्चर्य र निन्दाको दृष्टिले गरेको छेडछाडको पीर पनि सहन परिरहेकोछ ।"

यसरी जिनतीन १५।१६ महिना टुट्टा सहेर चलाउँदै माधव प्रसादजीले पनि यसलाई छाडे। जो नेपाल ट्रेडिङ्ग एण्ड पब्लिसिंग कंपनीका निम्ति मणिसिंह गुरूङ्गले यसको अभिभारा बोकी हिमालय प्रेस, पञ्चगङ्गामा छपाउन थाले। यसरी चलाउन थाल्दा यसको नाउँ गोरखाली नै रहे तापनि यसको रजिष्टर्ड नम्बर फेरिई संख्या एकदेखि नै शुरू गर्न परेको देखिन्छ। त्यसपछि ७४ सालको पौष महिनामा खर्साङ्गबाट "चन्द्रीका" निस्कन थाल्यो। प्रवासका नेपाली भाषीहरूमा चेतना युक्त साहित्यसंग संगै व्याकरणको थिति बसाल्नमा गोरखालीको साथै "चन्द्रीका" को पनि ठूलो स्थान छ। जेष्ठ १९७९ मा काशीबाट श्री सूर्यबिक्रमको सम्पादकत्वमा "जन्मभूमि" (मासिक) निस्क्यो। नेपाली जस्तै नेवारीको पहिलो पत्रिका पनि प्रवासबाटै निस्कियो। १९८२ मा कलकत्ताबाट श्री धर्मादित्य धर्माचार्यका सम्पादकत्वमा धार्मिक र सांस्कृतिक पत्रिका "बुद्ध धर्म" (मासिक) निस्कियो।

१९८३ मा ठाकुर चन्दन सिंहले नेपालीहरूका निम्ति अंग्रेजीमा पहिलो पटक "हिमालय टाइम्स" भन्ने साप्ताहिक पत्र देहरादूनबाट निकाले। त्यस संगसंगै उनैको सम्पादकत्वमा नेपालीमा साप्ताहिक "गोरखा संसार" पनि निस्क्यो। दुई वर्षसम्म चलेर "गोरखा संसार" बन्द भो र त्यसपछि लगतै साप्ताहिक "तरुण गोरखा" को प्रकाशन उनै ठाकुर चन्दन सिंहले शुरू गरे। दुई वर्षजति चलेर यो पनि बन्द भयो।

१९८३ चैत्र कृष्ण ११ (२८ मार्च १९२७) का दिन आशु कवि शम्भु प्रसाद उपाध्यायको सम्पादकत्वमा साप्ताहिक "राजभक्ति" निस्क्यो। यस्को पनि धेरै प्रतिहरू फेला नपरेकोले धेरै दिन चलेको बुझिन्न। बाँचुन्जेल यो निकै गहकिलो थियो। १९८५ मा नेवारी भाषामा श्री धर्मादित्यकै सम्पादकत्वमा "बुद्धधर्म व नेपालभाषा" नामक दुई भागमा विभाजीत धार्मिक र साहित्यिक पत्रिकाको प्रकाशन भयो।

१९९१ को माघ महिनामा दार्जिलिङ्गबाट श्री कु. डी. प्रधान, बि. ए. को सम्पादकत्वमा "नेबुला" (नेपाली, भोटे र लाप्चेहरूको मासिक पत्र) निस्क्यो। त्यसको एकै महिनापछि फागुनमा जोरगणेश प्रेस काठमाडौंबाट श्री ऋद्धिबहादुर मल्लको सम्पादकत्वमा "शारदा" निस्क्यो। प्रौढ साहित्यिकहरूको कृतिलाई जनसाधारणसम्म परिचित गराउन तथा सिकारु लेखकहरूलाई प्रोत्साहन गर्नमा दुवैको महत्वपूर्ण योग छ।

१९९२ को भाद्र महिनामा सूर्यभक्त जोशीद्वारा भगवती प्रेस ठहिटीबाट पाक्षिक पत्र "उद्योग" निस्क्यो। त्यै वर्षको पुस महिनामा शिलागबाट मणिसिंह गुरुङको सम्पादकत्वमा साप्ताहिक "गोरखा सेवक" निस्कन थाल्यो। त्यसको ठीक एक वर्षपछि १९९३ माघ महिनामा काशीबहादुर श्रेष्ठको सम्पादकत्वमा काशीबाट "उदय" भन्ने एउटा अर्को मासिक पत्र प्रकाशित



यो। त्यै माघमा "नेबुला" बिलाएर दार्जिलिङ्गमा उही सिलसिलामा "परिवर्तन" निस्क्यो। कारिताको यो उत्साहपूर्ण रहरले नारी जनतालाई पनि प्रभावित पार्यो। फलस्वरुप १९९७ सालतिर श्रीमती मोतीदेवीको सञ्चालनमा काशीबाट "सर्वहितैषी" भन्ने पत्र निस्कन थाल्यो। त्यसकोपाँच वर्षपछि २००२ सालदेखि कालिंगपोङ्गबाट अखिल भारत गोरखा लीगको मुखपत्रको रुपमा "गोरखा" छापिन थाल्यो। २००४ साल बैशाखमा काठमाडौंबाट श्री हृदयचन्द्र सिंहको सम्पादकत्वमा "साहित्य स्रोत" निस्क्यो।

त्यही वर्ष काशीबाट नारायण प्रसाद उपाध्यायको सम्पादनमा साप्ताहिक "युगवाणी" प्रकाशित हुन थाल्यो। धरमराउदै पुग नपुग पाँच वर्षसम्म चलेर यो पनि बन्द भयो। नेवारी मा २००४ मा "धर्मोदय" मासिक कालिंगपोङ्गबाट प्रकाशित भएपछि कलकत्तामा सरेर उहींबाट छापिंदैछ। २००५ सालमा कलकत्ताबाट पनि "नेपाल पुकार" को प्रकाशन हुन थाल्यो। २००७ साल पछि बीचमा केही दिन पटनामा पनि छापिएर हाल यसको प्रकाशन काठमाडौंबाट हुँदैछ। २००६ मा पं. बुद्धिसागर र शेषराजको सम्पादकत्वमा मासिक "पुरुषार्थ" २ वर्षसम्म निस्केर बन्द भयो। (२००६ साल) जुलाई १९५१ मा श्री टी. मानन् द्वारा "साथी" भन्ने साप्ताहिक पत्रिका दार्जिलिङ्गमा निस्क्यो। लगभग २ वर्ष निस्केर यो पनि बन्द भयो।

२००६ को असार महिनादेखि दार्जिलिङ्गबाट पारसमणी प्रधानको सम्पादकत्वमा "भारती" निस्क्यो, जो अबतक पनि चल्दैछ। २००८ मा कलकत्ताबाट श्री लैनसिंह बाङ्गदेलको सञ्चालनमा "प्रभात" नामक एउटा अर्को मासिक पत्रिका निस्कन थाल्यो।

७२ वर्षअघि प्रवासमै मासिक पत्रिकाको रुपमा जन्मेर त्यसको १२ वर्षपछि अर्को नाउँ र अर्कै रुपले नेपालको माटोमा भिज्न पाएको नेपाली पत्रकारिताले किसिम किसिमको दिन देख्नु पर्यो। नेपालीहरूले अवाद दार्जिलिङ्ग, देहरादून, काशी र शिलांग तथा बर्मा पनि नेपाली पत्रकारिताको उत्थानमा समयानुसार निकै सहायक भएको देखिन्छ। विदेशमा भएकोले नेपालको तत्कालिन राजनैतिक व्यवस्था को मारबाट बचेर त्यताको नेपाली युवकहरूले अलिकति भए पनि खुलेर लेख्न पाएको देखिन्छ। हुन त पौने एक सयवर्ष अघिदेखि आजसम्म नेपाली पत्रकारिताले हुर्कन नसकेको मुख्य कारण आर्थिक स्थिति नै हो। तर पनि तत्काल नै राजनैतिक व्यवस्थाको मारमा नपरेका भए अथवा पत्रकारितापट्टि सर्वसाधारणको अभिरुची अलिकति भएपनि हुर्केको भए तीमध्ये कुनै न कुनै त अवश्य फष्टाउने थिए।

स्वदेशमा होस् अथवा प्रवासमा हाम्रो शैक्षिक स्तर सामाजिक र राजनैतिक चेतना झण्डै झण्डै उस्तै भएकोले दुवै माटोमा अघि जन्मेका प्रायशः धेरैजसो पत्रपत्रिकाहरूको शैशवावस्थाको आर्थिक स्थिति, पुस्तक र औषधीहरूको विज्ञापन तथा उपन्यासहरूको धाराबाहिक प्रकाशन नै आधारित देखिन्छ।

सावगासले भेटुन्जेल भारततिर जेनतेन निस्केकाहरूमध्ये समुद्र लहरी, प्रेम लहरी जस्ता तल्लो स्तरका प्रेम गाथाहरूदेखि लिएर रामायण र महाभारत जस्ता धार्मिक ग्रन्थहरू

र पेटेण्ट औषधीहरूको विज्ञापन छापेर धमिलो सामाजिक सद्भावनाको भरमा पनि केही नेपाली पत्रपत्रिकाहरू अलि दिन बाँचे । बेला संगसंगै केही मात्रामा भए पनि विभिन्न क्षेत्रको चेतनाको प्रभाव बढ्दै गयो । जाग्रत युवकहरूको अन्तरनिहित आकांक्षा कलमको टुप्पोबाट झर्न थाल्यो । तर तत्कालिन सरकारी सद्भावना तथा जन जागृतिको अभावमा त्यस्ता पत्र-पत्रिकाहरूले सिद्धिनु पर्‍यो ।

साहित्यिक सृजनाले उत्प्रेरित भएर मुलुकभित्र र बाहिर निस्केका २।४ वटा पत्रिकाहरू आर्थिक रीढ बलियो नभएकोले धेरै दिन टिकेको देखिएनन् । राजनीतिकबाट जोगाउनको साथसाथै साहित्यिक सृजना सहायक देखिएला कि भनेर तत्कालिन सरकारद्वारा प्रदत्त नाम मात्रको सहायताको भरमा भएपनि केही पत्रिकाहरूको धुकधुके सास २।४ वर्षसम्म चल्यो । तर मुलुकभित्रका त्यस्ता पत्र-पत्रिकाहरूको पाण्डुलिपि छापिनुभन्दा अघिनै सेन्सरद्वारा केलाइन्थ्यो ।

बाहिरबाट आउने पत्र-पत्रिका पोष्ट अफिसमै सेन्सर गरिन्थे । यस्तो विषम परिस्थितिमा चारैतिर भएको राजनैतिक चेतनालाई सकभर आफ्नो पत्रिकामा नै नदेखाएर आकांक्षा र विवशताको अपठ्यारो सम्बन्धमा प्रयत्नशील लेखक र पत्रकारहरूको कृति पनि प्रत्यक्ष वा अप्रत्यक्ष रूपमा साहित्यिक सृजनाको साथसाथै राजनैतिक चेतनाको प्रसारमा पर्याप्त सहायक भयो ।

समर्थ शासकको त्यो प्रवृत्ति भए तापनि बेला बेलामा देशभक्त पत्रकारहरू सके स्वदेशमै अपरोक्ष रूपमा अथवा विदेशबाट निस्केका पत्रिकाहरूमा खुलेयाम शासन पद्धतिलाई चुनौति दिएर परिवर्तनको बिगुल बजाउनमा पछि परेनन् ।

२००७ सालको महान् परिवर्तनपछि नेपाली पत्रकारिताले पनि अर्कै कोल्टो लियो । सर्वप्रथम साप्ताहिक 'जागरण' प्रकाशन भयो । यसका सम्पादकहरू थिए– श्री हृदयचन्द्र र केदारनाथ न्यौपाने । जम्मा ३६ अङ्क निस्केर यो बन्द भए तापनि आफ्नो अल्पजीवनमै यसले नेपाली पत्रकारितामा एउटा नयाँपन ल्यायो । 'हिमालयको हरियो हिउ' भन्ने यसको स्तम्भ निकै व्यंग्यात्मक हुन्थ्यो 'जागरण' निस्केको ३ दिनपछि नेपालको पहिलो दैनिक पत्र "आवाज" फाल्गुन ८ गते श्री सिद्धिचरण तथा गोविन्दबहादुर मल्लको सप्पादकत्वमा जोरगणेश प्रेसबाट निस्केर कतिपय कारणले गर्दा डेढ वर्ष चलेर बन्द भयो । त्यसपछि केही महिनासम्म कुनै नयाँ अखबार निस्केन । अनि श्री मणिराजको सम्पादकत्वमा हिन्दीको "सही रास्ता" निस्क्यो । त्यसपछि पुष्करनाथको सम्पादकत्वमा नेपाली 'दैनिक समाचार', मणिराजजीको 'समाज', शङ्करनाथ शर्माद्वार' "नेपाल समाचार", श्री फत्तेबहादुरको सम्पादकत्वमा नेवारको 'नेपाल भाषा' पत्रिका, श्री गोपालदासद्वारा अंग्रेजी 'कमनर', श्री माणिकलालको सम्पादकत्वमा 'समय', श्री दातारामको सम्पादकत्वमा 'हालखबर', श्री तारणी प्रसाद कोइरालाको सम्पादनमा 'दियालो' दिल्लीबहादुरद्वारा 'गोरेटो' श्री मङ्गलमानद्वारा 'भूगोलपार्क' श्री पशुपतिदेव पाण्डेको सम्पादनमा 'नयाँ समाज' श्री मणीन्द्रराज श्रेष्ठद्वारा 'मदरल्याण्ड' श्री योगेन्द्रराज अ रद्वारा 'जनमत' फेरि श्री तारिणी-



प्रसादद्वारानै क्रमशः 'उज्यालो' तथा 'कल्पना' श्री धनुषचन्द्र गौतमद्वारा 'बाछिटा', ललितपुरबाट श्री सागरकुमारद्वारा 'प्रवक्ता', श्री रामसिंहको सम्पादकत्वमा हिन्दीको नेपाल टाइम्स, श्री हरिचरण श्रेष्ठको सम्पादकत्वमा 'एभरेष्ट न्यूज', श्री जनकमान श्रेष्ठद्वारा 'सही शन्देश' विराटनगरबाट श्री राजेन्द्र प्रसाद नेपालद्वारा 'फिलिङ्गो' तथा साप्ताहिकहमा श्री सत्यनारायणबहादुरद्वारा अंग्रेजीको 'नेपाल टूडे' आदिको प्रकाशन भयो । साथै 'राष्ट्रवाणी' 'खसोखास' 'प्रजातन्त्र' 'छाप्रो' 'झिल्को' 'रांको' 'हुरी' र 'आंधि' आदि अनेक पत्रिकाहरू निस्के । २००६ सालमा आशाराम शाक्यको सम्पादकत्वमा नेवारीको पाक्षिक 'पासा' नामक साहित्यिक पत्रिका निस्क्यो । २०१४ मा यो पत्र केही समय दैनिक भएर पछि कतिपय बाधाहरूले गर्दा बन्द भयो । २००७ पछि परिवर्तन संगसंगै स्वाभाविक रूपमा आउने स्वच्छन्दता र फुक्कापन पनि अखबारी जगतमा देखिन थाल्यो । राजनैतिक परिवर्तनले ल्याएको नयाँ युग हुनाले आफ्नो दलगत विचारधाराले नेपाल नै भिजाउला भन्ने निहित अभिप्रायले पनि केही अखबारहरू देखा परे । तर अखबारी जगतको सीमा त्यती मात्र थिएन । साहित्यिक पत्रिकाहरूमध्ये २००७ सालमा साप्ताहिक 'जागरण' जन्म्यो, त्यही बेला लैनसिंह बाग्देलद्वारा कलकत्ताबाट 'प्रभात' भन्ने मासिक पत्रिका निस्कियो । १ वर्षपछि वीरगञ्जबाट श्यामप्रसादको सम्पादकत्वमा प्रकाशित 'सेवा' नामक मासिक पत्रिकाले पनि जनताको निकै सेवा गर्‍यो । त्यसको फेरि १ वर्ष पछि २०१० सालमा साहित्यिक दृष्टिले निकै गहकिलो द्वैमासिक 'प्रगति' कोपुण्डोल ललितपुरबाट श्री नारायणप्रसाद बाँसकोटाको सम्पादत्वकमा निस्कन थाल्यो । यसै गरी 'प्रभात' 'भारती' 'गोरखा' परोपकार 'शान्ति' 'धरती' र 'इन्द्रेणी' ले आफ्नो आफ्नो सावागाँसले भेटुन्जेल पत्रकारिताको साहित्यिक क्षेत्रलाई बेला बेलामा सिगारेको देखिन्छ ।

आर्थिक अप्ठ्यारो, घरायसी घच्चा अनिश्चित वातावरण र सहयोगीहरूको कमीमध्ये कुनै अथवा सबै किसिमको अल्झो परे पनि पत्रकारिताको पवित्र लगनबाट विचलित नभइकन कुनै न कुनै रूपमा आफ्नो पत्रको प्रकाशन कायम राख्न कैयौं पत्रकारहरू कसिएका देखिए ।

### सरकारी पत्र-पत्रिकाहरू

वर्तमान सरकारी प्रेस नारायणहिटी, थापाथली, बसन्तपुर, नक्साल आदि ठाउँमा क्रमशः सर्दै 'गोरखापत्र छापाखानाको' नामले हातल जुद्धसडक नजिक पाकोमा स्थापित छ । यसैमा सरकारी 'गोरखापत्र', नेपाल गजेट' 'ऐन', 'लिफा, फार्म' केही टिकटहरू र अरू विभिन्न किसिमका सरकारी कागजातहरू छापिन्छन् ।

नेपाली पत्रकारिताको इतिहासमा 'गोरखापत्र' महत्वपूर्ण विभिन्न दृष्टिकोणबाट सर्वोन्मुखी छ । १९५८ साल बैशाख २४ गतेदेखि यसले अविच्छिन्न रुपमा राष्ट्रको सेवा गर्दै आएको छ । प्रारम्भमा लगभग १ वर्षसम्म यो सरकारी नियन्त्रणमै प्रकाशित भए तापनि पूर्णतया सरकारी संम्पत्ति थिएन । छिमेकी देशका देशीय भाषाहरूमा पनि फाटफुट अखबारहरू भएको बेलामा नेपालमा यस किसिमको अखबार निस्कनु एउटा महत्वपूर्ण कुरा मात्र हैन कि

समय सुहाउँदो कदम पनि भन्न सकिन्छ । यसका जन्मदाता तत्कालीन प्रधान मन्त्री देवशम्शेर तथा प्रारम्भिक अवस्थामा यसलाई सुचारु रूपले चलाउने बझाङ्गी राजा जय पृथ्वीबहादुर सिंह, यसका पहिला नेपाली एडिटर श्री चिरन्जीवी शर्माहरूको यसमा विशेष योग देखिन्छ ।

आफ्नो शैशवास्थामा नै १० वर्षभित्र १५।२० ओटा जति ठूलठूला उपन्यासहरू धारावाही रूपमा छापेर यसले साहित्यिक क्षेत्रमा पनि निक्कै सेवा गरेको र क्रमशः आफ्नु गतिविधि उठाउँदै र फस्टाउँदै लान नसके पनि बीचबीचमा आइपरेका खुकुलो समय जस्तै देवशम्शेर, पद्मशम्शेर तथा प्रजातन्त्र पछिको शासन व्यवस्थामा यसले अलि फुकेर लेखेको देखिन्छ ।

१९५८ सालमा साप्ताहिक पत्रको रूपमा जन्मेर २००२ सालमा ४० वर्षकोउमेरमा बल्ल यो अर्ध-साप्ताहिक तथा त्यसको एक वर्ष पछि नै यो साप्ताहमा तीन पटक प्रकाशित हुन थाल्यो । कुनै समयमा यसका पाँच प्रति मात्र छापिए । कहिले चाहिं त्यो संख्या ६ हजारसम्म पनि पुग्यो, त्यसपछि फेरि घटेर अहिले यो लगभग ३६०० जति छापिन्छ ।

गोरखापत्रको साथै सोझै सरकारकै नियन्त्रणमा अथवा अर्ध निरिक्षणमा पनि केही पत्रिकाहरू निस्के ती मध्ये आषाढ २००२ मा निस्केको मासिक 'जागृति, ११ अङ्क जति निस्केर बन्द भयो । २००४ ज्येष्ठमा मासिक 'घरेलु इलम प्रचारक'को दुई वर्षसम्म नेपाली कागजमै, दुई वर्ष जति लिथोमा तथा पछि लेटर प्रेसमै लगभग ५ वर्ष जति बाँचेर अनि मृत्यु भयो । २००४ मार्गमा काठमाडौं 'म्यूनिसिपल पत्र' निस्क्यो। त्यसपछि उक्त नगरपालिकाले नै 'जन चेतना' निकाल्यो । २००५ मा निस्केको पाक्षिक 'शिक्षा समाचार' लगभग एक वर्ष चलेर बन्द भयो । यसका अतिरिक्त 'आधार शिक्षा' पनि प्रकाशित भयो । २००५ आश्विनमा निस्केको 'नेपाल शिक्षा' लगभग तीन वर्ष चलेर बन्द भो । अनि यता विगत २ वर्षदेखि कलेज अफ् एजुकेशनबाट अंग्रेजीमा क्वाटरली म्यागिजन तथा नेपालीमा 'नवीन शिक्षा' (मासिक) पनि निस्कंदैछ । विगत फागुन ७ गतेदेखि पञ्चायत गोश्वाराद्वारा 'पञ्चायत नाम' मासिक पत्रिका प्रकाशित गरिएको छ।

यी बाहेक स्थानीय प्रशाशन सम्बन्धी संस्थाहरूको सञ्चालनमा पनि केही पत्रिकाहरू निस्के । यसैगरी सरकारी तथा गैर सरकारी स्कूलहरूद्वारा 'आँखा' नाम मासिक पत्रिका पनि निकालियो ।

सरकारी छापाखानाको स्थिति तथा यस प्रतिको सुधारबाट पत्रकारितमा सहयोगः-

आपनो लगभग ९० वर्षको उमेरमा आजको गोरखापत्र छापाखानाले बसन्तपुर, थापाथली, नारायणहिटी, नक्साल तथा अहिले फेरि जुद्धसडकनिर सरेर त्यै अनुपातमा आफ्नो नाम समेत फेरेको देखिन्छ ।

जङ्गबहादुरका समयमा सम्पत्तीको नाउँमा एउटा गिद्धे प्रेसबाट प्रारम्भ गरिएको गोरखापत्र छापाखाना आज फ्ल्याट, हाते तथा प्लाटेन समेत एक दर्जन प्रेसहरू, एउटा सानो ब्लक विभाग तथा थोरबहुत प्रेससम्बन्धी मालहरू छन् ।

---

नोटः- पत्रपत्रिकाको गतिविधिको विवरण विशेषतः श्री कमलमणी मदनपुरस्कार पुस्तकालयको सौजन्यबाट प्राप्त ।



हालै श्री ५ को सरकारद्वारा ल्याइएका ३ वटा मेशिन १० हजार जत्तिको टाइप र प्रेससम्बन्धी अरू केही मालहरू बाहेक यसका अरू मेशिनहरू आफ्नो पुरानोपनले गर्दा उति उपयोगी छैनन्- जसको प्रतिक्रियाको छाप यसबाट हुने प्रकाशन जस्तै गोरखापत्र, नेपाल गजेट, ऐन इत्यादि अस्पष्ट अक्षर बेसाइजको छाटकांट सबैको अगाडि प्रत्यक्ष छ ।

गोरखापत्र, गजेट, ऐन, अड्डाका फारामहरू तथा सरकारी प्रकाशनहरू वर्षमा लगभग २० टन देशिकागत तथा २ लाख ताउ नेपाली कागत यसले छाप्तछ । पुरानो प्रेस तथा नेपाली कागत दुबै टाइपका निम्ति अनुपयुक्त हुनाले र आफ्नो टाइपको व्यवस्था समेत नभएकोले गोरखापत्र छापाखानामा छापिने प्रकाशनहरू कहिलेकांही पढ्न समेत सकिन्न ।

गोरखापत्र छापाखानामा भएका पुरानो मेशिनहरू मध्ये गिद्धे प्रेसलाई म्यूजियममा राखी अरू पुराना प्रेसलाई चाहिं लीलाम गर्ने हो भने विभिन्न कारणले खापाखाना उतार्न नसक्नेहरूले यस व्यवसायमा उन्नति गर्न पाउँदा भरखर आँकुरा हाल्न थालेको नेपाली पत्रकारिताको विकासमा मद्दत हुनेछ । साथै अरूको दाँजोमा सम्पन्न सरकार सरकारी स्तरमा सुहाउँदो छांटले युग अनुसारका नयाँमेशिनहरू राखेर जन सेवामा समेत सफल हुनेछ ।

साना ठूला जस्तो भए पनि २०।२५ ओटा छापाखाना भएका राजधानीमा प्रेससम्बन्धी कुनै कारखाना छैन । सरकारले आफ्नो छापाखानाका मेशिनहरूको संरक्षणका निम्ति चांहिदो संख्यामा दक्ष कालीगड र १०।१५ हजारसम्मका औजारहरू सहित एउटा सानो कारखाना राख्ने हो भने यसैबाट सरकार र जनता सबैलाई मद्दत हुनेछ ।

रोलर कम्पोजीशनको राम्रो व्यवस्था नहुँदा राजधानीका कतिपय प्रेसहरूलाई अप्ठचारो परेको छ । आफूलाई पनि चाहिने हुनाले अरूको समेत आवश्यकता पूर्ति हुने गरेर सरकार छापाखानामा रोलर निर्माणको प्रबन्ध हुने हो भने यसबाट सरकार र जनता दुबैको भलो हुनेछ । अनाहकमा विदेशीने सम्पत्ति मुलुकमै रहनेछ ।

एउटा सानो टाइप फाउण्डरीको पनि जति आवश्यक देखिन आएको छ, जसको अभावले केही अक्षरको निमित्त पनि विदेशको मुख ताक्नु परिरहेको र कुनै कारण बश त्यो पनि प्राप्त हुन नसकेमा मुठीभरी अक्षरको अभावले कत्रै छापाखाना किन नहोस् कैयौं दिन लंगडिएर त्यसै थन्केका प्राय सबैले जानेका कुरा हो । पूंजीको अभावमा सर्ब साधारणको निम्ति यो व्यवसाय सानै नै भए तापनि अहिले ठूलो हुन गएको छ । अहिले भएका कुनै प्रेसहरूमा कदाचित नै यति पूंजी लगाउने अवस्था अथवा आंट होला । तसर्थ सरकारद्वारा एउटा टाइप फाउण्डरी गोरखापत्र छापाखानाकै अन्तर्गत राखिने हो भने राजधानीमा बर्सिनै चाहिने लगभग आधा लाख रुपियाँको टाइप यहाँ बन्नेछ र अन्ततोगत्वा यसबाट राष्ट्रिय व्यवसायको साथसाथै राष्ट्रिय आयको समेत वृद्धि हुनेछ ।

हुनत गोरखापत्र छापाखानाको माथिल्लो तलाको छतमा ब्लक विषयमा केही सामानहरू निरीक्षणमा दृष्टिगोचर हुन आएका थिए, तर ब्लक विभागको अवस्था सन्तोषजनक छैन । हाल गोरखापत्र छापाखानामा भएको ब्लक विभाग मृतवस्थामा देखियो । आकलझुकल वर्षको २।४ पल्ट गोरखापत्रमा यसका कृतिहरू देखा परे पनि कतिपय कारणहरूले गर्दा यसबाट न सरकारको फाइदा भएको छ न जनताको, ब्लक विषयमा यस्तो अवस्था हुनुबहुत दुःखको विषय हो यस को तुरून्त सुव्यवस्था हुनपर्दछ र सरकारी तथा गैर सरकारी प्रकाशनको माग पूर्ति हुन पर्दछ । यसले राष्ट्रिय मुद्रणको स्तर उक्लनेछ र यसबाट अवश्य नै देशको भलो हुनेछ।

गोरखापत्र छापाखाना अव्यवस्थित छांटसंग सांगुरो ठाउँमा कोचिएका मालसामानहरूको समेत उचित संरक्षण नहुँदा तिनको आवश्यक उपयोग पनि हुन सकेको छैन तसर्थ सरकारी छापाखाना भन्ने सुहाँउदो तथा आधुनिक मुद्रण यन्त्रहरू राख्न उपयुक्त एउटा स्थानको प्रबन्ध हुनु पनि आवश्यक देखिन्छ ।

परिच्छेद–१४

## पत्रकार संघ र संस्थानहरू

नेपालको हुर्कंदो पत्रकारितासंग पत्रकार संघहरूको अस्तित्व पनि स्वभाविक रुपले कायम हुन आएको छ। अहिले नेपालमा दुई पत्रकार संगठनहरू छन्। (१) नेपाल जोर्नालिष्ट्स एशोसिएसन र (२) नेपाल यूनियन अफ जोर्नालिष्ट्स । पत्रकारिता नेपालको राजधानीमा केन्द्रित भए झैं यी दुवै संघहरू पनि काठमाडौं मै केन्द्रित छन् । यिनीहरूको क्रियाकलाप पनि यसरी दुई वटा पत्रकार संघहरू भएतापनि पत्रकार जगत्मा यिनको विशेष केही चहल पहल देखिन्न । तर, तैपनि बेला बलामा आइपरेका समस्याहरू समाधान गर्न यी संघहरू प्रयत्नशील भएका देखिन्छन् । आफ्नो सिमित क्षेत्र र साधनभित्र यिनीहरूले जे जति पनि गर्न सकेका छन्, त्यसलाई सराहनीय नै भन्न सकिन्छ, तथापि यो भन्नु अत्युक्ति हुनेछैन कि यी संघहरूले एक ठोस रुप लिन सकेका छैनन् । पत्रकार जगत्ले तथा 'पत्रकार' भन्ने पेशाले नै अहिलेसम्म एक विशिष्ट रुपलिन नसकेको हुँदा, त्यसको छायां पत्रकार संघहरू मा पनि पर्नु स्वाभाविक छ । 'पत्रकार' भन्ने शब्दले नै एक विशिष्ट व्याख्या र पेशाको रुप नलिउन्जेल यो अवस्था भइरहनु अत्यन्त स्वभाविक छ । अखबार खुल्ने र एकाएक बन्द हुने धेरै जसो पत्रपत्रिकाहरू एक एक व्यक्ति अथवा एक सीमित ग्रूपका व्यक्तिहरूद्वारा सञ्चालित भइरहेको हुँदा र पत्रकारिताले एक पेशाको रुप नलिसकेको हुँदा यी संघहरूका सदस्यता समेत पनि अनिश्चित रहेको छ । कसैले आज पत्रिका प्रकाशन गर्न थालेको छ भने त्यो पत्रिका सञ्चालन गर्ने व्यक्ति एक वा अर्को संघको सदस्य बन्दछ, र पत्रिकाको प्रकाशनको अन्त संगसंगै सदस्यताबाट आफ से आफ बन्चित पनि हुन्छ । यिनै सबै कारणले गर्दा नै दुवै पत्रकार संघको सदस्यता पत्रपत्रिकाको आधारमा आधारित हुन गएको छ । यस दृष्टिमा वर्तमान, दुवै



संघलाई धेरै हदसम्म पत्रकारसंघ नभनी पत्रपत्रिका संघ वा पत्र सम्पादकहरूको संघ भन्न सकिन्छ । अझ यी दुवै संघहरूको रुपरेखा एवं गठनमा माथि उल्लेख गरिएको परिस्थितिजनित एक ठूलो विरोधाभास निहित छ भने पनि हुन्छ, किन भने श्रमजीवि पत्रकारहरू यी पत्रकार संघमा छैनन्– भनौ भने सबजसो सदस्यता प्राप्त पत्रकार, सम्पादक, प्रकाशकहरूलाई आफ्ना आफ्नापत्रिकाको मालिक भएतापनि सबै दृष्टिकोणले श्रमजीवि पत्रकार भन्नुपर्दछ, र फेरी श्रमजीवी पत्रकार हुन भनौं भने तिनीहरू प्रायः सबै आफ्ना आफ्ना पत्रका मालिक छन् ।

यस स्थितिमा कुनै पनि संघको रुपरेखा ठोस नहुनु स्वाभाविक र अवश्यम्भावी छ। तर पत्रकारिताको विकास संगसंगै तत्सम्बन्धी संघहरूले पनि विकसित र ठोस रुप लिनेछन् भन्ने आशा गर्न सकिन्छ । भन्नु पर्ने होइन कि प्रजातान्त्रिक पद्धतिमा संघ र संस्थाहरूको कत्रो ठूलो महत्व छ, त्यस्तै गरी पत्रकारिता जगतमा पनि पत्रकारसंघ संस्थाहरूको पनि ठूलो स्थान छ । यस प्रकारका संघहरूले पत्रकारहरूका स्वार्थ रक्षा गर्नमा मात्र सहायता पुऱ्याउँदैन, बरन तिनीहरूमा एक आचरण नैतिकता कायम गर्नमा मद्दत पुऱ्याई पत्रकारहरूलाई आफ्नो पेशाको महान् जिम्मेवारी पूर्णमा पनि सहायता प्रदान गर्दछन् । धेरै देशहरूमा पत्रकारहरूका संघहरूले उक्त देशका पत्रकारहरूको स्वार्थ रक्षा गर्नमा मात्र ठोस देन दिएका देखिन्न, बरन पत्रकारवर्गमा अनुशासन, संयम र राम्रो आचरण कायम गरी राष्ट्रिय स्वार्थपूर्ण गर्नमा सहायक सिद्ध भएका धेरै उदाहरण हाम्रो अगाडि छन् ।

अतः नेपालमा भएका पत्रकार संघहरूले पनि आफ्नो महान् जिम्मेवारीलाई महसूस गरेर पत्रकारिताको र राष्ट्रको विकासमा बढ्ता सक्रिय भएर सहयोग प्रदान गर्नु पर्दछ भन्ने कमिशनको विचार छ । बेला देलामा पत्रकारहरूको बैठक आदि गरेर, आपसी समस्याहरूमाथि छलफल गरी तिनको सामधान गर्न चेष्टा गरेर पत्रकारसंघहरूले अर्थात, पत्रकारहरूले जुन देन पत्रकारिताको विकास प्रति दिन सक्छन्, त्यो अरू कसैले पनि दिन सक्दैन । किनभने यस प्रकारकोआफ्नो चेष्टाले प्राप्त भएको विकासले आत्मसम्मान र आत्मविश्वास र सबभन्द बढी स्वावलम्बको प्रवृत्तिलाई पुष्टि दिन्छ । हामीले यो कहिल्यै विर्सनु हुन्न कि पत्रकारिताको विकासको लागि आवश्यक वातावरण वनाउनमा सरकारी सहयोगको पनि जरुरत छ, त्यस्तै गरी अरू तत्वहरूको सहयोगको पनि जरुरत छ । तर, अन्ततोगत्वा पत्रकारिता विकास उत्थान गर्नु पत्रकारह रूकै दायित्व हो । यो दायित्व पूर्ण गर्नमा पत्रकारहरूको संघ संस्थाले पत्रकारहरूलाई ठूलो सहायता प्रदान गर्न सक्छ ।

परिच्छद १५

## नेपालमा रेडियो जर्नालिज्म (पत्रकारिता) को विकास सम्बन्धि सुझाव

पत्रकारिता विभिन्न विषयहरूमा रेडियो जर्नालिज्म (रेडियो पत्रकारिता) सबभन्दा आधुनिक विषय मानिएको छ । विश्वमा रेडियोको प्रादुर्भाव र नियमित ब्रोडकाष्टिङ (प्रसारण)

व्यवस्थाको प्रचलन भएपछि श्रोताहरूको लागि मनोरञ्जन तथा शिक्षाप्रद कार्यक्रम प्रसारित हुनुको साथै समाचार प्रसारणले पनि त्यसमा विशेष स्थान लिन थाल्यो । छोटकरीमा ताजा समाचारहरू तत्काल असंख्य श्रोतावर्गसम्म पुऱ्याउन सक्ने यसको क्षमता, यसको व्यापकता, यसको सरलता र यसको सजीवताले नै यसको ४० वर्षजतिको विकासक्रममा यति छिटो यो जनजीवनको अत्यावश्यकता अभिन्न कुरो भै सकेको छ । ब्रोडकाष्टिङ का अरू विषयहरूको विकासका साथसाथै समाचार प्रसारणको पनि यति विकास भैसकेको छ कि यसले आफ्नो अलग्गै एक विशिष्ट स्थान प्राप्त गरिसकेको छ र रेडियो पत्रकारिता जगतको एक व्यापक क्षेत्र कायम गरिसकेको छ । आजको संसारमा रेडियो समाचार कति साधारण तथा जनोपयोगी भैसकेको छ यो त सर्वविदितै छ । हाम्रो नेपालमा पनि २००७ सालको परिवर्तनपछि सरकारको नियन्त्रणमा नियमित रुपले ब्रोडकाष्टिङ व्यवस्था शुरू भएपछि रेडियो समाचारको विशेष रूपले प्रचलनमा आउन थालेको हुनाले, यसले हाम्रो राष्ट्रिय जीवनमा एक महत्वपूर्ण स्थान ग्रहण गर्न थालेको हुनाले र हाम्रो जस्तो यातायात तथा संचारको सुगमता नभएको विकट पहाडी मुलुकमा यसको अझ विशेष महत्व भएको हुनाले, प्रेस कमिशनको अनिवार्य कार्य क्षेत्रभित्र नपरे तापनि, यसको विकासका सम्बन्धमा सरकारलाई दुई चारवटा सुझाव प्रस्तुत गर्नु देशमा पत्रकारिताको विकासको दृष्टिबाट राम्रै होला जस्तो लागेकोले यो एक परिच्छेद पनि रिपोर्टमा समावेश गरेका छौं ।

हाल रेडियो नेपालको समाचार सर्भिसमा बिहान, दिउँसो र बेलुकी गरी नेपाली, नेवारी, हिन्दी र अंग्रेजी भाषामा जम्मा एक घण्टा दश मिनेट समाचारहरू प्रसारित हुने व्यवस्था भैरहेकोछ । रेडियोको समाचार प्रसारणबाट देशका तमाम जनताले देशभित्र तथा बाहिर भए बितेका घटनाहरूको तुरुन्ता तुरुन्तै जानकारी हासिल गर्ने एक सजिलो बाटो पाएका छन् । यसबाट अखबारहरू पुग्न महिनौं लाग्ने स्थानका जनताले लाभ उठाई रहेका मात्र हैनन् लेखपढ गर्न नसक्नेहरूले पनि खबर थाहा पाउन सकिरहेका छन् । मनोरञ्जन र बौद्धिक विकासको अतिरिक्त खबर प्रसारणको दृष्टिबाट समेत हाम्रो राष्ट्रिय जीवनमा एक महत्वपूर्ण स्थान लिन थालेको यो साधनको तेजिका साथ विकास हुनु अत्यावश्यक छ ।

रेडियोमा समाचारको श्रोत, प्राप्त परिमाण व्यवस्था र स्टाफलाई विचार गर्दा अहिलेको समाचार प्रसारणको समय अवधि र सर्भिस क्वालिटीको आलोचना गर्न सकिन्न तापनि रेडियो समाचारको वाञ्छनीय स्तर कायम भएको छ भनी सन्तोष प्रकट गर्न पनि सकिन्न । तसर्थ यसको स्तर उकासी यसलाई अझ बढी उदार र जनोपयोगी तुल्याउन सरकारमा केही सुझावहरू प्रस्तुत गर्दछौं ।

(१) रेडियो सञ्चालन सरकारद्वारा नियमित छ तापनि अब चाँडै नै रेडियो सेटहरूका मालिकहरूलाई रेडियो सम्बन्धी कर लाग्ने हुनाले यसका अरू प्रोग्रामहरू बढी रुचिकर बनाउनु त पर्छ पर्छ, साथै समाचार प्रसारणको नीतिमा पनि उदारता बर्तिनु पर्ने हुन आउँदछ ।



(२) सरकारका महत्वपूर्ण कार्यहरूले प्राधान्यता पाउनु बेस हो तापनि अरू गैर सरकारी राजनैतिक सामाजिक सांस्कृतिक महत्वका प्रतिनिधि र घटनाहरूले पनि उचित परिमाणमा स्थान पाउने गराउनु आवश्यक छ ।

(३) विदेशी महत्वपूर्ण समाचारहरू नियमितरुपले समावेश गराउनु आवश्यक छ तापनि ७५ प्रतिशत स्वदेशी समाचारलाई स्थान दिइनु पर्दछ । सरकारको समाचार सम्बन्धी उदार नीति र स्वदेशी समाचारको श्रोतहरूको वृद्धिबाट यो असम्भव होला जस्तो लाग्दैन ।

(४) समाचारमा प्रयोग गरिने भाषामाशुद्ध सरल आफ्ना ठेट शब्दहरूको बढी प्रयोग गर्नुमा पनि विशेस ध्यान दिनु आवश्यक छ ।

(५) प्रत्येक समाचार बुलेटिनमा नयाँ नयाँ खबरहरूको समावेश गराईनु पर्दछ, दोहऱ्याउन आवश्यक परेमा फेरि सम्पादन गरेर मात्र प्रसारित गरिनु पर्दछ । दोहऱ्याइने समाचारलाई सकेसम्म स्थान दिन कम गर्नु पर्दछ ।

(६) सूचना विज्ञापन छांटका कुराहरूलाई खबरमा राख्न दिनु बिलकुलै रोक्नु पर्दछ ।

(७) सम्पादकीय समीक्षा गत केही महिनादेखि प्रसारित हुन थालेको छ तापनि यसमा अरू उदार नीति बर्तिनु बेश होला र साथै हप्तामा एक दुई पटक समाचार समिक्षाको पनि चलन चलाउनु राम्रो होला ।

परिच्छेद १६

## दुई जना सदस्यहरूको जिल्ला सम्बन्धी रिपोर्ट

विराटनगरः—

श्री ५ को सरकार, नेपाल प्रेस कमिशनद्वारा खटिई विराटनगर स्थित प्रेस पत्र पत्रिका सम्बन्धी कुराहरूको जाँच एवं निरीक्षणबाट थाहा पाइएको कुराहरूः—

पत्रपत्रिकाको नाममा हालै कुनै यस्तो स्थानीय प्रकाशन छैन, केही दिन अघिसम्म एक दैनिक एवं एक साप्ताहिक प्रकाशित भइरहेको थियो । यस भन्दा पहिले पनि यस प्रकारका पत्रपत्रिकाहरू प्रकाशित भईरहेका नै थिए । तर विभिन्न कारणवश कुनै प्रकाशन पनि स्थायी हुन सकेको छैन ।

जुन कठिनाई एवं बाधाहरू लाई देशका भागहरूमा सामना गर्न परिरहेछ, त्यसबाट यहाँका प्रकाशनहरू पनि बढी देखिएनन् । प्रकाशन स्थगित भएका पत्रपत्रिकाहरूका सञ्चालक तथा अरू सम्बन्धित मानिसहरूसंग छलफल हुँदा तिनीहरूले पनि ठिक त्यस्तै कठिनाईहरूको उल्लेख गरे, जुन कि प्रेस कमिशनलाई पत्रकारहरूसंगको छलफलको सिलसिलामा अवगत भयो । अरू राजधानीबाट टाढा भएको हुनाले जुन कानूनी कठिनाईहरूको हल केही हदसम्म राजधानी

था प्राप्त छ, त्यो पनि जिल्लाका पत्रकारहरूलाई प्राप्त भएको देखिन्न। विराटनगरमा पत्रपत्रिकाहरू अहिलेसम्म चल्न नसकेको एक मुख्य कारण पाठकहरूको कमी हो, राजधानीमा जहाँ यस कारणले पत्रपत्रिकाहरूको हालत दयनीय वनाई दिएको छ, जिलाहरूमा त यसले पत्रहरूको अस्तित्व नै असंभव प्रायः तुल्याइ दिएको छ। तर विराटनगरको औद्योगिक विकास वाणिज्य व्यापारको उन्नति आदिले गर्दा भन्न सकिन्छ कि एक सुव्यवस्थित तरिकाले पत्र चलाउने प्रयास भएमा केही हदसम्म सफलता प्राप्त गर्न सकिन्छ ।

देशको कुनै एक भागमा पत्र प्रकाशन केन्द्रित हुनु लाभदायक कुरो होइन। हाम्रो देश पर्वतीय भएको हुनाले विकेन्द्रीकरणको अझ बढ्ता आवश्यकता छ। यसो नभएमा देशका धेरैजसो बासिन्दाहरू समाचार प्राप्त गर्ने साधनबाट बन्चित रहन जानेछन् । तर यसको साथै जुन कठिनाईहरू छन्, जसले गर्दा पत्रकारिताको विस्तारमा बाधा पुऱ्याइरहेको छ, त्यसप्रति ध्यान दिएर यो उद्देश्य प्राप्त हुन सक्दैन। अतः यी आवश्यक छ कि जिल्लामा खोलिने पत्र पत्रिकाहरूको लागि सरकारद्वारा विशेष सहुलियतको प्रबन्ध होस् र सरकारी विज्ञापन, डाँक, तार आदिद्वारा हुन सक्ने कुरामा जिल्लाका पत्रकारहरूलाई अपेक्षाकृत बढ्ता सहुलियत दिइनुपर्दछ, ता कि जिल्लाको पत्रकारितालाई प्रोत्साहन मिलोस् ।

जहाँसम्म मुद्रण उद्योगको सवाल छ, विराटनगरमा यस उद्योगले कुनै उल्लेखनीय विकास गर्न सकेको छैन। अहिले विराटनगरमा दुई प्रेस छन् । दुवै प्रेस ट्रेडल हुन तथापि, विद्युत शक्तिको सन्तोषप्रद प्रबन्ध भएकोले दुवै प्रेस विद्युत् शक्तिको प्रयोग गर्दछन्। यहाँका प्रेसवालाहरूसंग छलफल हुँदा थाहा भयो कि असमान विदेशी स्पर्धाले यस उद्योगलाई बढ्ता सताएको छ। नजिकै ठूला ठूला विदेशी शहरहरू भएको हुँदा धेरैजसो छाप्ने कामहरू उतैबाट छापिएर आउँदा रहेछन्, जसले गर्दा स्थानिय प्रेसहरूले कम काम पाउँछन् । यस स्थितिमा तत्कालै केही सुधार नभएमा रहे सहेको प्रेस उद्योग पनि डुब्ने सम्भावना छ। प्रेसधनीहरूसंग कुरा हुँदा उनीहरूले भने कि सरकारले विराटनगर स्थित मुद्रण उद्योगको वृद्धिको लागि तथा त्यसलाई विदेशबाट भई रहेको असमान स्पर्धाबाट जोगाउन, मुद्रण भएर बिदेशबाट झिकाइने चीजहरूमा केही भन्सार लगाइनु पर्दछ, जसले गर्दा मुद्रण गर्ने कामहरू बिराटनगरकै प्रेसहरूमा छापिन थालियुन ।

(सही गोपालदास श्रेष्ठ)

बीरगञ्ज

म हेटौंडा सम्म आफ्नो निजी कार्यको लागि जान लाग्दा प्रेस कमिशनद्वारा प्रेस पत्र पत्रिकाको कार्यालयको अवस्था अध्ययन गर्ने आफ्नो कार्यक्रमको सिलसिलामा मलाई अनुकूल परेमा वीरगञ्जसम्म गई त्यहाँको प्रेस पत्रपत्रिकाहरूको कार्यालयको निरीक्षण गरी आउनु होला भनी अनुरोध गरिएकोले म बीरगञ्ज गै त्यहाँको प्रेस पत्रपत्रिकाको कार्यालय गिरीक्षण गर्दा बुझिएको व्यहोरा तल लेखी पेश गरेको छु।



वीरगञ्जभरमा दुर्गा प्रेस नामक केवल एक प्रेस कार्यालय रहेछ। सो कार्यालय पनि प्रकको नाम नराखी पर्चा छापेको अभियोगमा छापाखाना प्रकाशन सम्बन्धी ऐन अन्तर्गत रहेको कारवाई नटुंगिएकोले हाल बन्दमै रहेको रहेछ। कार्यालयका धनीसित भेटी कुराकानी गर्दा निजले उपर्युक्त कुरा बताउनु भयो। उहाँको साथ गएर उक्त प्रेसको कार्यालय निरीक्षण गर्दा कार्यालयमा केवल डिस्माएण्टल गरी राखेको एक ट्रेडल मेशिन र अन्य सरसामान त्यसै परिरहेको देखें त्यसै कार्यालयको एक फ्लाट मेशिन काठमाडौं ल्याइएको रहेछ। हाल वीरगञ्जमा चालू कुनै प्रेस छैन र साथै पत्रपत्रिकाको प्रकाशन पनि रहेनछ।

त्यतिको जनसंख्या भएको वीरगञ्ज जस्तो ठाउँमा कमसेकम एक प्रेसको नितान्त आवश्यकता देखिन्छ । हाल त्यहाँ एक प्रेस पनि नभएकोले मामूली छपाईको काम समेत विदेशतर्फबाट वा काठमाडौं पठाई छपाई ल्याउन पर्ने भएकोले स्थानीय जनतालाई ज्यादै असुविधा परेको बुझियो ।

वीरगञ्जमा एक प्रेस पनि नभएकोले सरकारबाट यस तर्फ उचित विचार गरी कमसे कम एउटा प्रेसलाई यथासम्भव सहायता दिई चालू गराई दिने प्रबन्ध भए यो कठिनाई दूर हुने थियो भन्ने स्थानीय जनताको भनाई भएको बुझियो ।

वीरगञ्ज जस्तो चल्तिफिर्ति र महत्वको स्थानमा एक प्रेससम्म पनि नभएमा सरकारलाई पनि असुविधा हुन जाने देखिन्छ। कारण, स्थानिय सरकारबाट केही छपाउन परेमा पनि या विदेशमा पठाउनु पर्ने या काठमाडौंमा पठाइ छपाउनु पर्ने भएको हुँदा अवस्था अनुसार तत्कालै केही छाप्न परेमा वा छपाई प्रचार गराउन परेमा समयाभावले नभ्याउने भै सरकारको सामयिक प्रचार पनि हुन नसक्ने भएकोले त्यस दृष्टिबाट पनि त्यहाँ कमसेकम एक प्रेसको नितान्त आवश्यकता देखिन्छ। यो कुराको अनुभवबाट महसूस गर्दछु कि केन्द्रबाट टाढा परेका वीरगञ्ज जस्तो (क) श्रेणीमा गनिएका चल्तिफिर्ति जिल्लाहरूमा जहाँ आज तक कुनै छापाखाना छैनन्, त्यस स्थानमा हुनसक्छ भने फलाट नभए ट्रेडलै भए पनि १।१ प्रेसहरूको प्रत्यक जिल्लामा स्थापना गर्नु सख्त जरूरत र अनिवार्य देखिन्छ । अतः कमिशनले त्यसतर्फ पनि केही सुझाव दर्शाई दिनु बेश छ ।

(सही जीवनाथ लोहनी)

परिच्छेद–१७

## खर्चको फाँटवारी

कमिशनको रिपोर्ट प्रस्तुत गर्ने काममा आवश्यक सबै खर्चको लागि कमिशनको निर्णयबमोजिम खर्च मिह्ला गर्ने गरी सरकारबाट मोरू. २०००।– दुई हजार रूपैयाँ निकाशा भएको थियो । कमिशनको पटक पटकको निर्णय मुताविक निम्नलिखित कामहरूको लागि निम्नप्रकार खर्च भयोः–

| | | |
|---|---|---|
| १. | गैर सरकारी सदस्यहरू दुई जनाको लागि खर्च भएको | ६३०।- |
| २. | वीरगञ्ज, विराटनगरमा सदस्यहरू जाँदा लागेको भ्रमण खर्च र भत्ता | २१५।- |
| ३. | भेट छलफलमा निमन्त्रित व्यक्तिहरू ल्याउदा लैजाँदा र निरीक्षण गर्न जाँदाको लागि मोटर भाडा खर्च | ७५।- |
| ४. | भेट छलफलमा आमन्त्रित महानुभावहरूको स्वागतार्थ जलपान खर्च | ३२५।- |
| ५. | स्टेशनरी मसलन्द खर्च | ३७१।७६ |
| ६. | अखवारको ग्राहक चन्दाको लागि खर्च | ५४।८२ |
| ७. | टाइपिष्टके | १००।- |
| ८. | अरू विविध फुटकर | २२८।४२ |
| | जम्मा खर्च | २०००।- |



परिशिष्ट (क)

सरकारिया स्तरबाट प्राप्त पत्रपत्रिकाहरूको तालिका यस प्रकार छः–

| सि.नं. | पत्रिकाको नाम | किसिम | सम्पादक को नाम | इजाजत पाएको मिति |
|---|---|---|---|---|
| १. | मशाल | साप्ताहिक | श्री गणेशप्रसाद श्रेष्ठ | १०–९–१ |
| २. | हलचल | साप्ताहिक | श्री डा. जगतचन्द्र मोहन | १०–९–२ |
| ३. | स्वतन्त्र नेपाल | पाक्षिक | श्री शारदाप्रसाद रेग्मी | |
| ४. | राष्ट्रवाणी | साप्ताहिक | श्री भैरब बहादुर | १०–९–६ |
| ५. | म्युनिसिपल बुलेटिन | साप्ताहिक | श्री हृदयचन्द्र सिंह | १०–९–२४ |
| ६. | परोपकार | मासिक | श्री दिल्लीबहादुर | |
| ७. | नेपाल आयुर्वेद पत्रिका | मासिक | श्री कविराज नरेन्द्र | |
| ८. | नेपाल | द्वैमासिक | श्री सिद्धिचरण श्रेष्ठ | |
| ९. | जगत् उद्धार ग्रन्थमाला | मासिक | श्री पं. जोगमुनि | १०–७–२८ |
| १०. | शिक्षा समाचार | पाक्षिक | श्री लवबहादुर | १०–१–३ |
| ११. | जागृति | मासिक | श्री लवबहादुर | ०९–१–३ |
| १२. | संस्कृत सन्देश | मासिक | श्री नरहरिनाथ | |
| १३. | नयाँ बाटो | साप्ताहिक | श्री तेजराज | १०–४–२३ |
| १४. | जनविकास | मासिक | श्रीमती रमादेवी | १०–२–२७ |
| १५. | कोपिला | मासिक | श्री शेखर बाबु | १०–१०–२३ |
| १६. | आलोक | साप्ताहिक | श्री विजयबहादुर | ९–८–९ |
| १७. | कोसेली | द्वैमासिक | श्री मुकुन्दप्रसाद | १०–८–१ |

| | | | | |
|---|---|---|---|---|
| १८. | नेपाल शिक्षा | द्वैमासिक | श्री तारामान | |
| १९. | नेपाल पुकार | अर्धसाप्ताहिक | श्री शंकरप्रसाद | ९-५-१३ |
| २०. | नव नेपाल | गणेशप्रसाद | | १०-१०-२८ |
| २१. | थौं-कह्लय् | मासिक | श्री पूणकाजी | १०-११-१५ |
| २२. | तरूण नेपाल | मासिक | श्री शरदकुमार | ९-३-२ |
| २३. | सही रास्ता | साप्ताहिक | श्री बैकुण्ठ प्रसाद | १०-१२-१५ |
| २४. | बालसखा | मासिक | श्री धनमानसिंह परियार | |
| २५. | जनचेतना | पाक्षिक | श्री हृदयचन्द्र | ११-१-१७ |
| २६. | नयाँ जमाना | साप्ताहिक | श्री कैलाशपति | ११-१-१८ |
| २७. | तरङ्ग | साप्ताहिक | श्री भोजबहादुर त्यौपाने | ११-३-१४ |
| २८. | खसोखास | साप्ताहिक | श्री भोजबहादुर | |
| २९. | जागा नेपाल | साप्ताहिक | श्री चण्डिकाप्रसाद | |
| ३०. | प्रजातन्त्र | साप्ताहिक | श्री | ११-४-३ |
| ३१. | भोर | मासिक | श्री | ११-४-१८ |
| ३२. | युगदूत | साप्ताहिक | श्री माणिकलाल श्रेष्ठ | ११-४-२९ |
| ३३. | प्रहरी | साप्ताहिक | श्री मणिराज | ११-५-८ |
| ३४. | सही बाटो | पाक्षिक | श्री मणिराज | ९-७-१७ |
| ३५. | सिनेमा | पाक्षिक | श्री के. एल. कर्माचार्य | ११-७-८ |
| ३६. | गाईजात्रा | साप्ताहिक | श्री केशवराज पिंडाली | ११-७-९ |
| ३७. | नव सन्देश | पाक्षिक | श्री गणेशप्रसाद | ११-७-२७ |
| ३८. | जन साहित्य | द्वैमासिक | श्री कृष्णचन्द्र सिंह | ११-८-५ |
| ३९. | सत्याग्रह | त्रिसाप्ताहिक | श्री बद्रिराम भण्डारी | ११-८-२७ |
| ४०. | प्रकाश | साप्ताहिक | श्री खड्गबहादुर मल्ल | ११-८-१८ |
| ४१. | शारदा | मासिक | श्री ऋद्धि बहादुर मल्ल | ११-९-४ |
| ४२. | विद्यार्थी समाचार | त्रिसाप्ताहिक | श्री भरतराज जोशी | ११-११-६ |
| ४३. | गार्जियन (अंग्रेजी) | मासिक | श्री बरूण शम्शेर | |
| ४४. | जनरल | साप्ताहिक | श्री इन्द्रमणि | |
| ४५. | दैनिक समाचार | दैनिक | श्री पुष्करनाथ | |
| ४६. | विद्यार्थी आवाज | पाक्षिक | श्री लक्ष्मण लोहनी | |
| ४७. | छात्र-संदेश | साप्ताहिक | श्री मदन शर्मा | |
| ४८. | समाज | दैनिक | श्री मणिराज उपाध्याय | ११-५-८ |
| ४९. | लोकवार्ता | साप्ताहिक | श्री सूर्यबहादुर | |
| ५०. | सन्देश | साप्ताहिक | श्री गणेश लाल | १२-२-२५ |
| ५१. | विकाश | साप्ताहिक | श्री केशवराज | १२-२-२५ |
| ५२. | नेपाल सन्देश | साप्ताहिक | श्री पुण्यप्रसाद | १२-३-३ |
| ५३. | युग | मासिक | श्री सुशीलनाथ | |
| ५४. | नेपाल समाचार | दैनिक | श्री शङ्करनाथ | |
| ५५. | जय नेपाल | दैनिक | श्री इन्द्रचन्द्र जैन | |
| ५६. | राष्ट्र सेवक | दैनिक | श्री राम नारायण | |
| ५७. | नव निर्माण | त्रैमासिक | श्री जयवागेश्वरी | |
| ५८. | नेपाल भाषा पत्रिका | दैनिक | श्री फत्यबहादुर सिंह | १२-५-६ |
| ५९. | मानव जागृति | पाक्षिक | श्री आशाकाजी श्रेष्ठ | १२-५-१७ |
| ६०. | लोक मंच | साप्ताहिक | श्री युगेश्वरप्रसाद | १२-६-२७ |
| ६१. | कर्मबीर | साप्ताहिक | श्री राजारामजङ्ग बहादुर शाह | १२-७-४ |
| ६२. | राष्ट्रबाणी | साप्ताहिक | श्री शारदाप्रसाद | १२-८-१३ |
| ६३. | नेपाल टाइम्स | दैनिक | श्री रामसिंह | |
| ६४. | देश-सेवा | अर्धसाप्ताहिक | श्री अनङ्गकेशरी | १२-१०-२७ |
| ६५. | इन्साफ | साप्ताहिक | श्री केदारनाथ शर्मा | १२-१२-१९ |
| ६६. | विद्यार्थी-समाज | साप्ताहिक | श्री सूर्यप्रसाद | १२-१२-२६ |
| ६७. | लोकवार्ता | साप्ताहिक | श्री सूर्यबहादुर | १३-१-३ |
| ६८. | छात्रवाणी | मासिक | श्री कृष्णकुमार | १३-१-१५ |
| ६९. | इन्द्रेनी | मासिक | श्री काव्य तिष्टान | १३-१-११ |
| ७०. | मशाल | साप्ताहिक | श्री गणेशप्रसाद | १३-२-३ |
| ७१. | प्रेरणा | पाक्षिक पछि साप्ताहिक | श्री विजयराज | १३-२-४ |
| ७२. | नेपाल एशियाई तथा विश्व सम्बन्ध परिषद्को पत्रिका | मासिक | श्री यादवप्रसाद | |
| ७३. | संयुक्तप्रयास | साप्ताहिक | श्री कलानाथ | १३-२-२६ |
| ७४. | कमनर | दैनिक | श्री गोपालदास | १३-२-२१ |
| ७५. | फ्लेम (FLAME) | साप्ताहिक | श्री पुष्करनाथ | १३-४-५ |
| ७६. | स्पोटीङ्गटाइम्स | पाक्षिक | श्री मणिचन्द्र | १४-४-५ |
| ७७. | नेपाल | द्वैमासिक | श्री बामकृष्ण प्रसाद | १३-४-१५ |
| ७८. | जगा नेपाल | साप्ताहिक | श्री केशवप्रसाद | १३-४-४ |
| ७९. | समय | दैनिक | श्री माणिकलाल | १३-४-२९ |
| ८०. | हाम्रो नेपाल | अर्धसाप्ताहिक | श्री कृष्णबहादुर | १३-४-३१ |
| ८१. | जन्म भूमि | साप्ताहिक | श्री लीलामान | १३-४-३१ |

| | | | | |
|---|---|---|---|---|
| ८२. | धरती | मासिक | श्री ईश्वर बराल समेत | १३-४-२६ |
| ८३. | दैनिक खबर | दैनिक | | १३-६-६ |
| ८४. | श्रमिक | साप्ताहिक | श्री सुशीलनाथ | १३-६-१६ |
| ८५. | झ्याली | " | श्री प्रमोद शमशेर | १३-७-१५ |
| ८६. | हालखबर | दैनिक | श्री दाताराम | १३-७-१५ |
| ८७. | लेबर | साप्ताहिक | श्री हरिन्द्रदेब शर्मा | १३-८-३ |
| ८८. | एभरेष्ट न्यूज अग्रेजी | दैनिक | श्री प्रकाशबहादुर खत्री | ११-९-२४ |
| ८९. | शहीद सन्देश | " | श्री जनकमान श्रेष्ठ | १३-९-२४ |
| ९०. | दि मेसेन्जर | " | श्री महेन्द्रबहादुर | १३-१०-१० |
| ९१. | भृकुटी | मासिक | श्री कृष्णचन्द्र | १३-१०-१९ |
| ९२. | दियालो | दैनिक | श्री तारिणीप्रसाद | १३-११-११ |
| ९३. | आँधी | साप्ताहिक | श्री तारिणीप्रसाद | १३-११-११ |
| ९४. | पस | दैनिक | श्री कृष्णचन्द्र | १३-१२-१ |
| ९५. | भूपाल | मासिक | श्री कृष्णदास | १३-१२-१ |
| ९६. | एजुकेशन | त्रैमासिक | श्री मोहनदेव | १३-१२-२० |
| ९७. | नबीन शिक्षा | मासिक | श्री कृष्णराज अर्ज्याल | १३-१२-२० |
| ९८. | प्रौढ शिक्षा पत्रिका | पाक्षिक | श्रीमती सिद्धि सिंह | १३-१२-२० |
| ९९. | सही सन्देश | | श्री विष्णुबहादुर श्रेष्ठ | १३-१२-२० |
| १००. | ज्यामी | | श्री सुशीलनाथ | १३-१२-२२ |
| १०१. | गोरेटो | | श्री डिल्लीबहादुर | १३-१२-२१ |
| १०२. | भूगोल पार्क | | श्री मङ्गलमान | १४-२-१३-१ |
| १०३. | रङ्गमञ्च | पाक्षिक | श्री शेखर मानन्धर | १४-२-१३-१ |
| १०४. | नयाँ समाज | दैनिक | श्री पशुपतिदेव पाँडे | १४-२-२३-०४ |
| १०५. | झी | मासिक | श्री मोहननारायण श्रेष्ठ | १४-३-२०-४ |
| १०६. | शान्ति | मासिक | श्री स्वामी ईश्वरानन्द | १६-३-३१-१ |
| १०७. | स्वतन्त्र समाचार | दैनिक | श्री मदन शर्मा | १४-४-८-३ |
| १०७. | जनमत | दैनिक | श्री योगेन्द्रराज शंकर | १४-४-२४-५ |
| १०९. | नौलो पाइलो | त्रैमासिक | श्री कोशराज रेग्मी | १४-५-१७ |
| ११०. | वसुधा (अग्रेजी) | मासिक | श्री बालाप्रसाद श्रेष्ठ | १४-५-२१-६ |
| १११. | साहित्य | द्विमासिक | श्री स्यामप्रसाद उपाध्याय | १४-५-३१-२ |
| ११२. | नेपाल पुकार | साप्ताहिक | श्री विश्वबन्धु थापा | १४-६-९-४ |
| ११३. | डेली मिरर | दैनिक | श्री हरिचरण श्रेष्ठ | १४-६-१३-१ |
| ११४. | नवयुग | साप्तहिक | श्री देवीप्रसाद अधिकारी | २४-७-१-५ |



| | | | | |
|---|---|---|---|---|
| ११५. | जनता | दैनिक | श्री गणेशलाल मानन्धर | १४-७-१६-६ |
| ११६. | डाँफेचरी | द्विमासिक | श्री पासाङ गोपर्मा | १४-७-२६-४ |
| ११७. | राष्ट्रिय प्रजा संदेश | साप्ताहिक | श्री गोविन्दप्रसाद | १४-८-३-२ |
| ११८. | दि मदर लायन्ड | दैनिक | श्री मणीन्द्रराज श्रेष्ठ | १४-८-७-६ |
| ११९. | उज्यालो | " | श्री तारणीप्रसाद कोइराला | १४-८-१६-१ |
| १२०. | यु.यन. जर्नल | " | श्री विश्वसम्बन्ध परिषद् | १४-८-२०-५ |
| १२१. | बाछीटा | " | श्री धनुषचन्द्र गौतम | १४-९-११-४ |
| १२२. | कल्पना | " | श्री तारणीप्रसाद कोइराला | १४-९-२९-१ |
| १२३. | केटाकेटि | मासिक | श्री नरेन्द्रप्रसाद रेग्मी | १४-१०-१५-३ |
| १२४. | स्वास्नीमान्छे | त्रैमासिक | श्री शशिकला शर्मा | १४-१०-२०-१ |
| १२५. | जनकल्याण | साप्ताहिक | श्री काजीमान कदंडवा | १४-१०-२७-१ |
| १२६. | पञ्चायत | मासिक | श्री इन्द्रप्रसाद उपाध्याय | १४-११-६-२ |
| १२७. | जुनकिरी | " | श्री मोहनी थापा | १४-११-१४-३ |
| १२८. | जुद्धोदय पब्लिक हाई स्कुल | " | श्री वासुदेव शर्मा | १४-११-१४-३ |
| १२९. | जगतउद्धार | " | श्री जोगमती बज्राचार्य | १४-१२-१९-३ |
| १३०. | ज्ञानविकाश | " | | १५-१-४ |
| १३१. | गोरखापत्र | द्विदैनिक | श्री प्रधान सम्पादक प्रेमराज शर्मा | |

यिनका अतिरिक्त भरपर्दो सूत्रबाट थाहा पाईएको नेपाल तथा विदेशमा निस्केका पत्रपत्रिकाहरूको नाम यस प्रकार छः-

## नेपालमा विभिन्न स्थानमा

| | | | | |
|---|---|---|---|---|
| १. | सुधासागर | मासिक | श्री मोतीराम भट्ट | १९५५ |
| २. | आवाज | दैनिक | श्री सिद्धिचरण | २००७ |
| ३. | आँखा | मासिक | श्री स्कूलहरूद्वारा | २००४ |
| ४. | आह्वान | त्रैमासिक | श्री त्रिचन्द्र कलेजद्वारा | २००९ |
| ५. | साहित्य-स्रोत | मासिक | श्री दयचन्द्र सिंह | २००५ |
| ६. | ईन्द्रधनु | " | श्री शान्तिनिकुञ्ज | २००८ |
| ७. | रांको | साप्ताहिक | श्री | २००८ |
| ७. | उद्योग | पाक्षिक | श्री सूर्यभक्त जोशी | १९९२ |
| ९. | राष्ट्रहित | " | श्री केदारनाथ | २००९ |

| | | | |
|---|---|---|---|
| १०. आदर्शवाणी | मासिक | श्री आदर्श विद्यालय | २००९ |
| ११. घरेलु ईलम पत्रिका | पाक्षिक | श्री भीमनिधि तिवारी | २००४ |
| १२. छाप्रो | अर्धसाप्ताहिक | श्री काशीराज उपाध्याय | २००९ |
| १३. जारण | साप्ताहिक | श्री हृदयचन्द्र सिंह | २००७ |
| १४. झन्कार | मासिक | श्री तारणीप्रसाद | २००८ |
| १५. झिल्को | साप्ताहिक | | २००९ |
| १६. दर्शन | साप्ताहिक | नेपाल दार्शनिक सङ्घ | २००९ |
| १७. ने.सा.प. | वार्षिक | | २००९ |
| १८. प्रगति | द्वैमासिक | श्री नारायणप्रसाद वास्कोटा | २००६ |
| १९. हाम्रो नेपाल | मासिक | श्री कहानन्द सापकोटा | २०१० |
| २०. पुरुषार्थ | मासिक | श्री बुद्धिसागर, शेषराज शर्मा | २००६ |

## विदेशबाट प्रकाशित भएका

दार्जिलिङ्गबाट:–

| | | | |
|---|---|---|---|
| १. आदर्श | मासिक | श्री देवदास राई खर्साग पून्मव | २००६ |
| २. आदर्श | मासिक | श्री शेषमणि प्रधान | १९३० |
| ३. आशा गोर्खा | साप्ताहिक | श्री भोलानाथ गुरूङ्ग शिलाँग | २०१४ |
| ४. कमल | वार्षिक | भानुभक्त विद्यालय दार्जिलिंङ्ग | १९५३ |
| ५. गोरखा | साप्ताहिक | गोर्खालीग कालिंपोङ्ग | १९५४ |
| ६. गोरखे खबर कागज | साप्ताहिक | पा. गंगाप्रसाद प्रधान | १९७२ |
| ७. गोर्खाली | साप्ताहिक | श्री सूर्यबिक्रम ज्ञवाली | १९७२ |
| ८. चन्द्रिका | मासिक | खरसांग | १९७२ |
| ९. ज्योति | वार्षिक | विन्ध प्र. स. काशी | २०१४ |
| १०. नव प्रभात | द्वैसासिक | श्री सानमती राई | १०१० |
| ११. नव नेपाल (हिन्दी) | साप्ताहिक | कलकत्ता | १०१० |
| १२. नेपाली साहित्य सम्मेलन पत्रिका | | ने. सा. स. | १९८९ |
| १३, नेबुला | मासिक | श्री के. डि. प्रधान | १९९१ |
| १४. परिवर्तन | ऐ | ऐ | १९९२ |
| १५. पुकार | ऐ | श्री नरेन्द्रप्रसाद कालिंपोङ्ग | १९४८ |
| १६. प्रवासी नेपाली | अर्ध-मासिक | श्री कमलकुमार थापा सिलगुडि | १९५१ |
| १७. फिलिंगो | त्रैमासिक | श्री ध्रुवनाथ जोशी शिलाँग | १९५७ |



| | | | |
|---|---|---|---|
| १८. भारती | मासिक | श्री पारसमणि प्रधान | २००६ |
| १९. शिक्षा | ,, | श्री सुनकेशरी प्रधान | १९५० |
| २०. साथी | साप्ताहिक | श्री टंमेनन दार्जिलिङ्ग | १९४९ |
| २१. सुस्केरा | त्रैमासिक | श्री यङ्ग गोरखा एशोसिएशन दार्जिलिङ्ग | २०१० |
| २२ हिमाल | मासिक | श्री देवकुमारी सिन्हा | १९५१ |
| २३. हाम्रो कथा | मासिक | श्री कमलकुमार शर्मा, रामचन्द्र तामाङ्ग, नन्दध्वज राई | २००६ |
| २४. हिमाद्रि | | – | – |

बनारसबाट:–

| | | | |
|---|---|---|---|
| १. गोर्खा-भारत जीवन | मासिक | श्री मोतीराम भट्ट | १९४५–४७ |
| २. उदय | मासिक | श्री काशीबहादुर श्रेष्ठ | १९९३ |
| ३. चन्द्र | ,, | श्री माधवप्रसाद | १९७४ |
| ४. छात्र | वार्षिक | श्री का.हि.वि.वि. छात्रसंग | १९५० |
| ५. छात्र–दूत | ,, | श्री संस्कृत छात्रपरिषद् | २०१२ |
| ६. छात्रवाणी | ,, | श्री नेपाली छात्रसंघ | २०१३ |
| ७. जनयुग | पाक्षिक | श्री चिन्तामणि ज्ञवाली | २००९ |
| ८. जन्मभूमि | मासिक | श्री सूर्यविक्रम ज्ञवाली बनारस | १९७९ |
| ९. ज्योति | वार्षिक | श्री कुलचन्द्र गौतम | २०१४ |
| १०. दीपक | मासिक | श्री नारायणप्रसाद भट्टराई | ०१३ |
| ११. नौलो पाइला | तीन मैन्हे | श्री कोशराज जोशी | २०१३ |
| १२. माधवी | मासिक | श्री मातृकाप्रसाद (राममणि) | १९६५ |
| १३. युगवाणी | साप्ताहिक | श्री नारायणप्रसाद भट्टराई | २००४ |
| १४ राजभक्ति | ,, | श्री आशुकवि शंभुप्रसाद | १९८३ |
| १५. सन्देश | छ महिने | श्री दाङ प्यूठान छात्रसंघ | २०१४ |
| १६. सर्वहितैषी पत्रिका | मासिक | श्रीमती मोती देवी | १९६७ |
| १७. सुन्दरी | मासिक | श्री रसिक समाज सोमनाथ, देवीदत्त, चक्रपाणि | १९६३ |

देहरादूनबाट:–

| | | | |
|---|---|---|---|
| १. गोरखा ससार | साप्ताहिक | श्री ठाकुरचन्द सिंह | १९२६ |

| | | | | |
|---|---|---|---|---|
| २. | जाग्रत गोरखा | त्रैमासिक | श्री आनन्दसिंह थापा, जाग्रत गोरखा कार्यालय, | १६५५ |
| ३. | तरूण गोरखा | साप्ताहिक | श्री ठाकुरचन्दन सिंह | १६८२ |
| ४ | विहान | अर्धवार्षिक | श्री गोरखा छात्रसंघ | २००६ |
| ५. | स्वतन्त्र नेपाली | साप्ताहिक | श्री ठाकुरचन्दन सिह | २०११ |
| ६. | हिमालय टाइम्स | साप्ताहिक | श्री सम्पादक ठाकुरचन्दन सिह | |

## भारतका अरू भागबाट प्रकाशित भएका:–

१. बुद्ध धर्म व नेपाल भाषा, धार्मिक या सांस्कृतिक, सम्पादक धर्मादित्य धर्माचार्य कलकत्ता १६८२

२. बुद्ध धर्म व नेपाल भाषा, धार्मिक तथा साहित्यहिक गरी दुई भागमा प्रकाशित, सम्पादक श्री धर्मादित्य कलकत्ता १६८५

| | | | | |
|---|---|---|---|---|
| ३. | आरती | वार्षिक | श्री प्रयाग वि. वि. छात्रसंघ | १६८२ |
| ४. | उज्यालो | ,, | श्री छात्रसंघ लखनौ | |
| ५. | उज्यालो | ,, | श्री भावसु धर्मशाला पूजाब | १६६१ |
| ६. | उत्थान | मासिक | श्री एस.पी. प्रधान कलकत्ता | १६४७ |
| ७. | कञ्चनजंघा | ,, | श्री गान्तोक, सिक्कम | १६५७ |
| ८. | कम्युनिष्ट | पाक्षिक | श्री प्रचारपत्र पटना | १६५० |
| ९. | क्रान्तिकारी समाजवादी | | | |
| १०. | कर्मोदय | मासिक | पहिले कालिंपोङ्ग तथा पछि कलकत्ताबाट प्रकाशित हुँदैछ | २००४ |
| ११. | नेपाली | साप्ताहिक | ज्ञानरत्न मुजफरपुर | १६५४ |
| १२. | जनमत | साप्ताहिक | श्यामप्रसाम कम्यूनिष्ट पार्टी दरभंगा | २००० |
| १३. | देवर्षिवाणी | लिथो | जलपाईगुडि | १६५५ |
| १४. | पर्बते | साप्ताहिक | रोमन नेपाली सिगापुर | २००३ |
| १५. | प्रभात | बार्षिक | छरंग नेपालीछात्रसंघ तेजपुर आसाम | २०११ |
| १६. | प्रभात | मासिक | बादेगल कलकत्ता सेप्टेम्बर | १६५० |
| १७. | बागमती | वाषिक | ने. छात्रसंघ बम्बई | २०१३ |
| १८. | हिमाचल | वार्षिक | हि. छात्रसंघ कलकत्ता | १६४८ |

## मित्र राष्ट्रहरूबाट प्रकाशित नेपाली भाषाका पत्रपत्रिकाहरू

| | | |
|---|---|---|
| १. | पश्चिम बंगाल | भारत सरकार |
| २. | खेतीपाती | ,, |
| ३. | सैनिक समाचार | ,, |
| ४. | भारत समाचार | भारतीय दूताबास, काठमामाडौं |
| ५. | पर्बते | रोमनमा नेपाली बृटिश सरकार मलाया |

परिशिष्ट (ख)

नेपाल सरकार

## प्रेस कमिशन सिंहदरबार

पत्रसंख्या

श्रीमान्.. •. .. .. ..

मिति २०१४–११– मा

महाशय,

देशमा स्वच्छ पत्रकारिताको विकास गर्ने कार्यमा सरकारलाई रिपोर्ट तथा सुझाव पेश गर्न श्री मानयीय न्यायाधीशज्यूको अध्यक्षतामा करकारी सदस्यहरू तथा प्रेस एसोशिए-शनको प्रतिनिधिहरू सम्मिलित भएको एउटा प्रेस कमिशन सरकारबाट गठन भएको छ। कमिशनलाई देशका प्रेस (पत्रपत्रिकाहरू) को मौजुदा स्थिति, प्रकाशन, सञ्चालन, आर्थिक अवस्थाहरूहरूको अध्ययन गरी सरकारद्वारा प्रेसलाई प्राप्त हुनुपर्ने सहुलियत तथा सुविधा र प्रेसको सरकारप्रतिको उत्तरदायित्व र कर्तव्य तथा स्थायी प्रेस सल्लाहकार समिति र राष्ट्रिय संवाद समितिको स्थापना र गठनबारे सुझाव आगामी चैत्र मसान्तसम्ममा विस्तृत रिपोर्ट र सुझाव पेश गर्न सरकारबाट आदेश भएको छ। उक्त रिपोर्ट र सुझाव तयार पार्न कमिशनलाई देशभरीका प्रेस (पत्रपत्रिकाहरू) को वास्तविक स्थिति अध्ययनका लागि तथ्यांक आवश्यक परेकोले प्रेस (पत्रपत्रिका) को व्यवसायमा लाग्नुभएका पत्रकारितामा अभिरूचि राख्नुहुने महानुभावहरूलाई कमिशनको तथ्यांक संकलन कार्यमा सहयोग गर्न आव्हान गर्दछौ। देश विकाशको लागि प्रेस (पत्रपत्रिकाहरू) को धेरै महत्व भएको र त्यसको सुधार र विकाशमा तपाईहरूकी सहयोग धेरै मूल्यवान् भएको हुनाले आवश्यक व्यवस्था मिलाउने पवित्र उद्देश्य लिएर नै तथ्याँक संकलनको लागि एक प्रश्नावली तयार पारी तपाईहरूका समक्ष प्रस्तुत गर्दछौ। तपाईहरूले यसैसाथ प्रेषित प्रश्नाबलीको फाराम भर्नु भै सकेसम्म आफुले प्राप्त गर्नु भएको मितिदेखि एक हप्ताभित्रैमा यस कमिशनमा पठाउने प्रबन्ध गरिदिनुभए कमिशनले देश र तपाईहरूको समेत सेवा गर्ने ठुलो मौका पाउने थियो । धन्यवाद ।

भवदिय

(सहि) प्रकाशमान सिंह

सेक्रेटरी

प्रेस कमिशन

परिशिष्ट (ग)

नेपाल सरकार

## प्रेसकमिशनको प्रश्नावली

१ वर्तमान नेपालमा पत्रकारिताको स्थान र महत्व के कति छ ?

२ स्वस्थ पत्रकारिता तपाई केलाई भन्नुहुन्छ ?

३ नेपालका पत्रकारिताको इतिहासबारे हामीलाई केही जानकारी दिनुहुन्छ कि ?

४ मौजुदा पत्रपत्रिकाले जनताको अभिरूचि र मागलाई पुरा गरेको छ ?

५ हाल पत्रकारितामा गहकिला अथवा शनशनीदार समाचारहरूमध्ये कुनले बढी स्थान पाएको छ ?

६ विभिन्न प्रकाशित पत्रपत्रिकाहरूको स्तर (स्टाण्डर्ड) सन्तुलित छ ? वर्तमान पत्रकारिताको स्तर बढाउन आवश्यक कुराहरूको सुझाव दिनुहुन्छ कि ?

७ स्वच्छ पत्रकारिताको आफ्नो कर्तव्य पालनमा कुनै बाधा उत्पन्न भैरहेको महसुस गर्नु हुन्छ कि भए ति बाधाहरू के के हुन् ?

८ पत्रपत्रिकाहरूको गेटअप र लेआउट तपालाई कस्तो लाग्छ ।

९ पत्रपत्रिकाहरूले जनमत बनाउन र जनजागृति चेतना सांस्कृतिक र सामाजिक रूचि परिमार्जन गर्नमा के प्रभावपारेको छ ?

१० पत्रपत्रिकाको जिम्मेदारी र दायित्व के कस्तो हुनुपर्छ भन्ने तपाईको विचार छ ?

११ के पत्रकारितामा कुनै व्यावसायिक स्वार्थ छ, छ भने यो स्वार्थ र सार्वजनिक स्वार्थमा सामन्जस्य कसरी ल्याउन सकिन्छ ?

१२ पत्र पत्रिहरूका आर्थिक अवस्था सुधार्न तपाईको के सुझाव छ ?

१३ पत्र पत्रिकाको आर्थिक सुधार र विकाशमा सरकारबाट के कस्तो सहुलियत सहायता पाउनुपर्ला ?

१४ सरकार र पत्रपत्रिकाको सम्बन्ध अझ निकट र घनिष्ट पार्न के कस्तो व्यवस्था हुनुपर्ला ?

१५ सरकार र पत्रिकाहरूको घनिष्टता बढाउन एक प्रेस सल्लाहकार समितिले कसरी योगदान गर्न सक्ला ?

१६ वर्तमान अवस्थामा यो प्रेस सल्लाहकार समिति गठन गर्न कत्तिको सामयिक होला ?

१७ प्रेस सल्लाहकार समितिको गठन कार्यविधि कस्तो हुनुपर्ला ?

१८ देशको भौगोलिक दृष्टिलाई अगाढि राखेर पत्रपत्रिकाको प्रकाशन केन्द्र केही स्थानमा मात्र सिमित भै देशब्यापी वितरण हुनु वा प्रकाशन केन्द्र नै देशका धेरै स्थानमा फैलिनु कुनबेस होला ?

१९ राष्ट्रिय संवाद समिति गठन गर्न सकिने सम्भावना कति छ ?



२० संवाद समिति गठनको आधार र व्यवस्थाबारे केही सुझाव दिनुहुन्छ कि ?

२१ पत्रकारिताको विकाशको निमित्त तपाँईहरूका केही सुझाव छन् कि ?

परिशिष्ट (घ)

श्री सेक्रेटरी,
प्रेस कमिशन,
सिंहदरवार, मिति..........

महाशय,

प्रेस–कमिशनले पठाएको प्रेस (पत्रिका) सम्बन्धी प्रश्नावली प्राप्त भई उत्तर भरेर प्रेषित गरिएको छ ।

भवदीय–

## छापाखाना सम्बन्धी प्रश्नावली

१ प्रेसको नाम र ठेगाना ।

२ प्रेस मालिकको नाम ठेगाना ।

३. स्थापना भएको मिति

४. स्थापना हुँदाको स्टाफ संख्या जम्मा ।

५. वर्तमान स्टाफ संख्या जम्मा ।

६. प्रेस मेशिनको विवरण ।

७. प्रेसका कामदारहरूको संख्या ।

८. साधारणतः कति घण्टा काम हुन्छ ।

९. कामदारहरूलाई मेहनताना कति कसरी दिईन्छ ?

१०. नियमित रूपले छापिने कुराको विवरण ।

११. अरू छपाई र प्रकाशन विवरण ।

१२. सालाना आमदानी र खर्चको मोटामोटी हिसाव ।

१३. प्रेसले सामना गर्नु परेका विशेष कठिनाईहरूको पूर्ण विवरण ।

१४. ती कठिनाईहरू दूर गर्नमा सरकार तिरबाट हुनसक्ने उपायसम्बन्धी सुझाव ।

१५. प्रेस प्रकाशनको सुधार र विकाशको लागि सुझाव ·

नोट:–

माथिको विवरण भर्दा स्थानाभाव भएमा छुट्टै कागतमा लेखी नथ्थी गर्न सक्नुहुन्छ । सोधिएका प्रश्नहरू बाहेक पनि अरू कुनै कुरा र सुझावहरू छन् भने हामी स्वागत गर्छौं ।

परिशिष्ट (ङ)

श्री सेक्रटरी,

मिति

प्रेस कमिशन,

सिंहदरबार

महाशय,

प्रेस-कमिशनले पठाएको प्रेस (पत्रपत्रिका) सम्बन्धी प्रश्नावली प्राप्त भई उत्तर भरेर प्रेषित गरिएको छ ।

भवदीय–

## पत्रपत्रिका सम्बन्धी प्रश्नावली

१. पत्रको नाम र दर्ता नम्बर ।
२. पत्र कुन भाषामा प्रकाशित हुन्छ ?
२. पत्रका प्रकाशकको नाम, अनुभव र योग्यता ।
४. पत्रका सम्पादकको नाम, अनुभव र योग्यता ।
५. पत्र प्रकाशन शुरू भएको मिति ।
६. आफ्नै प्रेस अथवा अरू कुनै प्रेसमा छापिन्छ ?
(प्रेसको नाम)
७. पत्र प्रकाशन दैनिक या अरू कस्तो ?
८. पत्र-शुल्क (प्रतिअङ्क, मासिक वा वार्षिक आदि)
९. पत्रको हालको ग्राहक संख्या ।
१०. पत्रको मुद्रण संख्या ।
११. पत्रको वितरण क्षेत्र ।
१२. पत्रको ग्राहक र फुटकर बिक्रीबाट कहां कति जान्छ ?
१३. कुनै बिक्री एजेन्ट भए कहाँ कति छ ?
१४. पत्रको साईज र पृष्ठ संख्या ।
१५. पत्रको स्टाफ विवरण ।

परिशिष्ट (च)

## नेपालमा विदेशी प्रकाशन र प्रचार (अक्सर नियमित मात्र)

१. भारतीय सूचना सर्भिस काठमाण्डूबाट

(क) भारत समाचार– नेपाली मासिक

(ख) भारत सन्देश– दैनिक खबर बुलेटिन (नेपाली अंग्रेजी) भारतीय सूचना तथा



प्रसारमन्त्रालयद्वारा प्रकाशित विभिन्न पुस्तिका तथा पत्रपत्रिकाहरू काठमाडौंस्थित भारतीत दूतावासबाट नेपालमा नियमित तथा अनियमित रूपले मुफ्तमा वितरण गरिन्छ ।

२. अमेरिकी सूचना सर्भिस काठमाडौंबाट नियमित कुनै प्रकाशन छैन तापनि वाशिगटन र भारतस्थित अमेरिकी सूचना सर्भिस केन्द्रहरूदारा प्रकाशित पुस्तिकाहरू, प्रेस रिलिज, बुलेटिन, पत्रिकाहरू आदि काठमाडौंस्थित अमेरिकी लाइब्रेरीबाट मुफ्तमा वितरण गरिन्छ । यसको अतिरिक्त अमेरिकी लाईब्रेरीले रेडियोद्वारा भ्वाइसअफ अमेरिकाको खबर सुनेर टेपरेकर्ड गरी ती खबरहरू टिपेर टाइप गरी नियमित रूपले स्थानीय अखबारहरू र सरकारिया प्रचार साधनहरू समेतलाई मुफ्तमा वितरण गर्ने गरिएको छ ।

३. ब्रिटिश लाइब्रेरी काठमाडौं र अरू नेपालसित कूटनैतिक सम्बन्ध भएका केही मुलुकहरू, चीन गणराज्य, सोभियत यूनियन र फान्सका दिल्लीस्थित दूतावासबाट पनि समय समयमा नेपालमा न्यूज बुलेटिन, पत्रिकाहरू र प्रचारका वस्तुहरू वितरण डाँकद्वारा गरिन्छ ।

परिशिष्ट (छ)

## नेपालमा काम गरिरहेका विदेशी संवाद समितिहरू

१) प्रेसट्रष्ट अफ इण्डियाः– सरकारले यो संवाद समितिसित २००८ सालदेखि खबर किन्ने गरेको छ। तसर्थ यसको खबर मनिटर गर्ने रिसिभिंग सेट र स्टाफसहित काठमाडौंमा अफिस रहेको छ । हाल यसका प्रतिनिधि श्री स्वदेश डेराय। नेपालमा अन्य स्थानमा यसको कुनै प्रतिनिधि छैन ।

२) युनाइटेड प्रेस अफ इण्डियः– प्रतिनिधि श्री मदनमोहन गुप्ता ।

३) हिन्दुस्थान समाचारः– प्रतिनिधि श्री जी. आर. माधवराय।३५ देखि ४० सम्मको संख्यामा तराईका हरेक जिल्लामा र तराईसित जोडिएका पहाडि इलाकाहरूका धेरैजसो स्थानमा सम्वाददाताहरू छरी राखिएका छन र संकलन भएका खबरहरू नेपालबाहिर विदेशहरूमा पठाई ठूलो फायदा उठाईरहेको छ । यो सम्वाद समिति-सित श्री ५ को सरकारले पनि हालसालैदेखि मासिक ४००।– यो दरमा रेडियो गोरखापत्रको लागि किन्न थालेको छ। यसरी स्वदेशी समाचार विदेशी एजेन्सीबाट बिक्री वितरण भैरहेको छ ।

परिशिष्ट (ज)

श्री

नेपाल सरकार

## प्रेस कमिशन

सिंहदरबार
काठमाण्डु, नेपाल

पत्रसंख्या  मिति
श्रीमान
महाशय,

देशमा पत्रकारिताका समुचित अभिवृद्धिको लागि यही गत फाल्गुण १२ गतेदेखि कार्य गरिरहेको प्रेसकमिशनले तपाईको सहयोग बहुतै मूल्यवान प्रायः अनिवार्य ठानेकोले यस सम्बन्धमा तपाईको मौलिक परामर्श र सुझाव प्राप्त गर्न कमिशनले तपाईलाई यही आउदो           को दिन दिउसो ३।३० बजे कमिशनको अफिसमा पाउकष्ट गर्न अनुरोध गर्दछ ।

स्मरणीयः– तपाईको सुविधाको लागि ईच्छा भएमा स्थानीय जुद्धसडक पिपलवृक्षमुनिबाट सवारीको बन्दोवस्त गरिएको छ । तपाईको सुविधानुसार समयमा सूचना पाएमा अर्कै स्थानमा सवारी ल्याई पुऱ्याउने प्रबन्ध पनि हुनेछ। जीप दिउसो ३ बजे उक्त पिपलवृक्षमुनि तयार रहनेछ ।

सिंहदरबार  भवदीय
झण्डामुनि भुई बैठक  (सही) प्रकाशमानसिंह
प्रधान सम्पादक
का. मु. सेक्रेटरी तथा सदस्य
प्रसकमिशन

परिशिष्ट (झ)

नेपाल सरकार

## प्रेस कमिशन

सिंहदरबार
काठमाडौं, नेपाल

पत्रसंख्या  मिति
श्रीमान
महाशय,



प्रेस ( पत्रपत्रिका ) को स्थिति अध्ययन गरी त्यसको विकाश कोलागि रिपोर्ट सुझाव पेश गर्न सरकारबाट गठन भएको प्रेस कमिशनले तथ्याङ्क सङ्कलन र सुझावहरूको लागि प्रश्नावली वितरण गर्नु पत्रकारहरू र पत्रकारितासित सम्बन्धित लेखक कविहरूसित भेट छलफल गरी राय सल्लाह प्राप्त गर्नुको साथै प्रेस (पत्रपत्रिका) को वस्तुस्थितिको जानकारी हासिल गर्नु पनि आवश्यक महसुस गरेको हुनाले तपाईको प्रेस (पत्रपत्रिका) को कार्यालय कारखानाको निरीक्षण गर्न प्रेस कमिशनका अध्यक्ष र सदस्यहरू यही.. .. .. ..का दिन.. .. . .. .. ..बजेभित्र आउन लाग्नुभएको छ ।

प्रेस (पत्रपत्रिका) को व्यवसायसित सम्बन्धित सबैको राय सल्लाह, सुझाव, वास्तविक तथ्याङ्क र वस्तुस्थितिको अध्ययनको आधारमा यथासम्भव व्यापक समर्थन प्राप्त र व्यावहारिक रिपोर्ट सरकारमा पेश गर्ने प्रेस कमिशनको कार्यमा शुरूदेखि हार्दिक सहयोग गर्दै आउनुभए जस्तै यो निरीक्षण कार्यमा पनि तपाईको पूर्ण सहयोग र सद्भावनाको अभिलाषा राख्दछौं । सधन्यवाद ।

भवदीन.
(सहि) प्रकाशमासिंह
(प्रधान सम्पादक)
सेक्रेटरो तथा सदस्य
प्रेस कमिशन

परिशिष्ट (ञ)

श्री बडाहाकिम,

विषयः– प्रश्नावलीहरू बिक्रण र संकलन गरी फिर्ता पठाउनेबारे

महोदय,

सरकारद्वारा गठन प्रेस कमिशनको निर्णयमुताबिक त्यस जिल्लाको लागि.. .. .. .. .. .. ..थान प्रश्नावलीहरू यससाथ पठाएको छु । त्यस जिल्लाका प्रेस कानूनअन्तर्गत रजिष्टर भएका प्रेस पत्रपत्रिकाहरू र छापाखानाहरूका सम्पादक, प्रकाशक र प्रोप्राईटरहरू तथा पत्रकारहरू र पत्रकारितामा दिलचस्पी राख्ने विशिष्ट बुद्धिजीवीहरूमा सो प्रश्नावलीहरू वितरण गर्नुभई एक हप्ताभित्र वहाँहरूबाट सुझावहरू र भरिएको फामहरू फिर्ता प्राप्त गर्नुभई तुरुन्त गृह–सचिवालयमार्फत कमिशनमा फिर्ता पठाउनुहुन अनुरोध गर्दछु । देशमा स्वच्छ पत्रकारिताको विकाशको लागि सुझाव पेश गर्न सरकारद्वारा गठन भएको यस प्रेस कमिशनले देशका पत्रकारहरू र बुद्धिजीवीहरूको राय सल्लाह र पत्रपत्रिका तथा छापा-

खानाहरूको तथ्यांक संकलन गर्ने कार्यमा तपाईंको सहयोग अनिवार्य भएको हुनाले यसमा सक्दो सहायता सहयोग गर्नु हुन्छ भन्ने कमिशनले उम्मीद गरेको छ ।

भवदीय

(सहि) प्रकाससमानसिंह

प्रधान सम्पादक

का. मु. सेक्रेटरी तथा सदस्य

प्रेस कमिशन

परिशिष्ट (ट)

नेपाल सरकार

## गृह सचिवालय

पत्रसंख्या

सिंहदरबार, नेपाल।

मिति ०१४।१२।१

विषयः— प्रश्नावलीहरू वितरण र संकलन गरी फिर्ता पठाउनेबारे ।

श्री सबै जिल्ला गडि, गौंडा, गोश्वरा ।

उक्त विषय साथमा रहेको खामबन्दी गरिएको प्रेस कमिशनको मिति ०१४।११।२६।४ को चलानीपत्र साथको प्रश्नावलीहरूबाट बेहोरा विदित हुनेनैछ । उपयुक्त प्रेस कमिशनको पत्रबमोजिम जो गर्नुपर्ने कार्यवाही तुरुन्त गर्नु गराउनुभै लेखिएबमोजिम तथ्यांक संकलन गरी १ एक हप्ताभित्र यस सचिबालयमा पठाउने प्रबन्ध भएमा वेस होला ।

पुनश्चः त्यस जिल्लाका प्रेस कानूनअन्तरगत रजिष्टर भएको प्रेस (पत्र–पत्रिका) हरू र छापाखानाहरूको लगतको हकमा कृपया यो पत्र प्राप्त हुनासाथ तुरुन्त आ. वा. तथा टेलिफोनद्वारा यस सचिवालयमा पठाउने प्रबन्ध पनि गर्नु हुनेछ ।

बोधार्थ नक्कल प्रेषित छ ।

श्री प्रेस कमिशन, सिंहदरबार ।

(सहि) चन्द्रप्रसाद

असिस्टेन्ट सेक्रेटरी

गृहमन्त्रालय



परिशिष्ट (ठ)

नेपाल सरकार

## गृहसचिवालय

अत्यन्त जरूरी

पत्रसंख्या–

सिंहदरबार, नेपाल

०१४।११।२६

विषयः– २००७ सालदेखि यताको पत्रपत्रिकाको प्रकाशनबारे श्री उ. का ३ मेजिष्ट्रेट अफिस तथा सबै गढी, गौडा, गोश्वारालाई २००७ सालदेखि यता नेपालमा कति अखबार पत्र-पत्रिकाहरू प्रकाशित भै आफसे आफ बन्द भए, कति सरकारी प्रतिबन्धबाट बन्द भए र कति अदालती फैसलाबाट पुनः प्रकाशनमा आए, त्यसको लगत गृहसचिवालय मार्फत मेजिष्ट्रेट, जिल्ला गढी, गौंडा गोश्वराबाट प्राप्त गर्ने प्रेस कमिशनको निर्णय भएको भनो उक्त कमिशनबाट लेखी आएको हुँदा लेखिरहेको छु ।

उपर्युक्त लेखिएबमोजिम विवरणसहितको लगत प्रेस कमिशनमा पठाउनलाई कृपया यो पत्र प्राप्त भएका २ दुई दिनभित्र यस सचिवालयमा पठाइदिने प्रबन्ध भएमा प्रेस कमिशनको कार्यमा ठूलो सहयोग गर्नुभएको सम्झिइनेछ ।

बोधार्थ नक्कल प्रेषित छ ।

श्री प्रेस कमिशन, सिंहदरवार, नेपाल

(सहि) चन्द्रप्रसाद

असिस्टेन्ट सेक्रेटरी

## सम्मति–पत्र

मिति २०१५।३१.

२०१४।१०।२९ का दिन श्री ५ को सरकार, नेपालद्वारा गठित प्रेस कमिशनले माननीय विशेष न्यायाधीशज्यू कृष्णप्रसाद चापागाईंज्यूको अध्यक्षतामा २०१४।११।१२ का दिन-देखि कामशुरू गरी नेपालका पत्रपत्रिकाहरूको प्रकाशन, सञ्चालन तथा आर्थिक स्थितिको अध्ययन गरो पत्रकारिता विकाशका सुझाव, सरकारद्वारा पत्रपत्रिकालाई हुनुपर्ने सहूलियत तथा सुविधाबारे सुझाव, प्रेस सल्लाहकार समिति र राष्ट्रिय संवाद समिति विषय सुझावहरू पेश गर्ने सरकारको आदेशअनुसार पत्रकारहरूसंग भेंट छलफल, पत्रपत्रिका कार्यालय तथा छापाखानाहरूको निरीक्षण, देशका विभिन्न स्थानमा कमिशनका प्रतिनिधि-हरूको भ्रमण, पत्रकार तथा पत्रकारितामा अभिरूचि भएका महानुभावहरूबाट लिखित सुझाव लिई देशमा स्वच्छ पत्रकारिताको विकाश र सरकार तथा पत्रपत्रिकाको सम्बन्ध अझ प्रतिष्ठ पार्ने बारे सुझाव समावेश गरी हामी तपसीलमा हस्ताक्षर गर्ने सदस्यहरूले माथि

लेखिएका १७ परिच्छेद, तथा १२ परिशिष्टको १२८ पेजी रिपोट सरकारमा पेश गर्न सर्वसम्मतिबाट निर्णय गर्दछौं।

१. (हस्ताक्षर) माननीय विशेष न्यायाधीश श्री कृष्णप्रसाद बापागाईज्यू अध्यक्ष
२. (रायपत्र) संलग्न) शाही प्रेस सेक्रेटरी श्री रेणुलालसिह सदस्य
३. (हस्ताक्षर) गृहमन्त्रालय का.मु. सचिब श्री जीवनाथ लोहनी सदस्य
४. (हस्ताक्षर) श्री गोपालदास श्रेष्ठ सदस्य
५. (हस्ताक्षर) श्री मणिकलाल श्रेष्ठ सदस्य
६. (हस्ताक्षर) श्री अ.डा. रामराज पौड्याल सदस्य
७. (हस्ताक्षर) श्री प्र.सं. प्रकाशमान सिंह सेक्रेटरी तथा सदस्य

श्री

श्रीमान अध्यक्ष,
प्रेस कमिशन,
श्री ५ को सरकार,
सिंहदरबार, नेपाल।

श्रीमान,

यहाँ र अरू प्रेस कमिशनका विद्वान् मित्रहरूसँग ३ महिनाभन्दा बढी समयसम्म देशमा स्वच्छ र शुध्द पत्रकारिताको बिकाश गर्ने सम्बन्धमा काम गर्न पाउनु मैले आफ्नो अहोभाग्य सम्झेको छु।

यसले हाल श्री ५ महाराजाधिराज तथा श्री ५ बडामहारानीको औपचारिक रुस भ्रमणमा मौसूफहरूका साथ जान लागेको हुँदा यहाहरूसँग कमिशनको रिपोर्ट पेश गर्न नपाउदै बिदा माग्नुपर्दा मलाई हर्ष लागेको छैन। तर अहिलेसम्म हाम्रो यस रिपोर्ट पेश गर्ने सम्बन्धी जुनसुकै छलफलमा पनि यहाँहरूसँग मेरो सारभूत कुराहरूमा मत बिभिन्नता छ जस्तो मलाई नलागेकोले र यहाँहरूले एकमत मै पेश गर्नु हुने रिपोर्टमा वा त्यसको कुन अशमा मेरो असहमति हुने संभावना बहुतै कम देखिएकोले यहाँहरूका समक्ष सादर सधन्यबाद यो सूचना टक्र्याएको छु।

ज्जेष्ट १९, बि.सं. २०१५।

सविनय
भवदीय
द. रेणुलाल। (रेणुलालसिह)
श्री ५ महाराजाधिराजको,
प्रेस सेक्रेटरी।



# परिच्छेद–१

## १.१.१. पृष्ठभूमि

श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेवको सम्मानमा नेपाल पत्रकार संङ्घद्वारा आफ्नो ११ औं महाधिवेशनको सन्दर्भमा समस्त पत्रकारहरूको तर्फबाट २०३७ साल फागुन ६ गते एक विशेष अभिनन्दनसमारोहको आयोजना भएको थियो। श्री ५ महाराजाधिराज सरकारबाट पत्रकारहरूको समस्याबारे यथार्थ कुरा अध्ययन गरी मौसूफ सरकारका जुनाफमा प्रतिवेदन जाहेर गर्न एक शाही आयोग गठन गरिबक्सने कुरा उक्त अभिनन्दन समारोहकै अवसरमा हुकुम बक्सेबमोजिम सञ्चार राज्यमन्त्री श्री डम्बरबहादुर मल्लले उपस्थित पत्रकारहरूलाई जानकारी गराउनु भयो। राज्यको चौथो अङ्गको रुपमा रहेको पत्रकारजगत्का समस्याप्रति मौसूफ सरकारबाट अभिरुचि देखाइबक्सी निगाहपूर्वक आयोग गठन गरिबक्सने भएको कुरालाई पत्रकारजगत्ले स्वागत गर्दै मौसूफ सरकारप्रति सम्पादकीय, टिप्पणी, समाचार र लेखका माध्यमबाट सभक्ति कृतज्ञता प्रकट गऱ्यो। श्री ५ महाराजाधिराज सरकारबाट नेपाल पत्रकार सङ्घका पुनर्निर्वाचित सभापति श्री मञ्जुरत्न शाक्य तथा सङ्घको एघारौं महाधिवेशन तयारी समितिका सदस्यहरू समेतलाई बक्सेको सामूहिक दर्शनभेटको अवसरमा नेपाली पत्रकारजगत्ले पनि राजनैतिक क्षेत्रमा जस्तै नयाँ भूमिका निर्वाह गर्नु परेको सामयिक आवश्यकता तर्फ सबैको ध्यान आकर्षित गरिबक्सेको थियो। उक्त अवसरमा राष्ट्रनायक सरकार बाट पत्रकारहरूका समस्या बारे यथार्थ कुरा अध्ययन गर्नका लागि गठन गरिबक्सने आयोगमा पत्रकार सङ्घका सभापति पनि समावेश गरिने कुराको जानकारी बक्सँदै समस्त पत्रकारहरूलाई आफ्ना समस्याहरू सोही आयोगमा प्रस्तुत गर्ने निर्देशन पनि बक्स्यो। तदनन्तर २०३७ साल फागुन ११ गते श्री ५ महाराजाधिराज सरकारबाट पत्रकारजगत्का समस्या र तिनका समाधानका उपायबारे अध्ययन गरी मौसूफका हजूरमा प्रतिवेदन जाहेर गर्न देहायबमोजिमको शाही प्रेस आयोग गठन गरिबक्स्यो।

## १.१.२ गठनविधि

शाही प्रेस आयोगको गठनविधि यसप्रकार छः–

१. सर्वोच्च अदालतका माननीय अतिरिक्त न्यायाधीश श्री त्रिलोकप्रताप राणा अध्यक्ष